भए। अग्निको ज्वालाले सारा विश्वलाई डढ़ाउन सक्छ, तर पतिव्रता नारीले अग्निलाई पनि डढ़ाउन सक्छिन्। महापतिव्रता नारीसँग अग्नि पनि डराउँदछन्।

श्रीकृष्ण ती गोपिनीहरूलाई भन्नुहुन्छ—'आफ्ना घर जाओ। त्यस महान् पतिव्रता धर्मलाई छोड़ेर यहाँ किन आएका हौ ? आफ्ना पति र सन्तानलाई भगवान्को अंश मानेर उनको प्राणपणबाट सेवा गऱ्यौ भने घर बसेर पनि तिमीहरूको कल्याण हुनेछ।'

कृष्ण भन्नुहुन्छ—'मेरो संयोगको अपेक्षा मेरो वियोगमा तिमीहरूलाई कैयौं गुना सुख पाइनेछ। वियोगावस्थामा मेरो राम्ररी ध्यान, स्मरण हुनेछ र प्रेम पनि धेरै पुष्ट हुनेछ। संयोगावस्थामा दोष-दर्शन आरम्भ हुन्छ, वियोगावस्थामा गुणहरूको स्मरण, चिन्तन भइरहन्छ, तिमीहरूको प्रेम शुद्ध रहेछ भने मेरो स्वरूपलाई पाउन सकौला। आफ्ना पति र सन्तानहरूलाई छोड़ेर यहाँ दौड़िएर आउनु ठीक छैन र उचित पनि भएन।'

ध्यानको आरम्भावस्थामा साधकको चित्त-चञ्चल हुनाको कारण उसलाई चारैतर्फ अँध्यारै अँध्यारो देखिन्छ, ईश्वररूपी प्रकाश होइन। यदि निराश नभएर प्रयत्न गर्दै रहे भने अन्धकार चिरेर प्रकाश अवश्य आउनेछ।

भगवान्ले गोपिनीहरूलाई घर फर्कने आज्ञा दिनुभयो तब उनलाई चित्त दुख्यो। आज भगवान् यस्तो निष्ठुर किन भइरहनुभएको छ ? उनीहरूले भगवान्लाई सोधे आज यस्तो तपाईं किन गरिरहनुभएको छ ? भगवान्ले उनलाई भन्नुभयो—'देहको स्वामी पति हो। यस शरीरको कोही पिता होला, पति होला तर आत्माको पिता-पति कोही हुँदैन। आत्माको धर्म हो प्रभुसँगको मिलन। यस प्रकार भगवान्ले उनलाई देह-धर्मको उपदेश दिनुभयो।'

तब गोपिनीहरू प्रभुलाई आत्मधर्मको उपदेश दिन थाले, 'तपाईं आज यस्तो निष्ठुर किन हुनुभएको छ ? तपाईंले गीतामा भन्नुभएको छ जुन पनि भावले जसले तपाईंको सेवा पूजा गर्दछ, त्यससँग यहाँको भेट हुनेछ। तब फेरि अब हामीलाई किन घर फर्काइरहनुभएको छ। तपाईं पतितपावन, दयासागर हुनुहुन्छ। बड़ो श्रद्धासाथ हामी तपाईंको चरणमा आएका थियौं। तपाईं यस्तो कठोर किन हुनुभयो ? हामीले संसारका सबै विषयहरूलाई त्याग गरेर तपाईंका चरणको शरण लिने अटल निश्चय गरेका छौं।'

सबै विषयहरूलाई मनबाट त्याग गरेर भगवान्को चरणमा जाने जीव मात्र गोपी हो।

**सन्त्यज्य सर्वविषयांस्तवपादमूलम्।**

'त्यक्त्वा' शब्दले विषयहरूको शारीरिक त्याग जनाउँछ र 'सन्त्यज्य' शब्दले विषयहरूको मानसिक, असाधारण त्याग बोध गराउँछ।

हामी सबै विषयहरूलाई शारीरिक र मानसिक त्याग गरेर तपाईंका चरणमा आएका छौं। तपाईंका निमित्त हामीले सर्वस्वको त्याग गऱ्यौं। सांसारिक विषयहरूको विवेकपूर्वक त्याग गरेर

तपाईंसँग भेट गर्न हामी आएका हौं। हाम्रो उपेक्षा नहोस्। हाम्रा मनमा तपाईंका सिवाय अरू केही पनि शेष छैन।

जसका मनमा ईश्वरका सिवाय अरू केही पनि छैन, उही गोपी हो। यस संसारका विषयहरूको जबसम्म मनबाट त्याग हुँदैन, भक्ति हुनै सक्दैन।

## सच्चा त्याग कबीर का, मन से दिया उतार।

शारीरिक त्याग मात्र जीव तुरुन्त गर्न सक्छ तर मानसिक त्याग गर्नु बड़ो कठिन छ। मानसिक त्याग नगरेर केवल शारीरिक त्याग मात्र गऱ्यो भने पनि दम्भी हुने छ। मानसिक त्याग चाहिँ मुख्य हो। शरीर जहाँ भए पनि होस् तर मनलाई ईश्वरबाट कहिल्यै टाढ़ा हुन नदेऊ।

वृत्त-अवृत्त नाउँ गरेका दुइ साधुहरूका दृष्टान्तलाई हेरौं। ती दुवै यात्रा गरिरहेका थिए। प्रयागराजको दिशातर्फ गइरहेका थिए। जन्माष्टमीको दिन वेणीमाधवको दर्शन गर्न खोजेका थिए। हिँड्दा-हिँड्दा रात पऱ्यो, पानी पर्न थाल्यो, थाकी पनि सकेका थिए। एउटा वेश्यागृह देखेर अवृत्तले भन्यो—'ठूलो पानी परिरहेछ, अँध्यारो पनि भयो। बाटो देखिँदैन र म थाकी पनि सकेको छु। त्यसकारण म त आज यहीं बस्छु। तिमी अगाड़ि जान्छौ भने जाऊ।'

वृत्तले ठान्यो शायद यसको मन भाँड़ियो, उसले भन्यो म यहाँ रोकिन सक्तिनँ। ऊ हिँड़िहाल्यो र प्रयागराजको मन्दिरमा वास बस्यो।

अवृत्त वेश्यागृहमा वास बसेको थियो तर अब उसलाई पछुतो भयो। ऊ आफैंले आफूलाई धिक्कार्न थाल्यो—धिक्कार छ मलाई। म कस्तो क्षुद्र अभागी रहेछु जन्माष्टमीका दिन कृष्णको मन्दिरमा वास बस्न छोड़ेर यहाँ बस्न पुगें। मेरो साथी वृत्त कति भाग्यशाली रहेछ। यस समयमा प्रभुका मुखारविन्दको दर्शन गरिरहेको होला। मन्दिरमा उत्सव भइरहेको होला। वैष्णवहरू प्रभुको दर्शन गरिरहेका होलान्। त्यहाँ भजन-कीर्तन-आरती-वन्दना भइरहेको होला। कति भव्य र पवित्र होला त्यो दृश्य। यस प्रकार अवृत्त वेश्यागृहमा थियो तर उसको मन भने वेणीमाधवका नजीकमा थियो। बड़ो तन्मयतासाथ ऊ मनैमनले जन्माष्टमीको पवित्र प्रसङ्ग हेरिरहेको थियो।

उता मन्दिरमा बसेको वृत्त पनि पछुतो गरिरहेको थियो। ऊ विचार गर्न थाल्यो—'म यतिका सारा कष्ट सहेर यहाँ के खानलाई आएँ ! त्यहाँ मेरो साथी सुन्दरी वेश्यासँग हाँसखेल गर्दो होला, म यहाँ भीड़मा मिचिइरहेछु। कति भाग्यशाली रहेछ मेरो मित्र।' उसको जीव उत्सवमा लाग्दै लाग्दैनथ्यो। उसलाई त्यस वेश्याकै दृश्य आइरहेको थियो। उसको शरीर थियो माधवको मन्दिरमा र मन भने वेश्याकहाँ।

अवृत्तलाई मोक्ष मिल्यो र वृत्तलाई नरक। अवृत्तलाई लिन भनी भगवान्‌ले विमान पठाउनुभयो, किनभने तनबाट ऊ वेश्यागृहमा थियो तर मनबाट ऊ वेणीमाधवकहाँ पुगेको थियो। वृत्त थियो मन्दिरमा तर वासना भने सुखको सोचमा थियो र उसलाई नरकमा जानुपऱ्यो।

गोपिनीहरू भगवान्सँग भन्दछन्—'पतिकहाँ त्यो स्त्री जान्छे जसको मनमा विकार-वासना अझै शेष छ। विकार-वासना त्यागी भने मात्र ऊ प्रभुका नजिक आउन पाउँछे। हामी निर्विकारी छौं त्यसकारण तपाईंकहाँ आएका हौं।'

भगवान्—'निर्विकारिताको तिमीहरूकहाँ के प्रमाण छ ?'

गोपिनीहरू—'तपाईं हुनुहुन्छ प्रमाण, किनभने हाम्रा हृदयमा तपाईं मात्र वास गर्नुभएको छ।'

## को देवो यः मन साक्षी।

जो मनलाई साक्षीरूपमा देख्छ, त्यो ईश्वर हो। उसले मनको भाव-कुभाव जाँच्छ। यदि हामीमा केही विकार छ भने त्यो यहाँबाट लुकाएर लुकाइन्न। तपाईं *'किल बन्धुरात्मा'* हुनुहुन्छ। हामी निर्विकारी छौं। अब एउटै इच्छा, एउटै वासना बाँकी छ तपाईंसँगको मिलन।

ईश्वर परिपूर्ण वैराग्य, प्रेम-भक्ति र ज्ञान माग्नुहुन्छ, उहाँलाई केही पनि निर्गतिलो र अपूरो स्वीकार्य छैन।

'पतिसेवाको जो आज्ञा हामीलाई तपाईंले दिनुभयो, त्यो शिरोधार्य छ। हाम्रो शरीरका पति घरमा हुनुहुन्छ तर आत्माका पति तपाईं हुनुहुन्छ। तपाईं पतिमा ईश्वरको भावना राखेर उनको सेवा गर्नलाई भन्नुहुन्छ तर पतिमा ईश्वरको भावना त्यस स्त्रीलाई आवश्यक छ जसले तपाईंलाई देख्न पाउँदिन। हामीले तपाईंको प्रत्यक्ष दर्शन गरेका छौं त्यसकारण अरू कुनै व्यक्तिमा ईश्वरको आरोप गर्नुपर्ने कुनै प्रश्नै उठ्दैन।'

भावना, कल्पना, आरोपण वियोगावस्थामा गर्नुपर्छ, संयोगावस्थामा होइन। परमात्माको या कुनै व्यक्तिको प्रत्यक्ष दर्शन पाइएन भने ऊसँगको सम्बन्धित मूर्ति, तस्वीर या अन्य कुनै वस्तुमा उसको दर्शन हामी गर्ने गर्दछौं।

'हामीले तपाईंको प्रत्यक्ष दर्शन गरेका छौं, त्यसकारण तपाईंलाई छोड़ेर अन्यमा भावना किन गरौं ? अरू पति को हो ? पाति इति पतिः। मृत्युको भयबाट जसले रक्षा गर्दछ त्यही पति हो। मृत्युको जालबाट मुक्त गराउने त्यही पति हो। यसो तर एकमात्र पति तपाईं हुनुहुन्छ। जीवमात्रको सच्चा पति ईश्वरै हो। तपाईं सबैका अनन्य स्वामी हुनुहुन्छ। त्यसकारण हामीले सोची-सम्झीकनै तपाईंका चरणको आश्रय लिएका छौं।'

'नाथ एक प्रश्न गरौं ?' प्रभुले अनुमति दिनुभयो।

गोपिनीहरू—'पतिव्रता नारीको जो धर्म तपाईंले भन्नु भयो, त्यसको फल के हो ?'

कृष्ण—'मन शुद्ध हुन्छ।'

गोपिनीहरू—'मन शुद्ध भएपछि के पाइन्छ ?'

कृष्ण—त्यस 'शुद्ध मन' भएको जीवलाई परमात्मा पाइन्छ, धर्मको पालन चित्त शुद्धिका निमित्त र चित्त-शुद्धिको फल हो प्रभु-मिलन।

गोपिनीहरू—'तपाईंलाई हामीले भेटिहाल्यौं भने फेरि हामी त्यस भुँवरीमा किन परौं ? तपाईंनै हाम्रो सच्चा पति हुनुहुन्छ। हामीलाई नत्याग्नुहोस्।'

कृष्ण—'मैले पतिव्रता नारीको दृष्टान्त सुनाएँ, तिमीहरूले पनि घरमा बसेर कुटुम्बीजनहरूको सेवा गर्दागर्दै त्यही सिद्धि पाउन सक्छौ।'

पुरुषको अपेक्षा नारीका निमित्त सिद्धि प्राप्त गर्न ज्यादा सजिलो छ। घरका प्रत्येक जीवलाई ईश्वर रूप मानेर आफ्नो तन-मन-धन समर्पण गरिदिनुपर्छ, शास्त्रले यहाँसम्म भनेको छ पतिले धनार्जन गर्दा गरेको पापमा स्त्रीको कुनै भाग हुन्न तर पतिको पुण्यबाट उसलाई आधाभाग पाइन्छ। नारीलाई पतिको पुण्यबाट भाग कहिले पाइन्छ ? यदि स्त्रीले आफ्ना पति र सन्तानहरूलाई परमात्माकै स्वरूप मानेर उनको सेवा गरेमा उसलाई पतिका पुण्यको आधा भाग पाइन्छ।

स्त्री-धर्म सर्वश्रेष्ठ हो। उसले आफ्ना पति र सन्तानहरूको सेवा गरोस्। सन्तानहरूलाई धर्मको शिक्षा देओस्, त्यही उसको सबैभन्दा ठूलो सेवा हो, कथा आख्यानहरूमा बसिरहने होइन। पतिसेवाले चित्त-शुद्धि हुन्छ र चित्त शुद्धिबाट परमात्माको प्राप्ति।

गोपीनाथहरू—'नाथ, यस्तो नसंझनुहोस् म मात्र कथा भन्न सक्छु। हामी पनि भन्न सक्छौं। पहिलेका जन्महरूमा हामीले पनि सबै कुरा गरेका छौं। कथा-आख्यान, कीर्तन-भजन सुन्दा-सुन्दा हामी थाक्यौं र हार्‍यौं तैपनि तपाईंको एक झल्को दर्शन पाइएन। त्यसकारण हामीले ऋषिहरूको चोला त्यागेर गोपिनीहरूको रूप धारण गरेका छौं। तपाईंले तर धेरै कुरा सुनाउनुभयो। अब तपाईंले हाम्रो पनि सुन्नुहोस्।'

एक पतिव्रता नारीका निमित्त आफ्नो पतिको वियोग असह्य थियो। ऊ पतिसँग-सँगै बस्न आग्रह गर्ने गर्थी। संयोगवश पतिलाई परदेश जाने अवसर आयो। ऊ पनि पतिका साथ जान भनेर तयार भई। 'मलाई छोड़ेर नजानुहोस्। नाथ, मलाई पनि सँगै लैजानुहोस्।'

पति उसलाई संझाउन थाल्यो—'देवी, म कामकाजका निमित्त बाहिर गइरहेछु।' त्यहाँ तिमीलाई कसरी लैजाऊँ ? मेरा वियोगमा नछटपटिनका लागि एक उपाय छ। घरमा मेरो त्यो चित्रलाई दृढ़भावले सेवा-पूजा गर्दै रहनू र संझनू म घरमै छु। जहिले पनि मेरो संझनाले दुःख दिन लाग्यो भने त्यस चित्रको दर्शन-पूजन गर्नू। त्यस पतिव्रता स्त्रीले बड़ो तन्मयतासाथ पतिको तस्वीरको पूजा गर्न थाली। दुइ महीनापछि पति फर्किएर आयो। त्यस बखत त्यो नारी पतिको चित्रको सेवामा लीन थिई।

अब प्रभु, हाम्रो प्रश्न यो हो पतिको स्वर सुनेपछि त्यो स्त्रीले पतिको सेवा गरिरहने हो वा पतिको स्वागतार्थ दगुरेर ढोकामा पुग्ने हो ?

श्रीकृष्ण—'हरे ! यो पनि कुनै सोध्ने कुरा हो ? त्यो दगुरेर ढोकामा जानेछ।'

गोपीहरू—'किन ?'

श्रीकृष्ण—'चित्र कागजको एक टुक्रा हो, तर ढोकामा साक्षात् पतिदेव आएका छन्।'

गोपीहरू—'नाथ हामीले जित्यौं। तपाईंले सधैं न्याय गर्नुभएको छ। हाम्रो पनि यही भनाई छ जब परमात्मा भेटिनुभएको छ भने फेरि लौकिक पतिसँग हाम्रो के लिनुदिनु छ। लौकिक पति त्यस तस्वीरमा खिंचिएको पति जस्तै हो। प्रत्येक जीवका प्रति निःस्वार्थतापूर्वक एकनास प्रेम गर्ने सच्चा पति जब हामीलाई भेटिएका छन् भने त्यो लौकिक पतिलाई आफ्नो पारौं ? लौकिक व्यक्तिको प्रेममा मात्रै सदा कपट र स्वार्थ हुन्छ।'

तर यो कुरा आजकलका साधारण नारीका निमित्त अनुकरणीय छैन। जबसम्म परमात्मासँग साक्षात्कार हुन पाउँदैन तबसम्म पतिमै परमेश्वरको भावना गर्नुपर्छ। परमात्माको प्रत्यक्ष दर्शन भएपछि पतिमा प्रभुको भावना नभएमा पनि कुनै विशेष बाधा पर्दैन। भावना वियोगमा गर्नुपर्छ, संयोगमा होइन।

गोपिनीहरू—'नाथ, हामीले स्त्रीत्वसहित सर्वस्व त्याग गरेका छौं र तपाईंको शरण परेका छौं। जो न स्त्री छ न पुरुष, यस्तो शुद्ध चेतन आत्माको विशेष कुनचाहिँ धर्म हुन सक्छ ? उनको न कुनै स्त्री धर्म हुन्छ न कुनै पुरुष-धर्म।'

नाथ, जो जीव स्त्री होस्, उसका निमित्त नारी-धर्मको पालन गर्नु आवश्यक छ, हामी शुद्ध चेतन आत्मा हौं। आत्माको धर्म हो प्रभु-मिलन। जबसम्म प्रभु भेटिनुहुन्न, तबसम्म आफ्नो-आफ्नो धर्मको पालन गर्नुपर्छ। धर्मको पालनबाट मन शुद्ध हुन्छ, धर्म पालनबाट पाप नासिन्छ। पाप नासिएपछि मन शुद्ध हुन्छ, मन शुद्ध भएपछि परमात्मासँग साक्षात्कार हुन पाइन्छ।

तपाईं तर प्रत्यक्ष परमात्मा हुनुहुन्छ। तपाईं हामीलाई भेटिनुभएको छ। हामीलाई आफ्नो सच्चा पति पाइएको छ। अब हामीलाई स्त्री-धर्म पालनको कुनै आवश्यकतै छैन। अब हामीलाई भित्रबाट तपाईंको भावना गर्नु छैन। जबसम्म तपाईंको दर्शन भएको थिएन, हामी अरूमा तपाईंको भावना गर्दै रहन्थ्यौं। अब हामी तपाईंलाई छोड़ेर कहाँ जाउँ र किन जाऊँ ? अब तपाईंलाई छोड़ेर जड़ धर्मको सहारा किन खोजौं।

धर्म साधन हो। साध्य तर स्वयं हुनुहुन्छ। हामीले आजसम्म स्वधर्मको पालन गऱ्यौं। त्यसैले तपाईंसँग साक्षात्कार हुन पाइएको छ, हामी तपाईंका चरणका दासी हौं। नाथ, अब निष्ठुर भएर हाम्रो त्याग नगर्नुहोस्। हामीलाई आफ्नो गराउनुहोस्।

भगवान् भन्नुहुन्छ—'यदि मलाई तिमीहरू आफ्नो सच्चा पति मान्दछौ भने मैले भनेको मान्नुपर्छ। जाओ, घर गएर पति-सन्तानको सेवा गर, यदि लौकिक पति स्वार्थी छ भने पनि मेरो आज्ञा छ उसैको सेवा गर।'

गोपिनीहरू—'हजारौं जन्महरूसम्ममा यी सबै भोगेर हामी थाकिसकेका छौं। अहिले जब तपाईं ईश्वर भेटिनुभएको छ भने हामी फिर्ता किन जाऔं ? तैपनि अब तपाईंको आज्ञा छ भने जानुपर्ला नै, तर आफ्नो लौकिक पतिको सेवा गर्नका निमित्त मन पनि चाहियो नि। अब मन चैं तपाईंले चोरिदिनुभयो। हाम्रो मन फर्काइदिएका खण्डमा घर गएर लौकिक पतिको सेवा गर्नेछौं। हाम्रो चित्त फर्काइदिनुहोस्।'

जसले आफ्नो मन ईश्वरलाई दिन्छ त्यो ईश्वरसँग तदाकार भइहाल्छ। ईश्वर स्वयं पनि त्यस मनलाई फर्काउन सक्नुहुन्न।

श्रीकृष्ण—'जसको चित्तको चोरी म गर्छु उसको त्यो चित्त चैं ममा एकाकार भइहाल्छ। त्यसलाई म फर्काउन सक्दिनँ। तिमीहरूका मनको पनि यही दशा हो।

दूधमा मिसिएको मिश्री कहिल्यै छुट्टिन सक्छ ? कुनै प्रकारले त्यसलाई छुट्याउन सकिन्न।'

श्रीकृष्ण—'तिमीहरूको मन मसँग कहिले र कसरी मिल्न गो त्यो म जान्दिनँ। त्यसकारण कसरी फर्काऊँ ?'

गोपिनीहरू—'तब फेरि मनविना आफ्ना घर कसरी फर्कन सक्छौं ? तपाईं मन दिन सक्नुहुन्न भने हामी पनि घर जान सक्दैनौं।'

पादौ पदं न चलतस्तव पादमूलाद्।
यामः कथं व्रजमयो करवाम किं वा॥

हाम्रा गोड़ा तपाईंका चरणकमललाई छोड़ेर एक कदम पनि पछि सर्न तयार छैनन्। तब हामी फर्क्यौं भने पनि मनका विना वहाँ हामीले के गर्ने ?

प्रभु—'मैले योगशक्तिद्वारा तिमीहरू सबैलाई उठाएर वहाँ पुऱ्याइदिएँ भने ?'

गोपिनीहरू—'हाम्रा शरीरलाई घर पुऱ्याइदिनुहोला तर मन साथै आउने छैन, त्यसकारण हामीले वहाँ के गर्ने ?'

हाम्रो मन तपाईंसँग मिल्न गएको छ। हामी पनि तपाईंको स्वरूपसाथ तदाकार हुन चाहन्छौं।

जहाँ मन होला त्यहाँ जीवात्मा पनि होला। मन ईश्वरसँगै गएर मिल्ला। संसारको जड़-पदार्थमा मनको लय हुन सक्दैन। मन र संसार विजातीय हुन्, मन र ईश्वर सजातीय। सजातीयसँगै सजातीय मिल्न सक्छ। मन जड़ होइन, चेतन हो, त्यसकारण त्यो चेतन परमात्मासँगै गएर मिसिनेछ। मन ईश्वरमै स्थिर हुन सक्छ। यसै कारणले ज्ञानीहरू आफ्नो मन ईश्वरलाई दिन्छन्। मन कोही स्त्री या पुरुषलाई होइन, केवल श्रीकृष्णलाई मात्र दिइनेछ। मन जहाँ मिल्नेछ वहाँ आत्मा पनि मिल्न जान्छ।

'नाथ, हाम्रो मन तपाईंसँग गएर मिलेको छ। हामी तपाईंका निमित्त बाँचिरहेछौं। तपाईंलाई छोड़ेर जान हामीलाई इच्छै छैन।'

प्रभु—'म तिमीहरूको प्रेम जान्दछु र पनि आज चैं आफ्ना-आफ्ना घर फर्किएर जाओ।'

गोपिनीहरू—'अब हामी कहिल्यै जान सक्दैनौं चाहे किन प्राणै नजाओस्।'

अब प्रभु निरुत्तर जस्तै हुनुभयो। उहाँले सोध्नुभयो, 'के इच्छा छ तिमीहरूको? के स्वागत गरूँ तिमीहरूको?'

गोपिनीहरू—'नाथ, हुन्छ अब केवल आफ्नो अधरामृतको दान दिनुहोस् जसले गर्दा तपाईंसँग वियोग हुनै नसकोस्। हामीलाई नित्य संयोगको दान चाहिन्छ।'

गोपिनीहरूले अधरामृतको माग गरे।

आरम्भमै भनिएको छ भागवतमा समाधि भाषाप्रधान छ, लौकिक होइन। अधरामृतको पनि विशिष्ट अर्थ छ।

पृथ्वीको एक नाम हो धरा
धरती इति धरा
धरायाः अमृतं धरामृतं
धरामृतं न भवति इति अधरामृतं।

पृथ्वीलाई धरा भन्दछन् किनभने सबैको धारण पोषण गर्दछिन्। पृथ्वीको अमृत-धरामृत हो। जो यस पृथ्वीको छैन, त्यस्तो अमृत अधरामृत हो। अधरामृतको अर्थ भयो प्रेमामृत र ज्ञानामृत। जुन अमृत कहिल्यै नाश हुन पाउँदैन, त्यो प्रेमामृत र ज्ञानामृत मात्र हो।

'हे नाथ! हे प्रभु, हामीलाई त्यस ज्ञानामृतको दान गर्नुहोस् जसलाई पाएर ईश्वर तपाईंबाट पृथकता द्वैतको भाव नहोस्। यस्तो ज्ञान दिनुहोस् तपाईंसँग हामीले कहिल्यै छुट्टिनु नपरोस्।'

जबसम्म अधरामृत-प्रेमामृत-ज्ञानामृत पाईंदैन तबसम्म हृदयमा अग्नि बलिरहन्छ। त्यसकारण यस्तो ज्ञान दिनुहोस् जो सबैमा हामी तपाईंकै दर्शन गरिरहन पाऊँ।

प्रत्येकमा ईश्वरको अस्तित्व छ, यस्तो मानेर व्यवहार गर्‍यौं भने सारा जगत् गोकुल बन्ने छ, वैकुण्ठ बन्नेछ।

## परस्परदेवो भव।

गोपिनीहरूलाई सांसारिक सुखहरूको कुनै चाख थिएन। यी सबै लौकिक सुखहरूलाई त्यागेर आएका थिए। उनको मात्र लौकिक अमृत-अधरामृतको होइन, अधरामृत-अलौकिक अमृतको हो।

'नाथ, म यस्तो ज्ञानामृत चाहन्छु जसद्वारा हामी दुवैको कहिल्यै वियोग हुन नपाओस्, नित्य संयोग मात्र होस्। तपाईंबाट टाढ़ा भयौं भने फेरि माया टाउकामा घोड़ा चढ्न आइहाल्नेछ।'

तपाईंले यस्तो ज्ञानामृत दिनुहोस् जसले तपाईंको स्वरूपबाट नित्य संयोगकै मात्र अनुभव भइरहोस्। तपाईंको वियोग करुणतम दुःख हो र तपाईंको संयोग चरम सुख।

प्रभुले भन्नुभयो—'नित्य संयोगरूप अधरामृत दिने-नदिने मेरो इच्छामा निर्भर गर्छ। यस्तो दान तिमीलाई दिन चाहन्नँ। तिमीलाई अधरामृत दिइनँ भने ?'

सखीहरू—'धेर फुर्ति नदेखाउनुहोस्। अन्तिम उपाय हाम्रो हातमा पनि छ। हामी तपाईंलाई आफ्ना निमित्त होइन तर तपाईंको कीर्ति कलङ्कित नहोस् भनेर मनाइरहेछौं। तपाईंको कीर्तिको वृद्धिका निमित्त हामी तपाईंसँग प्रार्थना गरिरहेछौं। यदि हामीलाई नित्य संयोगरूप अधरामृत दिनुहुन्छ भने तपाईंकै प्रतिष्ठा बढ्ने छ। अन्यथा हामी विरहाग्निबाट शरीरलाई भस्मीभूत गरिदिनेछौं।'

हामीले सुनेका छौं मृत्युको अन्तिम पलामा जसको चिन्तन गरिन्छ, उही उसले भेट्टाउँछ। शास्त्रानुसार अन्तकालमा जसको स्मरण गर्दै देहत्याग गरिन्छ, उसैमा जीव लीन हुन्छ। हाम्रा मनमा अन्य कोही पनि छैन। हामी आफ्नो अन्तिम साससम्म तपाईंकै स्मरण, ध्यान, चिन्तन गर्दछौं र तपाईंको नाउँ जप्दै प्राणत्याग गर्नेछौं। त्यसकारण तपाईं हामीलाई भेटिनु हुनेछ, हामीले बाँचुञ्जेलसम्म तपाईंलाई भेट्न सकेनौं भने पनि, मरेपछि पाउनेछौं, तर मानिसले के भन्लान्, तिनीहरूले भन्नेछन् कृष्ण कति निष्ठुर हुनुहुँदो रहेछ, गोपिनीहरूले विरहाग्निमा सल्किएर प्राण त्यागिदिए र पनि उहाँले कृपा गर्नुभएन, ती गोपिनीहरूको प्रेम हार्दिक थियो, तर कृष्ण ढुङ्गाको छाती भएका, कठोर हुनुहँदो रहेछ।

नाथ, प्राण त्याग गर्नमा हामीलाई केही आपत्ति छैन तर हामी चाहन्छौं तपाईंको अपकीर्ति नहोस्। यसैले हामी तपाईंलाई मनाइरहेछौं।

प्रभु, तपाईं सर्वत्र, सर्वव्यापी हुनुहुन्छ, अतः तपाईंसँग भेट हुन्यैछ। ज्ञानमार्गमा ज्ञानको प्राप्ति छ र भक्तिमार्गमा भक्तिको, तर हामी यो चाहँदैनौं जो तपाईंको जगत्मा हाँसो होस्।

गोपिनीहरूको यो वचन सुनेर श्रीकृष्णले हार मान्नुभयो। यसै कारणले गोपिनीहरूका ती वचनहरूलाई महाप्रभुजीले जयकार गर्नुभएको छ।

## तासां वाचो जयन्ति हि।

भगवान्को पराजय न कहिल्यै भयो न होला तर गोपिनीहरूका साथको कुराकानीमा गोपिनीहरूको विजय भएको छ।

यो जीव र ईश्वरको वार्तालाप हो। जीवको परीक्षा गरेपछि मात्र उहाँले अपनाउनु हुन्छ। गोपिनीहरूको हर प्रकारले परीक्षा गरेपछि मात्र श्रीकृष्णले उनलाई अधरामृत, दिव्यरस, अद्वैत रसको दान दिनुभयो।

प्रभुले विचार गर्नुभयो यी गोपिनीहरूको प्रेम सच्चा छ। यदि म आज यिनलाई पन्छाएर हटाइदिऊँ भने प्राण त्याग गर्ने छन्। प्रभुलाई विश्वास भयो जीव शुद्धभावले मलाई भेट्न आएको छ। त्यसैले उहाँले अपनाउनुभयो।

प्रभुले एकसाथ अनेक स्वरूप धारण गर्नुभयो। जति गोपिनी थिए, त्यति स्वरूप बनाउनुभयो र प्रत्येक गोपिनीका साथ एक-एक स्वरूप भएर रासको प्रारम्भ गर्नुभयो।

अष्टसखीहरू सेवामा उपस्थित थिए। हजारौं जन्मको विरही जीव आज प्रभुका सम्मुख उपस्थित हुन सकेको छ, प्रभुले हरेक गोपीका साथ छाती लगाएर प्रगाढ़ आलिङ्गन गर्नुभयो। गोपीहरूलाई, शुद्ध जीवहरूलाई परमानन्दको प्राप्त भयो।

जीव आज ईश्वरमय भयो। दुवै एक भए। यस मिलनबाट जीव र ईश्वर दुवैलाई आनन्द भयो।

गोपिनीहरू कृष्णमय, भगवान्मय भए। सबैले हातमा हात मिलाएर नाच्न थाले।

यो ब्रह्मसँग जीवको मिलन भएको छ। यसप्रकार अद्वैत सिद्धान्तका आचार्य शुकदेवजीले रासलीलामा अद्वैतको वर्णन गर्नुभएको छ।

रासमा साहित्य, सङ्गीत र नृत्यको समन्वय हुन्छ, यस रासलीलामा कामको अंशमात्र पनि छैन। देव, गन्धर्व,नारद आदिले पनि आकाशबाट यस लीलालाई हेरे। हेर्दा-हेर्दै ब्रह्माजी सोच्न थाले, कृष्ण र गोपिनीहरू निष्काम छन्, तैपनि देहभान बिर्सिएर यस प्रकार पराई नारीसँग लीला गर्नु शास्त्र मर्यादाको भङ्ग हो। कृष्णावतार धर्म मर्यादा-पालनका निमित्त हो, स्वेच्छाचार गर्नलाई होइन। ब्रह्माजी रजोगुणका प्रतिष्ठाता देव हुन्। जसको आँखामा रजोगुण छ, उसले जतातत्तै त्यस्तै देख्छ। ब्रह्मा सशङ्कित भए।

श्रीकृष्ण यता सोचिरहनुभएको छ 'यी बूढ़ालाई धर्म मैले सिकाएको थिएँ र अब आज उनी मलाई सिकाउन खोजिरहेछन्।' ब्रह्मा यो जान्दैनन् यो रासलीला धर्म होइन, धर्मको फल हो।

प्रभुले एउटा खेल अझै रच्नुभयो। सबै गोपिनीहरूलाई आफ्नो स्वरूप दिनुभयो। अब कृष्ण-कृष्ण देखापर्न थाले। गोपिनी त्यहाँ थिएनन्। सबै पिताम्बरधारी कृष्ण छन् र एक-अर्कासँग रास खेलिरहेछन्। रमा रमेशो।

ब्रह्माजीले अब मानिलिए 'त्यो स्त्री-पुरुषको मिलन होइन। श्रीकृष्ण गोपीरूप हुनुभएको छ। ब्रह्माजीले कृष्णलाई प्रणाम गर्नुभयो।'

रासविहारीलालको जय।

त्यो विजातीय तत्त्वको, स्त्रीत्व र पुरुषत्वको होइन, अंश र अंशीको मिलन हो। आज गोपिनीहरू श्रीकृष्णमय, प्रभुरूप बने। ब्रह्मरूप भएपछि जीवको स्वत्व कहाँ रह्यो ? ब्रह्माजीले माफी माग्नुभयो।

फेरि जति गोपिनीहरू थिए त्यति स्वरूप प्रभुले धारण गर्नुभयो र सबै गोपिनीहरूलाई दिव्यानन्दको दान दिनुभयो।

यदि यस लीलामा कामको हेतु हुँदो हो तब त्यो बन्दकोठामा गरिन्थ्यो तर यो खुला मैदानमा भएको थियो।

यदि यस लीलामा लौकिक कामाचार हुँदो हो तब देवगण यसलाई हेर्न आउने थिएनन्।

व्रजमा रासलीलामा एघार वर्षभन्दा कम अवस्थाका केटा-केटीहरू भाग लिन्छन्, किनभने यो उमेरभन्दा माथिका केटा-केटीहरूमा कामविकारको आरम्भ हुनथाल्दछ।

शक्तिका साथ-साथ कामवृत्ति पनि बढ्दै जान्छ। मनमा काम जाग्नासाथ रासबिहारी श्रीकृष्णको ध्यान गऱ्यौ भने काम नष्ट हुनेछ। कामलाई मार्ने अरू कुनै उपाय छैन।

गोपिनीहरू चाहन्छन् श्रीकृष्णले उनका शिरमा हात राखेर आशीर्वाद देऊन् जसबाट कामको नाश भइहालोस्।

ईश्वरको कृपा भएपछि लौकिक काम, रति पतिको नाश हुनेछ।

**तन्नो निधेहि करपङ्कजमार्तबन्धो तप्तस्तनेषु शिरस्सु च किङ्करीणाम्।**

पुरुषत्व अभिमान र अहंको सूचक हो। ईश्वरको घरमा पुरुष अर्थात् अभिमानको कुनै स्थान छैन। जो जीव गोपीभाव-नम्रतासँग जान्छ, वहाँ उसलाई प्रवेश पाइन्छ।

नारदजी अफसोस गर्न लाग्नुभो कि म पुरुष-रूपमा आउनाको साटो स्त्रीरूपबाट आएको भए मलाई रास-रसको प्राप्ति भइहाल्थ्यो। नारदजीलाई के थाहा पुरुष 'एक पुरुषोत्तम, और सब व्रजनारी।'

यत्तिकैमा राधाजीले नारदजीको निदाउरो शरीर देखिन्। वृन्दावनकी अधीश्वरी राधिका यो चाहन्नथिन् वृन्दावनका कुनै पनि अतिथिलाई कुनै प्रकारको कष्ट या दुःख होस्। उनले नारदजीसँग कारण सोधिन्।

नारद—'मलाई श्रीकृष्णसँग रास खेलेर गोपिनीहरूको जस्तो आनन्द पाउनुपऱ्यो।'

राधा—'तपाईंले राधाकुण्डमा स्नान गर्नुभयो भने रासलीलामा प्रवेश पाउनु हुनेछ।'

राधाकुण्डमा स्नान गरेपछि नारद नारदी हुनुभयो। उहाँले विचार गर्नुभयो यदि परमात्मा भेटिनुहुन्छ भने नारी बन्नमा के आपत्ति छ। पुरुषत्वको अभिमानले गर्दा मलाई प्रभुबाट आजसम्म पनि टाढ़ा बस्नुपऱ्यो। आजसम्म म यसै अभिमानमा डुबिरहें 'म पुरुष हुँ, ठूलो कीर्तनकार हुँ।'

गोपिनीहरूले आफ्नो स्त्रीत्व छोड़िदिए र नारदजीले आफ्नो पुरुषत्व।

सांसारिक धर्मलाई त्यागेर प्रभुका तर्फ जानु जीवको धर्म हो। देहभान, पुरुषत्व-स्त्रीत्वको भावना प्रभुमिलनमा बाधक छ। यस्तो देहभान नछोड़ीकन जीव ईश्वरका नजीक जान पाउँदैन। अभिमानी जीव रासलीलामा प्रवेश पाउन सक्दैन। गाईसमान नम्र, गोपी भएर जाओ। त्यसो तर पुरुषत्व, अहंभावको प्रतीक हो र स्त्रीत्व नम्रताको। तैपनि प्रभुसँग मिलनका निमित्त यी दुवै आवरणहरूको त्याग गरेर शुद्ध जीव बन्नु आवश्यक छ।

आफ्नो विद्या, ज्ञान, कीर्तनकारको अभिमान नष्ट भयो र नारदजीलाई रासलीलामा प्रवेश पाइयो। उहाँ गोपी बनेर रासलीलामा जानुभयो।

गोपी—'नम्रतालाई प्रभुले रासलीलामा प्रवेश दिएर आनन्द दिनुहुन्छ। गोपी ( नम्र जीव )-लाई मात्र प्रभु आफ्नो तुल्याउनुहुन्छ।'

गोपीहरूलाई श्रीकृष्णसँग प्रेम थियो, मोह थिएन।

आत्माको चिन्तनले प्रेम उत्पन्न गराउँछ, शरीरको चिन्तनले मोह। आफ्नो प्रिय पात्रका आत्माको स्मरण, चिन्तन, ध्यान गर, शरीरको होइन।

प्रेममा अतिशय धैर्यको आवश्यकता छ। धैर्य पनि कस्तो ? रुक्मिणीले आफ्नो एक पत्रमा श्रीकृष्णलाई लेखेकी थिइन्—'मलाई जति जन्म लिनुपरे पनि वरण चैं तपाईंलाई मात्र गर्छु।'

यर्ह्यम्बुजाक्ष न लभेय भवत्प्रसादं।
जह्यामसून् व्रतकृशाञ्छतजन्मभिः स्यात्॥

( भा० १०-५२-४३ )

भागवत त गोवर्धनको वाङ्मयस्वरूप हो।

जबसम्म नामका साथ-साथ सम्बन्ध हुन पाउँदैन, तबसम्म नामी प्रभुका साथ सम्बन्ध कसरी होला ?

भागवत, परमात्माको प्रत्यक्ष नामस्वरूप हो जसले भगवान्‌सँग सम्बन्ध जोड़िदिन्छ।

दशम स्कन्ध भागवतको हृदय हो। मानव जीवनको अन्तिम लक्ष्य हो रासलीला। ईश्वरलाई प्राप्त नगरीकन जीवले शान्ति पाउँदैन। जीव ईश्वरका साथ एक हुन पाएन भने मुक्त भइहाल्यो।

यदि भगवान्‌सँग मैत्री गर्छौ भने उहाँले तिमीलाई पनि सुदामाको जस्तो भगवान् बनाइदिनुहुनेछ।

यो जीव कुनै साधन गर्दैन। सत्कर्म गर्नका निमित्त कुनै विशेष साइतको आवश्यकता पर्दैन। यसै क्षणबाट आरम्भ गर सत्कर्महरूको।

कुराहरूमा, चर्चा-विचारहरूमा समयलाई खेर नफाल। विचारमा समय खेर फाल्यौ भने आचारका निमित्त समय कहाँबाट ल्याउँछौ ?

आजसम्म रुपियाँ-पैसाका पछि दगुऱ्यौ। अब अलिकति भगवान्‌का पछि पनि दगुर।

आजको अशान्तिको यही कारण हो जीवले ईश्वरलाई बिर्सिदिएको छ। मानिस राजा बनून् या स्वर्गका देव, राजा होस् या रङ्क, विद्वान् होस् या मूर्ख उसका निमित्त शान्ति छैन। जीव ईश्वरसँग मिल्न गएपछि मात्र शान्ति प्राप्त हुनेछ।

भगवान् स्वयं आनन्दस्वरूप हुनुहुन्छ। उहाँले आफ्ना आनन्दका निमित्त होइन तर गोपिनीहरूलाई आनन्द दिनका निमित्त रासलीलाको आयोजना गर्नुभएको थियो। गोपिनीहरूलाई परमानन्द भयो। जीव र ईश्वरको मिलन भयो।

परमात्माका साथ मिलन भएपछि पनि साधना तर गर्दै रहनुपर्छ। साधना गर्नाले कैयौं सिद्धिहरू र परमात्मा पनि पाइनेछन्। त्यसकारण साधना छोड्नुहुन्न।

मन्त्रको अन्तिम सास छउञ्जेलसम्म पनि विश्वास नगर्नु। यदि भगवान्‌ले सेवा र जप बन्द गराउन चाहनुभयो भने उहाँलाई पनि भनिदिनु, 'नाथ, म तपाईंका सबै आज्ञाहरूको पालन गर्छु तर जप-सेवा छोड्ने छैन।'

सेवाको बाचुञ्जेल कुनै समाप्ति छैन। सेवा अन्तिम साससम्म गर्नैपर्छ। अन्त समयसम्म नियमितरूपले जप, सेवा, कीर्तन गर्दै रहू।

अलिकति साधना गरेपछि मानिसलाई सिद्धि मिल्छ, उसका वचन सबै सत्य हुन थाल्छन्। सिद्धिका साथ प्रसिद्धि र मानिसहरूको भीड़ हुन थाल्छ। यसो भएपछि गर्व ( अभिमान ) आउँछ र अभिमानले ल्याउँछ पतन। साधुहरूलाई कति पटक उनका शिष्यहरूले चाप्लुसी गरेर बिगारिदिन्छन्। मेरो भन्ने भावना आएपछि साधनाको बेवास्ता हुन्छ। साधना विचार गर्छ, अँ सेवा हुँदै गर्नेछ फुर्सदका समयमा, अहिले म सेवकहरूको सेवाको लाभ लिइहालूँ। म सिद्ध हुँ त्यसकारण मनद्वारा सेवा गर्ने छु। यो कुरा ठीक भएन।

तुकाराम महाराजले भनेको छ—

आधी केला सत्संग, तुका झाला पांडुरंग।
त्यांचे भजन राही ना, भूल स्वभाव जाईना॥

मेरा प्रभुले मलाई आफ्नो गराइसक्नुभएको छ। प्रेम बढ्दै गइरहेछ। हामी दुवै एकै हौं तापनि भजन गर्ने बानी छुट्‌तै छुट्‌तैन।

ईश्वरको दर्शन भएपछि पनि सेवा-ध्यान साधनहरूको त्याग नगर्नु, अन्यथा मायाले आएर घेर्ने छ।

केही मानिस साध्यको प्राप्ति भएपछि साधनको वास्ता गर्न छोड्दछन्। यो ठीक होइन। साधनमा कमी भयो भने मन भाँड़िन्छ।

बलवान् हात्तीका निमित्त पनि अङ्‌कुश जरूरी छ। मनको पनि त्यस्तै हो। उसलाई अङ्‌कुशमा राख्ने साधन भजन हो।

भक्तिमा दैन्यभाव जरूरी छ।

चमत्कार भएपछि तर नमस्कार गर्ने धेरै छन्। तिमीले विना चमत्कार नमस्कार गर्नु छ, त्यही भक्ति हो। भक्तिमा श्रद्धा भयो भने अनुभव पाइनेछ र ज्ञान पनि र त्यसो भएपछि भक्ति दृढ हुनेछ।

गोपिनीहरूलाई अभिमान भएर आयो। उनीहरूले भने—'सबै विषयहरूको त्याग गरेर हामी तपाईंकहाँ आएका छौं।' गोपिनीहरूमा अभिमान कहाँबाट आयो? हेर, त्यो उनकै मनमा सूक्ष्मरूपले लुकेर रहेको थियो।

मनुष्य मान्दछ कि अशुद्ध भइहाल्यो तर हर किसिमबाट शुद्ध हुन पाउनु बड़ो कठिन काम छ।

साधकलाई तर बड़ो सावधान भएर बस्नुपर्छ। जसलाई धेरै मान गरिन्छ ऊ अभिमानी हुन जाने सम्भावना हुन्छ।

श्रीकृष्णले गोपिनीहरूलाई मान गरिदिनुभयो तब उनलाई अभिमानले घेर्‍यो। गोपिनीहरू भन्न थाले, 'त्यसो तर श्रीकृष्ण हामीप्रति आसक्त थिए। तर आसक्त नभएको जस्तो ढाँचा पारिरहन्थे।' गोपिनीहरूमा अभिमानवश यस्तो लौकिक भाव जाग्यो, त्यसोस्ले तुरुन्त श्रीकृष्ण अदृश्य हुनुभयो।

भगवान् अन्तर्ध्यान हुनुको अर्थ के हो? भगवान् सर्वत्र सर्वव्यापी हुनुहुन्छ, उहाँ अदृश्य हुनै सक्नुहुन्न। अन्तर्ध्यान हुनुको अर्थ यो भयो, जीवको आँखामा अभिमानको पर्दाले ढाकिदिँदा प्रभु देखा नपर्नु।

गोपी-( जीव ) अभिमानले फुल्न गएकाले श्रीकृष्ण अदृश्य हुनुभयो।

व्रजवासी मान्दछन् त्यस समय श्रीकृष्णले पीताम्बरको घुम्टो तानेको थियो र त्यसैले सखीहरू भ्रममा परे यी पनि एउटी सखी हुन्।

परमात्मा सर्वव्यापक हुनुहुन्छ। गोपिनीहरू उहाँलाई बाहिर खोजिरहेछन् तर रासमण्डलीभित्र होइन। भगवान्‌लाई आफ्नै हृदयमा खोज्नुपर्छ। जीवलाई अज्ञानवश केही देखिँदैन।

एक पटक विद्याभ्यासका निमित्त निस्किएका दश पण्डितहरूलाई एउटा नदी तर्नुपर्‍यो। पारि तरेपछि कुनै एक पण्डितले विचार गरे—उनीमध्ये एक या त पारिनै रह्यो या त डुब्यो। उनले गन्ने तर नौ मात्र निस्कियो। सबैले पालै-पालो गरेर गन्ने त्यही परिणाम आयो। अब यस्तो हुनाको कारण यो थियो गन्नेले आफूलाई गन्न बिर्सन्थ्यो।

अब कुरा पक्का भयो एउटाचाहिँ बग्यो, सबै रुन लागे।

त्यताबाट एक महात्मा गइरहेका थिए। उनले पण्डितहरूलाई रुनुको कारण सोधे। पण्डितहरूले भनेपछि महात्माले गने र बताए, तिमीहरू पूरै दशै जना छौ।

अज्ञानका कारण जीव आफूले आफूलाई बिर्सिरहेको थियो। ज्ञानीले वास्तविक स्थिति बताइदिए। अज्ञानका कारण जो हुँदैन, त्यो देखिन्छ र जो छ त्यो देखिँदैन।

परमात्मासँग साक्षात्कार गरेर पनि सावधान हुनु। कतिपटक ज्ञानी पनि साक्षात्कार गरेर आफूलाई काबू राख्न सक्दैनन् किनभने सिद्धि-प्रसिद्धि दिन्छ र प्रसिद्धिले अभिमान। यस्तो भएपछि साधन छुट्न जान्छ र परिणामतः उसको पतन हुन्छ।

अब पुण्डरीक-चरित्र हेरौं।

पुण्डरीकका आमा-बाबुका प्रति अविराम, अतिशय भक्तिलाई देखेर द्वारकाधीश उनको दर्शन गर्नका निमित्त पण्ढरपुर आए।

पिता-माता कुष्ठरोगले पीड़ित थिए र चिड़चिड़े स्वभावका भएका थिए। पुत्र बड़ो लगनसाथ सेवा गर्थे र पनि उनको अपमान आमा-बाबु गरिरहन्थे। यति भएर पनि पुण्डरीक बड़ो नम्रतासाथ सेवा गरिरहन्थे।

भगवान्ले आँगनमा आएर पुण्डरीकलाई बोलाउनु भयो—'पुण्डरीक, तिम्रो मातृ-पितृसेवा देखेर प्रसन्न भई तिमीलाई दर्शन दिन आएको छु।'

पुण्डरीक—'भगवान्, यस समय म बा-आमाको सेवामा लागिरहेछु। त्यसकारण केही बेरका निमित्त तपाईं बाहिरै पर्खनुहोस्। म सेवाबाट निवृत्त भएर तपाईंसँग भेट्न बाहिर आउनेछु।'

पुण्डरीक मान्दछन् माता-पिता भगवान्भन्दा ठूला हुनुहुन्छ। उहाँको सेवा गरें अनि भगवान् उहाँसँग भेट्न आउनुभएको छ।

सुख-संपत्ति पाएर पनि भगवान्को भजन नछोड़।

यी साँचो भक्त हुन् जो भगवान्लाई पनि कुराउन सक्छन्।

भगवान्लाई विश्राम गर्नका निमित्त पुण्डरीकले एउटा ईंट दिए र त्यसमा उभिरहनू भने। पुण्डरीकलाई बाहिर आउनमा अबेर भयो। भगवान् प्रतीक्षा गर्दा-गर्दा थाक्नुभयो र कमरमा हातको सहारा लिएर उभिरहनुभयो।

भगवान्को त्यस मुद्राको अर्थ यो हो उनका चरणको आश्रय [illegible] [illegible] यसमा भव्र सक्तित कति जीव डुबेका छन्। [illegible] रहिरो छ। अन्यथा आजसम्म यसमा [illegible] सँग भेट गरे। उनलाई [illegible]

[illegible]
लाली मेरे लाल की, जित देखूँ तित लाल।
लाली देखन मैं गई, मैं भी हो गई लाल॥

रासका समय गोपिनीहरूको मनमा अभिमान आयो त्यसोस्ले श्रीकृष्ण अन्तर्ध्यान हुनुभयो। अभिमान जाग्नासाथै साधनको वास्ता गर्न छोड्छि।

गोपिनीहरूले सोचे उसो तर कृष्ण हाम्रो सौन्दर्यमा लुब्ध थिए तापनि अनासक्त हुनाको स्वाङ गरिरहेका थिए।

भगवान् अन्तर्ध्यान हुनुभयो। उहाँ त्यहीं हुनुहुन्थ्यो, तर गोपिनीहरूले उहाँलाई देख्न सक्दैनथे। भगवान् उनका हृदयमा मिसिनुभयो तर गोपिनीहरू उहाँलाई बाहिर खोजिरहेका थिए, त्यसैले भेट्न सकेनन्।

ईश्वरलाई जानु-आउनुको बन्धन छैन किनभने उहाँ सर्वव्यापी हुनुहुन्छ।

त्यसो तर ईश्वर तपाईंका नजिक आउनुहुन्छ तर वासनाको छिपाइले गर्दा उहाँ देखिनुहुन्न।

ईश्वर सबैका हृदयमा हुनुहुन्छ र पनि सबैले उहाँलाई किन देख्न पाउँदैनन्।

जीव जबसम्म भगवान्का तर्फ हेर्दैन तबसम्म उसको ख्याल उहाँले पनि राख्नुहुन्न। भगवान् सबै जीवलाई भन्नुहुन्छ, म तिमीलाई आफ्नो तुल्याउन तयार छु तर तिमी पनि मनजीक आऊ।

जीव पनि गोपिनीहरूले जस्तै बाहिर खोज्दछ, भित्र होइन। त्यसैले भगवान् भेटिनुहुन्न।

यदि स्त्री, वस्त्र, धन आदिले तिमीलाई आनन्द दिन्छन् भने तब तिनको वियोगका समयमा तिमीलाई दुःख पनि हुन्छ होला। तिम्रो आनन्द स्वाधीन हुनुपर्छ, पराधीन होइन। पराधीन आनन्द दुःखदायी हुन्छ।

दृष्टि अन्तर्मुख गर र परमात्मालाई आफ्ना हृदयमा हेर्ने गर।

भगवान्मात्र आनन्दरूप हुनुहुन्छ। यो सारा विश्व तर दुःखरूप छ। गीताले पनि यस संसारलाई 'अनित्यम् असुखम्' भनेको छ।

वियोगको अर्थ हो विशिष्ट योग। बहिरङ्गमा वियोग र अन्तरङ्गमा संयोग।

गोपीको मन श्रीकृष्णमा छ। वृत्ति कृष्णाकार हुनाले अन्तरङ्गमा वियोग छ। सखीहरू वनको पात-पात, फूल-फूलसँग कृष्णाको पत्ता सोधिरहेछन्। कहीं मेरा श्यामसुन्दरलाई देखेनौ? कसैले भन।

वियोगका कारण गोपिनीहरू यस्ती बौलाही भए, उनलाई यो पनि ज्ञान भएन फूल, पात, वृक्ष जड़ हुन्, बोल्न सक्दैनन्। व्याकुल गोपिनीहरू श्रीकृष्णका लीलाहरूको अनुकरण गरिरहेछन्।

विरह-व्याकुल गोपिनीहरूको दशा पनि हेर्नुहोस्। ऊ भन्दछिन्—

लाली मेरे लाल की, जित देखूँ तित लाल।<br>
लाली देखन मैं गई, मैं भी हो गई लाल॥

ए सखी मै हुँ कन्हैया।

जीव प्रभुमय हुन जानु ध्यान र भक्तिको पराकाष्ठा हो र फल पनि। ध्यान गर्दा-गर्दा संसारको विस्मरण भइहाल्छ। ध्यानमा तन्मयता भएपछि मेरो भन्ने भावना मेटिन्छ। ध्याता, ध्यान तथा ध्येय एकै हुन जान्छन्। यही हो मुक्ति।

गोपिनीहरू श्रीकृष्णको चिन्तन गर्दै भनिरहेछन्, ए सखी, मै कृष्ण हुँ।

**कृष्णोऽहं पश्यत गतिं।**

मै कृष्ण हुँ।

पहिले गोपिनीहरू आफूलाई कृष्णकी दासी भन्थे। पहिले 'दासोऽहम्' थियो, अब 'कृष्णोऽहम्' हुनगयो।

ध्यानमा तन्मयता भएपछि गोपिनीहरू सबै कुरामा श्रीकृष्णको दर्शन गर्न थाल्छन्।

सबै देवहरूले आफ्ना वाहन निमित्त पशुहरूलाई मात्र किन छानेका? पशु-पक्षीका प्रति पनि मनुष्यले ईश्वरत्वको अनुभव गरोस् भनेर।

पहिले तर सबैमा ईश्वरको भावना गरियोस्।

**'मैं सेवक सचराचर रूप स्वामि भगवन्त।'**

सबैमा ईश्वरको अनुभव गर्ने स्वयं पनि ईश्वरमय बनिहाल्छ।

ती गोपीको मुखपनि श्रीकृष्णको मुखजस्तो तेजस्वी भयो।

जीव जुन व्यक्तिको सतत ध्यान गर्छ त्यसको छायाकृति त्यस व्यक्तिको मुखमा झल्किन लाग्दछ।

एउटी गोपिनीले बालकृष्णको रूप लिएर कालीय नागको दमन गर्न खोजी, दोस्री गोपिनी नाग बनी। पहिली गोपिनी नाग बनेकी त्यस गोपिनीको शिरमा चढ़ी र भन्न लागी, 'दुष्ट कालीय, यहाँबाट गइहाल्। मैले दुष्टहरूको दमन गर्नलाई जन्म लिएकी छु।'

यो चाहीं रासको कथा हो। साधारण वक्ता या श्रोता यसका अधिकारी होइनन्।

शुकदेवजीको दर्शन मात्रले स्वर्गका अप्सराहरूको काम नष्ट भएको थियो। शुकदेवजीले अप्सराहरूमा स्त्रीत्वको होइन, ब्रह्मकै दर्शन गर्नुभएको थियो। ब्रह्मज्ञानी सजिलै हुन सक्छ र ब्रह्मदृष्टि राख्ने महात्मा पाउन तर नसकिएला जस्तै छ। जसको दृष्टिबाट काम नष्ट भइसकेको छ र जसले देहभान बिर्सिसकेको छ, लँगौटीसम्म लाएको छैन, यस्ता महायोगी शुकदेवजी यसकथाका वक्ता हुनुहुन्छ।

गोपिनीहरू भागवतरूप बनिहाले। राधा र कृष्ण एकै हुन्। ती दुवै अभिन्न छन्। सूर्य र उसका ज्योतिको भाँति कृष्ण र राधा एकै हुन्। ती दुवै कहिल्यै छुट्टिनै सक्दैनन्। यो विरह तर लीलामात्र थियो।

अन्तर्ध्यान हुने वेलामा श्रीकृष्णले राधाजीलाई साथै लैजानुभयो। हिँड्दा-हिँड्दा राधाजी थाक्नुभयो। उहाँले श्रीकृष्णलाई भन्नुभयो, 'मबाट अब हिँड्दिन। यदि तपाईंलाई आवश्यक छ भने मलाई आफ्नै काँधमा बोक्नुहोस्। कृष्णले उहाँलाई काँधमा बसाउनुभयो र अन्तर्ध्यान हुनुभयो। राधाजी एउटा वृक्षको हाँगा समातेर झुण्डिरहनु भएको थियो। राधाजीको अभिमान दूर गर्नका निम्ति यस्तो गरियो।'

त्यसो तर राधाजी अभिमानी हुन किन सक्नुहुन्थ्यो। यो लीला मात्र हो। त्यस्तो अभिमानी चाहिँ जीव मात्र भएको छ।

अभिमान आउनसाथ जीव ती राधाजीको जस्तै बीचमै झुण्डिन्छ। मनुष्यको शत्रु अभिमानले आफ्ना साथ अरू कति दुर्गुणहरू पनि लिएर आउँछ। अभिमानका कारण जीव दुःखी हुन्छ। दैन्य आउनु सजिलो छैन। जब मनुष्य घमण्डमा हुन्छ, तब कर्कश शब्दले उसलाई मत्याइदिन्छ। ईश्वरकै चरणमा बसिरहू जसबाट मनमा कुनै पनि विचार उत्पन्न हुन नपावोस्।

श्रीकृष्णले राधाजीको बहुतै आदर गर्नुभयो, आफ्ना साथ लैजानुभयो र राधाजीलाई अभिमान आयो।

धेरै मान गरेपछि जीव धेरै अभिमानी हुन थाल्छ। मान, धन पाएपछि अरू पनि नम्र हुनुपर्ने थियो।

कृष्ण अन्तर्ध्यान हुनुभयो तब राधाजी पछुताउन र रुन लाग्नुभयो 'हे नाथ ! हे प्यारा ! दर्शन दिनुहोस्।'

प्यारे दर्शन दीज्यो आय, तुम बिन रह्यो न जाय।
जल विन कमल, चंद विन रजनी, ऐसे तुम देख्यों विना सजनी॥
आकुल व्याकुल फिरूँ रैन दिन, विरह कलेजो खाय।
दिवस न भूख, नींद नहिं रैना, मुख सूँ कहत न आवै वैना,
कहाँ कहूँ कछु कहत न आवै, मिलकर तपन बुझाय।
क्यूँ तरसाओ अन्तरयामी, आय मिलो किरपाकर स्वामी,
मीरा दासी जनम जनम की, पड़ी तुम्हारे पाय।

राधाजी कृष्णलाई बोलाउनुहुन्छ, पछुताउनुहुन्छ, रुँदा-रुँदै चेत गएजस्तो हुनुभयो। कृष्णलाई खोज्दै केही गोपिनीहरू यसतर्फ आएका थिए, राधाजीलाई अचेत भेट्टाए।

ज्ञानमार्गमा ध्यान प्रधान छ। भक्तिमार्गमा भगवान्‌को गुणगान, भजन, कीर्तन प्रधान छ। आफ्ना दोषहरूको निवेदन गर्दै प्रभुका गुणहरूको गान गऱ्यौ भने उहाँलाई तिमीप्रति दया आउनेछ।

माधवजी संगीतप्रेमी हुनुहुन्छ।

एक पटक वैष्णवले देखे जगन्नाथजीका नयाँ-नयाँ लुगा दिनदिनै फाट्छन्। भक्तहरूले भगवान्सँग कारण सोधे। जगन्नाथजीले भन्नुभयो—गीत गोविन्दको गान गर्दै एउटी कन्या वनमा घुमिरहन्छे। त्यसलाई सुन्नका निमित्त म उसका पछि लाग्छु र वनको झ्याङमा अल्झिनाले मेरो लुगा च्यातिन्छ।

भगवान्ले भागवतमा भनेको छ, म आफ्ना निष्काम भक्तहरूका पछि-पछि हिँड़िरहन्छु, जसबाट उनको चरणरजको धूलो उड्दै मेरा ऊपर आइरहोस्।

विरहव्याकुल गोपिनीहरू श्रीकृष्णको गुणगान गर्न थाले। यही हो गोपीगीत।

गोपिनीहरूले विचार गरे, यदि यमुनाकिनारामा गएर स्तुति गऱ्यौं भने श्रीकृष्ण अवश्य प्रकट हुनुहुनेछ।

गोपी गीतको पाठ धेरैले गर्छन् तर यो पाठ गोपीभावद्धारा गर्नुपर्छ।

ईश्वरसँग मिल्नका निमित्त व्याकुल भएको जीवले यस जगत्मा कहीं पनि सुख पाउँदैन। यदि अत्यन्त आर्तस्वरले भगवान्लाई पुकाऱ्यौ भने उहाँ आएर भेट्नुहुनेछ। अतिशय आर्द्रभावले गोपीगीत गाउनुपर्छ।

दिनमा सँधैं तीन पटक पाठ गर। गोविन्द दामोदर स्तोत्रमा भनेको छ, सुखावसाने, दुःखावसाने र देहावसाने स्तुति गर।

दुःखका प्रसङ्गमा विचार गर दुःखरूपी पहाड़ जति हुन्छ त्यसको तुलनामा भगवान्ले तिम्रो पापको प्रमाणमा चाहिनेभन्दा थोरै कम सजाय दिनुभएको छ।

गोपीगीतको छन्द हो इन्दिरा। इन्दिरा अर्थात् लक्ष्मी। गोपिनीहरू लक्ष्मी हुन्। त्यसकारण गोपीगीत इन्दिरा छन्दमा बनेको छ।

सखीहरू परमात्माको स्तुति गरिरहेछन्। कृष्ण तपाईंकै कारणले आफ्नो र वृन्दावनको शोभा बढ्न गएको छ। पहिले यहाँ सौन्दर्य थिएन। नाथ, तपाईंकै आगमनले व्रज-भूमि शोभायमान भयो।

**जयति तेऽधिकं जन्मना व्रजः।**

मानव शरीरै व्रज हो। यदि यस शरीर-व्रजमा प्रभु प्रकट हुनुभयो भने त्यसको शोभा अझ बढ्न जानेछ, त्यसको मोल बढ्ने छ, उसको जयकार हुनेछ।

व्रजशब्दको अर्थ यस प्रकार छ—

**व्रजति भागवत समीपं स ब्रजः।**
**ते जन्मना व्रजः अधिकं जयति॥**

भगवान्का नजिक लैजानमा हामीलाई जो सहायक हुन्छ, त्यस्तै यो शरीर पनि व्रज हो।

यस शरीरको शोभा वस्त्राभूषणहरूबाट होइन भागवत भक्तिद्वारा मात्र बढ्दछ।

नाथ, तपाईंकै कारणले मेरो व्रज-शरीरको शोभा छ, तपाईंको प्राकट्य भएबाटै हाम्रो शोभा बढ़ेको छ।

शरीरको सिंहासन जब काम, क्रोध, मद, मोह, लोभ, मत्सरबाट मुक्त हुन्छ तबमात्र परमात्मा दौड़िएर आउनुहुनेछ। तुकाराम र मीराबाईको आज पनि जयकार हुन्छ, किनभने उनको शरीर-व्रजमा विकारहरूले गोड़ासम्म राखेको थिएन। उनीहरूले आफ्नो शरीर र हृदयलाई व्रजसमान बनाएका थिए।

ठूला सम्राट्हरूलाई संसारले बिर्सिदेला तर शंकराचार्य,बल्लभाचार्य, मीराबाई, तुकाराम, नरसिंह मेहतालाई कसले बिर्सन सक्छ ? यी महापुरुषहरूले आफ्नो हृदय गोकुलमा श्रीकृष्णलाई बसाएका थिए। जगत्‌गुरु शंकराचार्यजस्तो ज्ञानी आजसम्म अरू कोही भएका छैनन्। यस्ता भए तापनि उहाँले आफ्ना हृदयमा श्रीकृष्णलाई सदा बसाइराख्नुभएको थियो।

जयतितेऽधिकं जन्मना व्रज श्रयत इन्दिरा शश्वदत्र हि।
दयित दृश्यतां दिक्षु तावकास्त्वयि धृतासवस्त्वां विचिन्वते॥
शाद्रदाशये साधुजातसत्सरसिजोदर श्रीमुषा दृशा।
सुरतनाथ तेऽशुल्कदासिक वरदनिघ्नतो नेह किं वधः॥

कृष्ण, हामी तर केवल तिम्रै निमित्त बाँचिरहेका छौं। तिमीविना कालले हामीलाई सताउँछ।

नाथ, त्यसो तर हामीलाई केही जरूरी छैन, तैपनि शरणागतको रक्षा गर्नु तपाईंको के कर्त्तव्य छैन ?

शरणागत जीवको उपेक्षा नगर्नुहोस्। जहाँ पनि, जसमा पनि हामी तपाईंलाई मात्र खोज्दछौं।

त्वां विचिन्वते।

भक्त सबैमा एकै ईश्वरलाई खोज्दछ।

त्वम् श्रीकृष्ण सर्वत्र विचिन्वते।

सबैमा जो ईश्वरलाई खोज्दछ उही गोपी हो।

हे नाथ ! हामी तपाईंका दासी हौं। हामी तपाईंकै हौं। दिक्षु नावकाः। हामीलाई दर्शन दिने कृपा गर्नुहोस्।

पहिलो श्लोक प्रभुको गुणगानको कीर्तन भक्तिको हो। प्रभुको दर्शनको अपेक्षा छ र उसमा दर्शन भक्ति पनि छ। प्रभुकै निमित्त प्राण धारण गरेका छन्। अतः यसमा आत्मनिवेदन पनि छ। 'दयित'बाट सख्य, 'तपाईंको' शब्दबाट 'दास्य' आदि साधनरूपा भक्तिका भेद सूचित हुन्छन्।

हे नाथ ! तपाईंले अजामिलजस्तो पापीमाथि पनि कृपा गर्नुभएको थियो, तब के हामीउपर नगर्नुहोला ? के हामीलाई दर्शन नदिनुहोला ?

'हे नाथ ! तपाईंको चिन्तन गर्दै हामी अँधेरी रातमा भौंतारिरहेछौं। हाम्रो हेलाँ गर्नु तपाईंलाई शोभा दिँदैन।'

हे नाथ ! हामी अरू केही मागिरहेका छैनौं हामी तपाईंका सित्तैका दासी हौं। आफ्नो भक्ति निष्काम भक्ति हो। तेऽशुल्क दासिकाः।

यी गोपिनीहरूका कुरामा आत्मतिरस्कार छैन, दैन्य छ।

'तपाईंका नेत्रहरूद्वारा हामीमा बाण लागिसकेको छ। नेत्रबाणद्वारा भएको वध पनि वधै हो नि।'

'हामीले बुझ्यौं, तपाईं दयालु हुनुहुन्न। तपाईं निष्ठुर हुनुहुन्छ। यशोदाजी सुधी हुनुहुन्छ। उहाँको एउटा पनि सद्गुण तपाईंमा आएको छैन। त्यसकारण हामीलाई छटपटीमा पारिदिनुभए तापनि यो कुरा कुनै आश्चर्यको भएन।'

'कृष्ण, तपाईं नौनी चोर हो। हाम्रो मनलाई पनि तपाईंले चोर्नुभएको छ र अब हामीलाई यहाँबाट टाढ़ा पनि खोज्नुहुन्छ ?'

कृष्ण—'म चोर हुँ, तब फेरि मलाई किन बोलाइरहेछौ। चोरसँग पनि कसैले मितेरी गर्छ ?'

गोपिनीहरू—'चोरी गर्नैका निमित्तै हामी तपाईंलाई बोलाइरहेछौं। तपाईं चोरी गर्दै हुनुहुन्छ, तपाईंका आँखा पनि चोरै हुन्।'

**विषजलाप्ययाद्व्याल राक्षसाद् वर्षमारुताद् वैद्युतानलात्।**
**वृषभयात्मजाद्विश्वतोभयादृषभ ते वयं रक्षिता मुहुः॥**

विषैले यमुनाजलबाट, अजिंगररूपी अघासुरबाट, इन्द्रको वर्षाबाट, ब्योमासुरबाट, सबै प्रकारका भयबाट तपाईंले हाम्रो बारम्बार रक्षा गर्नु भएको छ।

त्यसकारण फेरि हे कृष्ण। आज तपाईं किन निष्ठुर हुनुभयो ? यदि हामीलाई मार्नै थियो भने ती आपत्तिहरूबाट हाम्रो रक्षा किन गर्नुभो ?

कृष्ण, के हाम्रो रक्षा गर्ने उपकार नगर्ने ?

तपाईंले कालीयनाग, अघासुर, बकासुर आदि राक्षसहरूबाट हाम्रो रक्षा गर्नुभो, आज विरहासुरबाट हामीलाई मार्न खोजेको हो। त्यस कालीयनागको विषभन्दा पनि यो विरह-विष ज्यादा पोल्ने छ। अब त सहन सकिँदैन। दर्शन दिनुहोस् कृष्ण, दर्शन दिनुहोस्।

यदि हामीलाई मार्नै थियो भने पहिले प्रेमदान किन दिनुभयो ?

यदि हामीलाई दर्शन नदिने हो भने म मानिसहरूलाई भनिदिनेछु अब 'कृष्ण नन्द-यशोदाका छोरा होइनन्। मलाई थाहा छ तपाईं को हो भन्ने कुरा'।

कृष्ण—अलिकति मलाई पनि भनिदेउ म को हुँ ?

सखीहरू ज्ञानभक्त हुन्, ज्ञानी हुन् र परमात्माको स्वरूपलाई राम्ररी चिन्दछन्। उनीहरू तब भन्न लागे, 'हामी तपाईंलाई चिन्दछौं, चिनेरै प्रेम गर्दैछौं।'

न खलुगोपिकानन्दनो भवानखिलदेहिनामन्तरात्यदृक्।
विखनसार्थितो विश्वगुप्तयेसखउदेयिवान् सात्वतां कुले॥

तपाईं सबैका हृदयमा अन्तर्यामी रूपबाट राज हुनुभएका नारायण हुनुहुन्छ। समस्त शरीरधारीहरूका हृदयमा बस्नुभएका साक्षीभूत हुनुहुन्छ।

कृष्ण—'तिमीहरू सबैको के इच्छा छ ?'

गोपी—'हे कान्त ! हे प्यारा ! तपाईंका वरदहस्त यति शक्तिमान् छन् जो हाम्रा अभिमानलाई हटाउन सक्छन्। तपाईंका मङ्गलमय हस्त हामी सबैका शिरमा राखिदिनुहोस्।'

यस पाँचौं श्लोकको तात्पर्य शरणभक्ति हो। यसका पहिलेको श्लोकमा प्रभुको महात्म्यको वर्णन थियो। भगवान् महान्, समर्थ, अप्रतिम प्रभावी हुनुहुन्छ, यस्तो प्रतीति भएपछि हृदयले उहाँको शरणको याचना गरोस्, यो स्वाभाविक छ। जीवले शरणभावबाट उहाँलाई च्यादै चिन्न सक्दछ। प्रभुप्रेमको मार्गमा गोपीजन अगाड़ि बढ्दै यस्तो शरण याचना गर्दछन् जो सबै प्रकारका भयहरूबाट मुक्ति पाइयोस्।

श्रीकृष्ण—'यति सारा सखीहरूमध्ये म कस-कसका शिरमा हात राखूँ ? समय पनि धेरै लाग्नेछ। त्यसकारण पहिले मेरा अन्य भक्तहरूको काम सिध्याइदिऊँ अनि तिमीहरूलाई स्पर्शलाभ दिउँला।'

गोपी—'होइन, कृष्ण ! उनको काम पछि गरिदिनु। पहिले हामीमाथि कृपा गर्नुहोस्, हामी तपाईंका हौं। व्रजवासीका दुःखहरूको पहिले नाश गर्नुहोस्। अन्य भक्तहरू व्रजवासी होइनन्। कृष्ण, हामी एकै गाउँका वासी हौं, त्यसकारण तिमीमाथि पहिलो अधिकार हाम्रो छ। तपाईंको अवतार हामी व्रजवासीहरूका उद्धारका निमित्त भएको छ।'

व्रजभक्त कसलाई मान्नुहुने ? के गोकुल-मथुरा वृन्दावनमा बस्नेहरूलाई मात्र हो ? होइन, यस्तो मात्र सकिँदैन। जो निस्साधन भक्त छ त्यही व्रजभक्त हो। साधनबाट कहिल्यै लुप्त नहुनु निस्साधना हो। यस्तो भक्ति गर्ने जो कोही पनि व्रजवासी हो। आफ्नो पाप पर्वतजत्रो छ र साधन थोरै। सबै पाप कसरी खरानी हुने ? भगवत् कृपाबाटै पाप खरानी हुन सक्छ। यस्तो नम्रता आउनुपर्छ। सबै प्रकारको साधन गर्दा-गर्दै पनि आफूलाई निस्साधन मान्नेवाला जीव व्रजभक्त हो। दीन हृदय भएको मात्र व्रजभक्त हो।

'कृष्ण तपाईंका अरू भक्तहरू केही न केही साधन गर्दा होलान्। ती योगी, ज्ञानी या कर्मनिष्ठ होलान्। उनलाई कुनै साधनको अवलम्बन छ, हामी तर निरावलम्ब छौं। हामी तिम्रै सहारामा छौं। हामी गाउँका अनपढ़ गोपिनीहरू हौं। तपाईं मात्र हाम्रा आधार हुनुहुन्छ।'

जीव निराधार बन्न सक्छ, त्यसकारण उसले भगवान्लाई पाउन सक्दैन। गोपिनीहरू ध्यानादि सबै कुरा गर्दै रहेर पनि मान्दछन् केही पनि गर्न पाएका छैनौं, यस्तो भावना राख्नेवाला मात्र व्रजभक्त हो। साधनको घमण्ड गर्ने भक्त व्रजवासी हुन सक्दैन।

'कृष्ण, हामीलाई तर यो पनि थाहा छैन ध्यान कसरी गर्न सकिन्छ?'

हामी गाउँका नपढ़ेका आइमाई तिम्रो शरणमा आएका छौं, हामी निस्साधन छौं, तिमीमाथि पहिला अधिकार हाम्रो छ।

सबै साधन गरेर पनि जसलाई साधनको अभिमान नहोस्, त्यही निस्साधन भक्त हो।

सत्कर्म र साधनले अभिमानलाई बढ़ाइदिन्छ, त्यसकारण सत्कर्म र साधनको पूर्णाहूतिमा मन्त्र पढ़िन्छ।

मन्त्रहीनं क्रियाहीनं।

साधना गर तर हृदयबाट नम्र बन। उद्धत जीव कृष्णलाई मन पर्दैन।

म निराभिमानी हुँ, यस्तो मान्नु र भन्नु अभिमान हो। जब हृदय नम्र बन्दछ तब जहाँ पनि भगवान्को दर्शन पाइन्छ।

तपाईंको अवतार व्रजभक्तहरूका निमित्त हो। त्यसकारण तपाईंको परम सुन्दर श्यामवर्ण मुखकमल हामीलाई देखाउनुस्।

जलरुहाननं चारु दर्शय।

मेरो दर्शन भएपछि तिम्रो के इच्छा बाँकी रहला?

अन्तरंगको संयोग र बहिरङ्गको वियोगको यो कुरा हो। अतः श्रीकृष्ण, प्रत्यक्ष कुरा गरिरहेछन् कि भन्ने भास हुन्छ।

गोपिनीहरू—'हे कामविनाशक! हाम्रा सबै कामनाहरू तपाईं नष्ट गर्न सक्नुहुन्छ।'

नः कृन्धि हृच्छयम्।

आफ्नो कामको नाश गर। गोपिनीहरू कामसुखको होइन कामनाशको इच्छा गर्छन्।

सन्त-गुरुका हातहरूमा कामनाशको शक्ति छ।

तपाईंको हात आफ्नो शिरमा पर्दैमा आफ्नो बुद्धिबाट कामवासना नष्ट हुनेछ। आफ्नो चरण हाम्रो हृदय र शिरमा राखिदिनुहोस्।

कृष्ण—'के मेरो चरण यति सजिलै भेटिने हो र जस-कसैको हृदयमा राखौं हिँड़ौं।'

गोपिनीहरू—'तपाईंका चरण गाईहरूका निमित्त सुलभ छन् तब के हामीले उनको लाभ पाउन नसकिने ? हामी तर गाईहरूभन्दा बहुतै दीन बनेर आएका छौं। तपाईंका चरण तृण चरानुग छन्। गाईहरूका निमित्त तपाईंका चरण सुलभ छन् किनभने तपाईं दुवै एक-अर्काका अगाड़ि-पछाड़ि हिँड्दै हुनुहुन्छ। के गाईहरूलाई सुलभ र हाम्रा निमित्त चैं दुर्लभ ?'

भगवान्—'के मलाई गोपाल भन्ठानेका छौ तिमीहरूले ?'

गोपिनीहरू—'होइन, होइन। तपाईं श्रीनिकेतनम् हुनुहुन्छ। तपाईंका चरण लक्ष्मीजीका निवास स्थान रूप हुन्। तपाईंका चरण लक्ष्मीजी नित्य आफ्नो काखमा राखेर सेवा गर्नुहुन्छ।'

श्रीकृष्ण—'म आफ्नो चरण तिम्रो हृदयमा राखिदिनका निमित्त तयार छु तर एउटा डर पनि छ मलाई। तिम्रा अभिमानबाट विषैला हृदयमा मैले चरण राखिदिएँ भने त्यसको असर मेरो चरणमा पनि आउला कि ?'

गोपिनीहरू—'तपाईं हाम्रो भावनालाई खिसी गर्नुहुन्छ। तपाईं फणिफणार्पितं, विषैलो कालीयनागको शिरमा आरूढ़ भएर नाच्नेवाला हुनुहुन्छ। कालीयनागको विषले केही असर गर्न सकेन हाम्रो हृदयको विष तपाईंलाई के गर्न सक्ला ? यदि हाम्रो हृदय विषैलो भए पनि, तपाईंका चरणले त्यसलाई अमृत बनाइदिने छ।'

तपाईंका चरण सबै प्रणाम गर्नेहरूका पापलाई नाशिदिनेवाला हुन्।

**प्रणत देहिनां पापकर्शनं।**

गोपिनीहरू बिन्ती गर्छन्—'हे नाथ ! आफ्नो अधरामृतको पान गराएर हामीलाई जीवनदान दिनुहोस्।'

**अधरसीधुनाऽऽप्याययस्व नः।**

श्रीकृष्ण—'तिमीहरू बाँचिरहेका छौ र पनि कस्तो जीवनदान मागिरहेका। तिमीहरूका प्रेममा केही कपटभाव छ। मैले तर सुनेको छु दशरथजीले रामजीको वियोगको कारण प्राणत्याग गरेका थिए।'

**राम राम कहि राम राम कहि, राम राम कहि राम।**
**तनु परिहरि रघुवर विरह, राउ गयउ सुरधाम॥**

दशरथजीको रामप्रतिको प्रेम हार्दिक थियो र रामको विरह हुनासाथ उहाँले प्राण त्यागिदिनुभयो। यही हो साँचो प्रेम।

मेरो वियोगमा तिमीहरू बाँचिरहेका छौ, मसँग कुरा पनि गरिरहेछौ। तिमीहरूको प्राण गएको छैन त्यसकारण मलाई लाग्छ तिमीहरूको प्रेम साँचो छैन। यदि तिमीहरूको प्रेम साँचो हुँदो हो तिमीहरूले दशरथको जस्तै प्राण त्याग गरिसक्नुपर्थ्यो।

कृष्णको यस्तो वचन सुनेर गोपिनीहरू आर्तस्वरले गाउन थाले—

तवकथामृतं तप्त जीवनंमिरीडितं कल्मषापहम्।
श्रवणमंगलं श्रीमदातं भुविगृणन्ति तेमूरिदा जनाः ॥
(भा० १०-३१-९)

गोपी—'के भन्दै हुनुहुन्छ तपाईं? हाम्रो प्राण गइसकेको थियो तर तपाईंको कथामृत पानका लोभले अहिलेसम्म पर्खिरहेको छ। तपाईंले हामीसँग भेट्ने वचन दिनुभएको थियो। त्यस वचनको पूरा हुने आशामा हामी बाँचिरहेका छौं।' वैष्णवहरू जीवनको अन्तिम साससम्म परमात्मासँग भेट गर्ने आशामा बाँचिरहन्छन्।

'प्रभु ! तपाईंको लीला-कथा अमृतस्वरूप छ जो श्रवणमात्रले पापहरूको नाश गर्छ। त्यसको श्रवण मङ्गल आनन्ददायी छ।' यज्ञकथा सुन्नाले आनन्द हुँदैन। विरहाकुल जीवका निमित्त रासलीला जीवनरूप हो, जीवन-सर्वस्व हो। ठूला-ठूला ज्ञानी-महात्मा, भक्त कविहरूले यसको गान र श्रवण गरेका छन्। यस कथाले सबै पाप-ताप मेटाउँछ र सुन्नाले मात्र परम कल्याण पनि गर्दछ। त्यो अति सुन्दर, मधुर र शान्तिदायक छ। स्वर्गको अमृतले पुण्यलाई डढाउँछ तर यस कथाले पापको विनाश गर्छ। जो व्यक्ति यस लीला कथाको गान गर्छ उही यस जगत्मा सबैभन्दा ठूलो दानी हो।

रामजीले हनुमानजीसँग सोध्नुभयो जानकी मेरा विरहमा आफ्नो प्राणरक्षा कस्तो प्रकारले गरिरहिछन्? तब हनुमानजीले उत्तर दिए—

नाम पाहरू दिवस निसिध्यान तुम्हार कपाट।
लोचन निज पद जन्त्रित जाहि प्रान केही बाट ॥

तपाईंको नाउँले रात-दिन उहाँको रक्षा गरिरहेछ। तपाईंको ध्यान द्वार हो। नेत्र आफ्ना चरणमै लगाइरहनुहुन्छ।'तब प्राण बाहिर निस्कियोस् कसरी? त्यसो तर विरहका कारणले प्राण निस्कने हो तर बाहिर निस्कने कुनै बाटो पनि छैन। यदि तपाईंको ध्यान र नाउँ छुट्यो भने प्राण पनि निस्कने छ तर उहाँको तपाईंसँग यति प्रेम छ जो तपाईंको नाउँ र ध्यान छुट्न पाउने छैन र नाउँ र ध्यान गए विना प्राण जान सक्दैन। जानकीको मन, वचन र कर्म तीनै तपाईंसँग सम्बद्ध छन् र उहाँको प्राण जान सकेको छैन।'

कृष्णको कथामृतले प्राणलाई विरहावस्थामा पनि रोकेर राख्छ। भगवान्को कथा पनि उहाँका ६ गुणहरूले युक्त छन्। त्यो मोक्षदा छ, परमानन्द छ, अमृत छ, तपितहरूका निमित्त

जीवन छ। संसारतापबाट पीड़ितहरूका पीरलाई निवारण गर्दछ। ज्ञानी पनि कथामृतको स्तुति गर्दछन्। पापलाई हटाउनेवाला छ। यसमा वीर्यधर्मको सूचक छ। सुन्नका निमित्त कल्याणकारी छ। कथामृतमा यशधर्म छ, लक्ष्मीयुक्त छ। सर्वत्र व्याप्त छ। भगवान्का छ गुण ऐश्वर्य, वीर्य, यश, ज्ञान, वैराग्य र श्री यस कथामृतमा पनि छ।

वस्त्रदानभन्दा अन्नदान ठूलो हो तर कथादान सर्वश्रेष्ठ छ। निरपेक्षतः कथा भन्ने मात्र सच्चा भक्त हो। ज्ञानदानबाट जीवन सुध्रिन्छ, जीवले सदाका निमित्त शान्ति पाउँछ।

'कृष्ण ! तपाईंका निमित्त हामीले सर्वस्व त्याग गरेका छौं। नाथ, तपाईंका निमित्त हामीले लोक-लाजसम्म पनि छोड़िदिएका छौं र आज तपाईं निष्ठुर हुनुहुन्छ।'

भाइ छोड़ा, बन्धु छोड़ा, छोड़ा सगा सोई।
मेरे तो गिरधर गोपाल, दूसरा न कोई॥

पतिसुतान्वय भ्रातृबन्धवानतिविलङ्घ्य तेऽन्त्यच्युतागताः।
गतिविदस्तवोद्गीतमोहिताः कितव योषितः कस्त्यजेन्निशि॥

यस श्लोकमा गोपिनीहरूको संन्यास प्रकट भएको छ। आफ्नो चित्त अब एक क्षण पनि कुनै अन्य वस्तुमा लाग्दैन।

कोई वस्तुमें क्षण चित्त नव चोटे,
अलवेली अवी बेठो हैये जी रे,
दयाना प्रीतमजीने एटलुंजइ कहेजो,
क्यां सुधी आवां दुःख सहीये जी रे॥

त्यसकारण चाँड़ै दर्शन दिने कृपा गर्नुहोस्।

मुझे दो दर्शन गिरिधारी,
तोरी साँवरी सूरत पर बारी रे।

यो विरहवेदना असह्य छ, जसलाई मीराबाईले यी शब्दहरूमा प्रकट गरेकी छिन्—

ऐसी लगन लगाय कहाँ तूँ जासी,
कहाँ तूँ जासी ऐसी लगन लगाय।
तुम देखे विन कल न परत है,
तड़प तड़प जिव जासी॥

गोपिनीहरूको कृष्णदर्शनको इच्छा पनि कस्तो छ ?

गोपिनीहरू आँखाको पलक बनाउने ब्रह्मालाई पनि गाली गर्छन्, किनभने ती पलकहरूले हल्लिदिँदा दर्शनमा बाधा पर्न गयो। 'पलकले चिम्म गर्दा एक क्षणसम्म हामीले तपाईंको दर्शन पाउनबाट वंचित हुनुपर्छ। एक क्षणको विरह पनि हामीलाई असह्य छ। आँखाहरूका पलक बनाउने ब्रह्मा जड़ हुन्। यदि उनले पलक नबनाइदिएका भए हामीले तपाईंको दर्शन निरन्तर गर्न-सक्ने थियौं।'

कुटिल कुन्तलं श्री मुखं च ते जड उदीक्षतां पक्ष्मकृद् दृशाम्।

नाथ, आफ्नो दर्शनका निमित्त हामीलाई प्रतीक्षा गराइरहने हो क्या ?

तपाईंलाई खोज्दा-खोज्दा मेरा आँखा थाकेर हारिसके। जब तपाईं जानु भो, हामी छटपटिएका छौं, हामीलाई शान्ति छैन।

दरस विन दुखन लागे नैन।
जबसे तुम बिछुड़े पिव प्यारे कबहुँ न पायो चैन।
शब्द सुनन मेरी छतियाँ काँपै, मीठे लागे वैन।
एक टक ठाड़ी पन्थ निहारूँ, भइ छमासी रैन।
विरह विथा कासो कहूँ सजनी, बह गइ करवत ऐन।
मीरा के प्रभु कबरे मिलोगे, दुख मेटन सुख दैन।

दुःखहर्ता र सुखहर्ता तपाईंले कहिले दर्शन दिनुहुन्छ ? कहिले तपाईं साक्षात्कार बन्नुहुन्छ ?

असह्य विरहवेदनाका कारण गोपिनीहरू रुन थाले, एउटीले गाएको गीतले केही सीप लागेन। केवल गुणगान काम लागेन, रोदन पनि आवश्यक भयो। गोपिनीहरू रुन लागे तब परमात्मा प्रकट हुनु भयो।

रुरुदुः सुस्वरं राजन् कृष्णदर्शनलालसाः।

कृष्णदर्शनका इच्छुक गोपिनीहरू थाकी हार भएर ठूलो स्वरले रुन लागे। प्रभुका निमित्त साधन गर्दा-गर्दा थाकेको जीव रुन थाल्दछ अनि दयावश प्रभु प्रकट हुनुहुन्छ।

गोपिनीहरूले जस्तै रोई-रोईकन तिमी पनि प्रभुलाई प्राप्त गर्न सक्नेछौ।

रामकृष्ण परमहंसले भनेको छ—'पत्नी, पुत्र आदिका मृत्युका समयमा या धन सम्पत्ति पाउनका निमित्त मानिस आँसुको खोलो बगाइदिन्छन् तर ईश्वरको दर्शन नपाएबापत दुःखले भगवान्का निमित्त आँसु बगाउने कति होलान्।'

आफ्नो अनुभवको वर्णन गर्दै उहाँ भन्नुहुन्छ—'सन्ध्या समयमा पनि मैले माँको दर्शन नपाउँदा म रोइदिन्थें, माँ आजको दिन पनि तिम्रो दर्शनविना बित्यो।' म रुँदै पृथ्वीमा लड्थें। तब अन्तमा उनको दर्शन हुन्थ्यो। दर्शनप्राप्तिका निमित्त अतिशय व्याकुलतासाथ आँखाबाट आँसुका धारा बगाऊ। उहाँले अवश्य दर्शन दिनु हुनेछ।

गोपिनीहरूको क्रन्दन कृष्णले सुन्न सक्नुभएन। गोपिनीहरू अभिमानरहित भएर, नम्र बनेर रोइरहेका अवस्थामा कृष्ण प्रकट हुनुभयो। भक्त जब भगवान्‌का निमित्त क्रन्दन गर्दछ तब उहाँ प्रकट हुनुहुन्छ।

तिमीले दीन भएर रोइरोई पुकारा गऱ्यौ भने भगवान् प्रकट हुनुहुनेछ, अभयदान दिनुहुनेछ।

भगवान्‌ले गोपिनीहरूलाई वचन दिनुभयो—'म तिमीहरूलाई छोड़ेर कहीं पनि जाने छैन।'

**वृन्दावनं परित्यज्य पादमेकं न गच्छति।**

दशम स्कन्धको एकतीसौं अध्यायलाई गोपीगीत भनिन्छ, यसमा उन्नाइसवटी गोपिनीले गीत गाएका छन्। यी गोपिनीहरूका प्रकार वल्लभाचार्य महाप्रभुजीले बताउनु भएको छ। पहिलो श्लोक भन्ने गोपिनी सात्त्विक-राजसी थिइन्, उनले श्रीकृष्णको दोष देखाइन्, तेस्रो श्लोक तामस गोपिनीले भनिन्, उनले श्रीकृष्णलाई निष्ठुर भनिन्। सात्त्विक गोपिनीले भगवान्‌को उपकारको संझना गरिन्।

चौथी गोपिनी श्रुतिरूपा निर्गुण थिइन्, उनले भनिन्—'तपाईं समस्त देहधारीहरूका हृदयमा बस्ने साक्षी हुनुहुन्छ, अन्तर्यामी हुनुहुन्छ।'

पाँचौं श्लोकमा अनन्यपूर्णा सात्त्विकी गोपीनीले भगवानको कृपा मागिन्। आफ्नो हात हाम्रा शिरमा पसारी राखिदिनुहोस्।

छैटौं श्लोकको अनन्यपूर्वा सात्त्विक तामसी गोपिनीले कृष्णमाथि आफ्नो अधिकार जमाएर धृष्टतापूर्वक प्रार्थना गरिन्।

गोपीगीतको उपसंहार गर्दै महाप्रभु श्री बल्लभाचार्यजीले सुबोधिनीमा भन्नुभएको छ—

**न हिसाधन सम्पत्या हरिस्तुष्यति कस्य चित्।**
**भक्तानां दैन्यमेवैकं हरितोषणसाधनन्॥**

भगवान् साधन-सम्पत्तिबाट सन्तुष्ट र प्रसन्न हुनुहुन्न। भक्तहरूको दीनता मात्र एकमात्र साधन हो जो उहाँलाई प्रसन्न गर्न सक्दछ।

गान र प्रलाप निष्फल भएकोले गोपिनीहरूमा दैन्यभाव जाग्यो र रुन थाले।

गोपीगीत सुनेर श्रीकृष्ण प्रत्यक्ष हुनुभएको थियो। त्यसैले वैष्णवहरू यस गोपीगीतको पाठ गर्छन्, तर केही सम्प्रदायका अनुसार भगवान्‌को प्रत्यक्ष दर्शन भएपछि गोपीगीतको गान निषिद्ध छ। गोपीगीत विरहगीत हो, मिलनगीत होइन।

गोपिनीहरूले कृष्णलाई कप्टी भनेका थिए। सधैं यस्तो भन्नु हुन्न।

भगवान्लाई दया आएन र प्रकट हुनुभएन अनि भगवद्-विरहमा प्राण छटपटाउन थाल्यो। लोकलाजको त्याग गरेर गोपिनीहरू रुँदै बोलाउन थाले, 'हे गोविन्द ! हे दामोदर ! हे माधव !'

परमात्मा पूर्ण प्रेम चाहनुहुन्छ। विरहातुर नबनीकन परमात्मा भेटिनुहुन्न। कामान्ध कामका पछि, लोभी धनका पछि र भक्त भगवान्का पछि बौलाहा हुन्छन्। जबसम्म जीव संसारका जड़ पदार्थहरूका साथ प्रेम गर्दै रहन्छ तबसम्म ईश्वरलाई दया आउँदैन। परमात्मालाई प्रसन्न गर्ने साधन त्यही हो जो जीव विरह व्याकुलता भएर भगवान्का निमित्त एकान्तमा आँसु बगाउँदै रहोस्।

कृष्ण प्रकट हुनुभयो अनि सबैलाई आनन्द भयो।

'कोही मानिस प्रेम गर्नेसँग प्रेम गर्छन्, कोही प्रेम नगर्नेसँग प्रेम गर्छन् र केही यस्ता पनि छन् जो कसैसँग पनि प्रेम गर्दैनन्।'

प्रेमदातासँग प्रेम गर्ने स्वार्थी हो। बालकले प्रेम नगरे पनि उसका पिता उसँग प्रेम गरिहाल्छन्।

अवधूतकोटिका महात्मा सन्त ब्रह्माकार वृत्ति राख्दछन्। त्यसकारण उनीहरू ईश्वरका सिवाय अन्य कसैसँग प्रेम गर्दैनन्।

गोपिनीहरूले कृष्णसँग सोधे—'तपाईं यी तीनै प्रकारहरूमध्ये कस्ता प्रकारका प्रेमी हुनुहुन्छ ?'

कृष्ण—'सखी, म यी सबै प्रकारबाट भिन्न छु। तिमीहरूको प्रेम म जान्दछु, मेरा वियोगले तिमीहरूलाई दुःख भयो तर विशिष्ट योगको दान गर्नका निमित्त मैले वियोग दिएको थिएँ।'

संयोगावस्थाको अपेक्षा विरहावस्थामा प्रेमपात्रका साथ तादात्म्य धेरै हुन्छ, त्यसकारण वियोगलाई एक विशेष प्रकारको योग भनिन्छ। यस योगको दान गर्नका निमित्त मात्र श्रीकृष्ण अदृश्य हुनुभएको थियो र यस प्रकार गोपिनीहरूलाई धेरै नजिक ल्याइयो। गोपिनीहरू यति तल्लीन भए जो विरह भएर पनि अन्तरङ्गमा उनलाई संयोगको अनुभूति भयो।

'यस वियोगमा तिमीहरूभन्दा मलाई ज्यादै कष्ट सहनुपऱ्यो। तिमीहरू एक-अर्कालाई सान्त्वना दिन्थ्यौ। व्याकुल ललितालाई विशाखा सान्त्वना दिन्थिन्। विशाखालाई चन्द्रवती तर यता म एक्लै रोइरहन्थें। मलाई सान्त्वना दिने कोही पनि थिएन।'

सखी, तिमीहरू सबै मेरै हौ तर तिमीहरूलाई अभिमान भएर आएको थियो। त्यस अभिमानलाई मेटाएर तिम्रो मन आफूमा केन्द्रित गर्नलाई तिमीहरूलाई विरहाग्निमा तडपाउनुपऱ्यो। मेराप्रति कुभाव नराख। देवहरूको आयु लिएर तिमीहरूको सेवा गरे भने पनि तिमीहरूका प्रेमको ऋण चुकाउन सक्ने छैन। अतः म तिमीहरूलाई छोड़ेर कहीं पनि जाने छैन।

जीवमात्र गोपिनी हो। त्यो विशुद्ध भएर नम्रतासाथ प्रभुका नजिक गयौ भने उहाँले अवश्य दर्शन दिनु हुनेछ।

'म तिमीहरूका जन्मजन्मान्तरको ऋणी छु। म तिमीहरूका ऋणबाट कहिल्यै उऋण हुन पाउने छैन।'

मेरा सखीहरू हो, तिमीहरूले मेरा निमित्त घर-गृहस्थीका ती जंजीरहरू छिनाल्यौ, जसलाई योगीजन पनि सजिलैसँग छिनाल्न सक्दैनन्। हाम्रो यो मिलन सर्वथा निर्मल र निर्दोष छ। यदि मैले अमर जीवन र अक्षर देहद्वारा अनन्तकालसम्म तिमीहरूको सेवा-प्रेम-त्यागको ऋणलाई मेटाउन खोजे पनि मेटाउन पाउने भइनँ। तिमीहरूले आफ्नो सौम्य स्वभावले मलाई उऋण गर्न सक्छौ।

न पारयेऽहं निरवद्यसंयुजां स्वसाधुकृत्यं विवुधायुषापि वः।
यामा भजन् दुर्जर गेह शृङ्खलाः संवृश्च्यतद् वः प्रतियातुसाधुना॥

(भा० १०-३२-२२)

भगवान् रामावतारमा हनुमानजीको ऋणी हुनु भयो र कृष्णावतारमा गोपिनीहरूको। श्रीरामचन्द्रजीले हनुमानलाई भन्नुभएको थियो—

प्रति उपकार करउँ का तोरा।
सनमुख होइन सकत मन मोरा॥

भगवान्लाई आफ्नो ऋणी बनाइलेऊ। उनीसँग केही माग्नेनौ भने उहाँ तिम्रो ऋणी हुनुहुने छ।

श्रीकृष्ण गोपिनीहरूको ऋणी हुनुहुन्छ र वृन्दावन छोड़ेर जान सक्नुहुन्न।

वृन्दावनं परित्यज्य पादमेकं न गच्छति।

द्वारिका लीलामा मर्यादा छ, गोकुल-लीलामा प्रेम।

श्रीकृष्ण रसस्वरूप हुनुहुन्छ। यो मिलन पाञ्चभौतिक शरीरको थिएन, किनभने त्यो विरहाग्निमा डढ़िसकेको थियो। यो तर आत्माको रसात्मासँग मिलन थियो। गोपिनीहरू ईश्वरसँग मिल्नका निमित्त छटपटाउँथे। वियोगमा प्राण छटपटाउँछ। तब जीव ईश्वरसँग भेट गर्न पाउँछ, परमात्मासँगको वियोग सबैभन्दा ठूलो रोग हो। श्रीकृष्णको विरह कठिनतम दुःख हो। प्रभुका विरहमा संसारका साथ खेलवाड़ गर्नु जस्तो महापाप अरू कुन होला? विष्ठाको कीरा विष्ठामै रमाउँछ। जीवको पनि यही दशा हुन्छ। उसलाई विषयमै सुख देखिन्छ। जीव भोगी हो। त्यसैले दुःखी भइरहन्छ।

जीव जबसम्म मिलनका निमित्त व्याकुल हुँदैन, तबसम्म ईश्वर भेटिनुहुन्न।

रासलीलामा अद्वैत छ।

योगको अर्थ हो जीव र ईश्वरको अर्थ हो संयोग। रासलीला महायोग हो।

वियोगाग्निमा गोपिनीहरूको पाञ्चभौतिक शरीर डढ़ेर गयो। उनीहरू रसस्वरूप प्रभुको चिन्तन गर्दथे। यस्तो भएपछि मात्र प्रभुसँग मिलन हुन पाउँछ। शरीर मिलन हो, त्यो नडढ़ीकन

उसको प्रभुसँग मिलन हुँदैन। सतत भजन गरिरहनाको कारण भक्तहरूका शरीर दिव्य हुन्छन् र उनले ईश्वरलाई प्राप्त गर्न सक्छन्।

यस लीलामा प्रेम छ, मोह छैन। प्रेम अन्तरङ्गमा हुन्छ, मोह बहिरङ्गमा। प्रेमलाई त्यागको अपेक्षा छ, मोहलाई उपभोगको। प्रेम विरहबाट पुष्ट हुन्छ, मोह संयोगबाट। वियोगमा प्रियपात्रको सतत स्मरण भइरहन्छ। वियोग विशिष्ट प्रकारको योग हो। श्रीकृष्णले यस्तो प्रकारको विशिष्ट योगदान गोपिनीहरूलाई दिनुभयो।

रासलीलामा लौकिक कामाचार थिएन, सबैको अवस्था एघार वर्षभन्दा मुनिको थियो। यस्ता साना बालकहरूका मनमा कामवासना कसरी हुन सक्छ?

भागवतका कथाकार श्रीशुकदेवजी ब्रह्मनिष्ठ महापरमहंस मुनि हुन् जसले लौकिक कामको कुरा गर्नै सक्दैनन्। भागवतका श्रोता या परीक्षित मृत्युका किनारमा बसेर कथा श्रवण गरिरहेका थिए। उनका निमित्त पनि कामाचारको कुरा सुन्ने कुनै विशेष प्रयोजन हुन सक्दैन थियो। आसन्न मृत्यु व्यक्तिले कामाचारको कुरा किन सुन्ने?

रासलीलामा श्रीकृष्ण र गोपिनीहरूको दैहिक मिलन थिएन। गोपिनीहरूको पाञ्चभौतिक शरीर उनका आफ्ना-आफ्ना घरमा थिए। यहाँ उनको सूक्ष्म देहसँग मिलन थियो, आत्ममिलन थियो।

नासूयन् खलु कृष्णाय मोहितास्तस्य मायया।
मन्यमानाः स्वपार्श्वस्थान् स्वान् स्वान् दारान् व्रजौकसः॥

(भा० १०-३३-३८)

हे राजन्! भगवान्‌का मायाबाट मोहित व्रजवासी गोपाल आफ्ना पत्नीहरूलाई आफ्नै नजीक छन् भन्ठानेर श्रीकृष्णाका तर्फ दोष-दृष्टिले हेर्दैनथिए। उनको पनि आज श्रीकृष्णाका प्रति द्वेष उत्पन्न भयो।

यस लीलामा गोपिनीहरूका सूक्ष्म, आध्यात्मिक शरीरको ईश्वरसँग मिलन थियो।

सूक्ष्म शरीर सत्र तत्त्वहरूले बनेको हुन्छ। पञ्च प्राण, पञ्चज्ञानेन्द्रिय, पञ्च कर्मेन्द्रिय मन र बुद्धि यी सबै मिलेर सत्र तत्त्व भए। जब मन मर्छ, तब सूक्ष्म शरीर पनि मर्छ र भक्ति रस पाइन्छ। शुकदेवजीले स्पष्टसँग भन्नुभएको छ—भौतिक देह विलयका पश्चात् मात्र गोपिनीहरूलाई रासलीलाको लाभ भएको थियो। यो तर जीवको मन परमात्माका साथ मिलन थियो।

गोपिनीहरूका निमित्त प्रयोग भएका विशेषण हेर्नुहोस्—

व्रजस्त्रियः कृष्णगृहीतमानसाः।

यहाँ मन शब्दको प्रयोग छ, शरीर शब्दको होइन्। श्रीकृष्णले जसको मन हरिलिएको छ, तिनै हुन् गोपिनीहरू।

यस लीलाको चिन्तन गर्नाले कामविकार नष्ट हुन्छ, भागवतको दशौं स्कन्धको तेत्तीसौं अध्यायको चालीसौं श्लोकलाई हेर्नुहोस्—

भक्तिं परां भागवति प्रतिलभ्य काम।
हृद्रोगमाश्वपहिनोत्यचिरेण धीरः॥

व्रजवासी नारीहरू र भगवान्का साथको क्रीडालाई जो धीर मनुष्य श्रद्धापूर्वक श्रवण र वर्णन गर्दछ, त्यो भगवान्को परमभक्ति पाएर हृदयको रोगरूप कामदेवबाट मुक्त हुन्छ।

आरम्भमा गोपिनीहरूले भनेका छन्—'हामीले सबै विषयहरूलाई त्याग गरेर आएका छौं, यतिसम्म कि आफ्नो स्त्रीत्वको पनि हामीले त्याग गरेको छ। उनीहरूले अन्तमा भनेका छन् हाम्रो हृदयमा यदि कुनै मालिन्य, काम भए मेटाइदिनू। गोपिनीहरूको कामसम्बन्धी वचनलाई केही मानिस मन पराउँदैनन् तर उनका आरम्भ र अन्तका वचनमा पनि ध्यान दिनुपर्छ।'

रासलीलाको श्रद्धापूर्वक श्रवण र वर्णन गर्नाले भगवान्का चरणमा पराभक्ति प्राप्त हुन्छ र छिट्टै त्यो हृदयरोग ( काम विकार )-बाट मुक्ति दिलाउँछ। तिनको कामभाव सदाका निमित्त नष्ट भइहाल्छ।

रासलीलाको पहिलो अध्यायमा परमात्माको आत्मासाथ रमण हुन्छ जुन प्रकार प्रभुका सर्वाङ्गहरूका साथ रमण छ।

भागवतकारलाई थाहा थियो मानिसले कैयौं आशंकाहरू गर्लान्। त्यो उनीहरूले स्पष्ट पनि गरिदिएका छन्। राजा परीक्षित्ले पनि केही प्रश्न गरेका थिए।

परीक्षित्ले शुकदेवजीसँग सोधे—'गोपिनीहरूले कृष्णलाई आफ्ना परम प्रियतम मान्दथे। उनमा ब्रह्मभाव थिएन अर्थात् उनीहरू प्राकृत गुणहरूमा आसक्त थिए। तब गुणहरूका प्रभावरूप यस संसारबाट उनको निवृत्ति कसरी हुन गयो ?'

शुकदेवजी—'ईश्वरको चिन्तन गर्दा-गर्दा जीव स्वयं ईश्वर बन्न जान्छ।'

शिशुपाल द्वेषभावबाट प्रभुको चिन्तन गर्दै प्राकृत शरीरलाई त्यागेर उहाँको पार्षद बनेको थियो। त्यसो हुनाले गोपिनीहरू कृष्णमय बन्नमा कुनै आश्चर्य भएन।

'राजन् ! रासका श्रीकृष्णको रमण गोपिनीहरूका शरीरका साथ भएको होइन। उनका पाञ्चभौतिक शरीर तर आफ्ना-आफ्ना घरमा थिए। यहाँ परमात्माका साथ गोपिनीहरूका आधिदैविक, आध्यात्मिक स्वरूपको मिलन हो।'

शरीर जहाँ भए पनि मिलन तर मनबाटै हुने हो।

शरीर जहाँ पनि होस् गति तर मनको भावनाको हो। हामीले यस विषयमा वृत्त र अवृत्त नामक दुइ ब्राह्मणहरूका दृष्टान्त पाएका छौं।

तेत्तीसौं अध्यायमा राजा परीक्षित्‌ले एउटा अर्को प्रश्न गरेका छन्—'पूर्णकाम हुँदा-हुँदै पनि श्रीकृष्णले यस्तो निन्दनीय कृत्य किन गरे?'

शुकदेवजी—तपाईंको मनमा यस्तो अमङ्गलमयी कुरा कसरी आयो, यो कुनै स्त्रीपुरुषको मिलन थिएन, जीव र ईश्वरको मिलन थियो।

यो रासलीला छ महीनासम्म चल्दथ्यो। के छ-छ महीनासम्म व्रजनारीहरू आफ्ना घरबाट बाहिर बस्न सक्थे? यसै कुराले सिद्ध हुन्छ यो जीव र प्रभुको मिलन थियो। परमात्माको लीला अगम्य छ।

ब्रह्मको ब्रह्मका साथ विलास भनेकै रास हो।

कृष्ण गोपिनीहरूमा मात्र होइन, गोपिनीहरूका पतिमा, सबै देह धारीहरूमा आत्मरूपबाट राज भएको छ। उहाँ ईश्वर सबैको साक्षी र परम पति हुनुहुन्छ।

भगवान् श्रीकृष्ण आत्मा हुनुहुन्छ। राधाजी आत्माकारवृत्ति हुनुहुन्छ। गोपिनीहरू आत्माभिमुख वृत्तिहरू हुन्।

सानो बालक निर्विकार भावबाट ऐनामा देखिएको आफ्नो प्रतिविम्बसँग खेल्दछ। यस्तै प्रकार यस लीलामा आत्माका साथ रमण भएको छ।

रमे रमेशो ब्रजसुन्दरी भिर्यथार्भकः स्वप्रतिविम्ब विभ्रमः।

यस रासलीलाको चिन्तन-मनन गर्नाले बुद्धि स्थिर हुन्छ। बुद्धि चञ्चल छ। पाँच विषय उसमाथि अधिकार राख्न खोज्छन्, तर बुद्धि एक ईश्वरलाई मात्र अर्पण गर्नुपर्ने हो। जीवको सच्चा पति ईश्वर हो।

गीतामा अर्जुनसँग श्रीकृष्णले भनेको छ—'तिम्रो बुद्धि मलाई देऊ।'

काम अदृश्य छ। यस अदृश्य कामलाई मार्नु छ। ऊ सबैलाई मारिरहन्छ।

क्रोध, लोभ आदि गइहाल्छन् तर अनेक अनर्थको मूल कामलाई जान बड़ो कठिन छ। जसको काम मऱ्यो, उनको संसार पनि मर्दछ, ऊ मुक्त भइहाल्छ।

यदि कामलाई जित्नु छ भने केवल दूध र चामल मात्र भोजन गर। रात्रिका समय गोपालजीको पूजा र रासलीलाको पाठ गर।

रात्रिको दोस्रो प्रहरमा कामले ज्यादा सताउँछ। त्यस समय (बाह्र बजे) श्रीकृष्णको स्मरण र पूजा गऱ्यौ भने काम नष्ट हुनेछ।

कुनै भक्तले सोध्यो—'श्रीकृष्णले रातको बाह्र बजे किन जन्म लिनुभएको थियो?'

भगवान्‌ले स्वयं उत्तर दिनुभयो—'यदि मेरो कुनै भक्तले त्यस समय मेरो सेवापूजा गऱ्यो भने ऊ कामको अधीन हुन पाउने छैन। जीवलाई कामबाट बचाउनलाई मात्र मैले रातको बाह्र बजे जन्म लिएको हुँ।'

भागवत भवरोगको औषधि हो। सबै व्रत नियमहरूको विधिपूर्वक पालन गर्नुपर्छ। महापुरुषहरू वेदशास्त्रको मर्यादाको उल्लङ्घन कहिल्यै गर्दैनन्। स्वयं श्रीकृष्ण ब्राह्ममुहूर्तमा ( प्रातः ४ बजे ) ओछ्यान छोड्नुहुन्थ्यो।

महाप्रभु बल्लभाचार्यजी त्रिकालसन्ध्या सँधै गर्नुहुन्थ्यो। एक पटक उहाँ जगन्नाथजीको मन्दिरमा जानुभयो। एकादशीको व्रत थियो। प्रसाद पाइयो लड्डुको। अब के गर्ने ?

समस्या आइपर्‍यो। प्रसाद लिएका खण्डमा एकादशीको व्रत खण्डित हुने र प्रसाद ग्रहण नगरेमा प्रभु प्रसादको अपमान हुनेभयो।

उहाँले सम्पूर्ण रात प्रसादलाई हातैमा रहन दिनु भयो र उसको गुणानुवाद गर्दै रहनुभयो। द्वादशीका दिन बिहान प्रसाद ग्रहण गर्नु भयो।

महाप्रभु वल्लभाचार्यजी भन्नुहुन्छ—विषय सुखमा फँसेको विलासीका निमित्त यो पुष्टिमार्ग निषिद्ध छ।

## विषयाक्रान्त चित्तानाम् नावशः सर्वथा हरेः।

श्रीकृष्ण कस्ता संयमी हुनुहुन्थ्यो, त्यसको वर्णन हामीले माथि बड़ो विस्तारसाथ पढ़ेका छौं। उहाँ गोकुलमा जुत्ता, सिएको लुगा, अस्त्र-शस्त्रहरूको उपयोग गर्नुहुन्नथ्यो र मुण्डन पनि गराउनु हुन्नथ्यो।

प्रभुको गोकुल-वृन्दावनलीला यस प्रकार शुद्धप्रेमको लीला हो। वृन्दावनमा केवल बाँसुरी बजाउनु हुन्छ त्यो वंशी शुद्ध प्रेमकै हो।

केही महात्मा केवल रासलीलासम्मको भागवत कथा सुन्न चाहन्छन्। किनभने यसभन्दा अगाड़ि मथुराको रासलीला हो, जसमा युद्ध, वध, विवाह आदिको कुरा छ। मथुरा र द्वारिकामा श्रीकृष्ण मधुर बाँसुरी बजाउनु हुन्न, शङ्ख फुक्नु हुन्छ।

वेदहरूका मन्त्र भोगपरक छँदाछँदै पनि तिनको तात्पर्य न्यायपरक छ, प्रभुका साथ तादात्म्य पाइने छ।

वेदान्त अनुभवको विषय भयो, केवल वाणी-विषयको होइन।

यदि गोजीभित्रको पाँच रुपियाँको नोट हरायो भने परीक्षा भइहाल्छ जो वेदान्तका मन्त्रलाई सुगाको जस्तो बोली लिने वास्तवमा वेदान्ती हो वा होइन। पाँच रुपियाँको नोटको कुनै मूल्य छैन तर त्यस नोटका निमित्त अतिशय आसक्ति हुनु खराब हो।

वेदान्तका सिद्धान्तहरूको अनुभव सजिलो छैन। गोपिनीहरूले भक्तिको सरल मार्ग बताएका छन्। मानिसहरूलाई प्रेमलक्षणाभक्तिको मार्ग देखाउनका निमित्त मात्र श्रीकृष्णावतार हो।

प्रतिदिन रात्रिमा रासलीलाको चिन्तन गर। ठूला-ठूला महात्मा पनि यस काम-नाशका निमित्त रात्रिस्नान गरेर यस रासपञ्चाध्यायीको पाठ गर्छन्। यो लीला चिन्तनीय छ, अनुकरणीय होइन। यस लीलाद्वारा भगवान्ले कामको पराभव गर्नुभएको हो। काम सबैभन्दा ठूलो रोग हो। कामले क्रोधलाई जन्म दिन्छ। कामको विनाश भएपछि कृष्ण नजिक आउनुहुनेछ।

राति सुत्नुभन्दा अघिबाट स्नान गर। गृहस्थको ओछ्यान शुद्ध हुँदैन। पवित्र कम्बलमा बसेर, रासलीलाको पाठ गरियो भने काम मर्छ।

जो वक्ता-श्रोताले यस लीलाको मनन गर्ला त्यसको काम नाश हुनेछ।

रासलीला पछि विद्याधर सुदर्शनको कथा आउँछ, यस्तो किन होला ?

आफ्नो सौन्दर्यको अभिमान कहिल्यै नगर। सत्कर्म दीनता ल्याउनका निमित्त हो।

प्रभुलाई दीनता प्यारो छ। उद्धत व्यक्ति प्रभुलाई मन पर्दैन। कुनै पनि जीवलाई क्षुद्र मान्ने व्यक्तिको भक्ति कहिल्यै फलवती हुँदैन। जहाँ-जहाँ दृष्टि पुग्छ त्यहाँ ईश्वरको दर्शन गर्नु दीनता हो। दीनता प्रभुलाई प्रसन्न गर्ने साधन हो।

रावणको तपस्या पनि केही कम थिएन, तर उसमा भोगविलासको लालसा थियो, दीनता थिएन।

आफूलाई निरभिमानी मान्नु पनि सूक्ष्म रीतबाट अभिमान हो।

चौंतीसौं अध्यायमा सुदर्शन-विद्याधरको कथा छ।

शिवरात्रिको पर्व थियो। नन्दबाबा अम्बिकावनको यात्रामा गएका थिए। पुष्कल दान दिइयो। रात्रिका समयमा सबै सरस्वतीको किनारमा बास बसे। त्यहाँ रहेको अजिङ्गरले नन्दबाबालाई निल्न थाल्यो जो पूर्वजन्ममा सुदर्शन नाउँको विद्याधर थियो। श्रीकृष्णको चरणस्पर्शले ऊ मऱ्यो र त्यसबाट एक दिव्य पुरुष उत्पन्न भयो।

भगवान्ले थाहा नपाएजस्तो गरी उसलाई सोध्नुभयो—'तिमी को हौ ?'

त्यस दिव्य पुरुषले भन्यो—'अगिल्ला जन्ममा सुदर्शन नाउँ गरेको विद्याधर थिएँ। मलाई आफ्नो सुन्दरतामा अभिमान थियो। कुरूपहरूलाई देखेर मलाई हाँसो उठ्थ्यो। मैले एकपटक काला-कुप्रिएका ऋषि अङ्गिरालाई देखेर आफ्नो हाँसो थाम्न सकिनँ।'

ऋषि क्रोधले आगो भए—'ए ! उद्धत ! मेरो शरीर भलै कुप्रो होस्, तर हृदय उज्ज्वल छ। तेरो कुरा बिलकुलै उल्टो भयो। मैले सत्सङ्गद्वारा आफ्नो कृति सुधारेको छु। तेरो तन उज्यालो छ तर मन भने कालो छ। म तँलाई श्राप दिन्छु तँ अजिङ्गर भइहाल्।'

शरीरमा कुनचाहिँ सुन्दरता छ ? यो रगतमासु, हाड़ र छालाले बनेको छ। यदि बाटामा हाड़ तेर्सिएको देखियो भने मानिस घृणा गरेर कोल्टे लाग्छन्। त्यसकारण शरीरलाई सुन्दर भनी नठान।

कसैको आकृति र छालाको रङ्गलाई नहेर। छालाको चिन्तन गर्नु पाप हो। महात्मा रङ्ग-रूप-आकृति होइन कृति हेर्छन्। आकारले तर मनमा विकार उत्पन्न गराइदिन्छ।

संसारको, शरीरको, सौन्दर्यको चिन्तन गर्नाले मन चञ्चल हुन जान्छ। परमात्माको सौन्दर्यको विचार गर्नाले मन शान्त हुन्छ।

शरीर र संसारलाई सुन्दर मान्यौं भने पाप शुरु भइहाल्छ। ईश्वरको सौन्दर्यको कल्पनाद्वारा भक्ति शुरु हुन्छ। ज्ञानको दृष्टिबाट सौन्दर्य कसैको देह या संसारमा छैन। सौन्दर्य तर भिन्न छ।

सौन्दर्य मनमा हुन्छ, हृदयमा हुन्छ, रूप-रङ्ग-आकृतिमा होइन। व्यक्तिको हृदयको सौन्दर्यलाई हेर, शरीरको होइन।

सत्कर्म गरेपछि नन्दबाबा सुत्नुभयो तब अजिङ्गरले उनलाई निल्न थाल्यो। यसको अर्थ यो हो सत्कर्म गरेपछि जाग्राम बस्नुपर्छ। सत्कर्म गरिसकेपछि मानिस आत्मप्रशंसा, प्रमाद, निष्क्रियतामा डुब्दछन्। त्यसकारण अभिमानरूपी अजिङ्गरले उसलाई निल्न थाल्छ। रात्रिको समय जाग्नाको अर्थ हो आफूले केही गरेको होइन, यस्तो मान्नु र अनुभव गर्नु। सत्कर्म भयो भने मान प्रभुको कृपाबाट यी सबै कुरा हुनसकेको छ। प्रभुले मलाई निमित्त बनाएर यो सत्कर्म गर्नुभएको हो।

अगाड़ि शङ्ख चूड़वधको कथा आउँछ।

गोपिनीहरू रातका समयमा श्रीकृष्णका साथ रासलीला गर्थे र दिनमा पनि श्रीकृष्णलीलामा मस्त रहन्थे। युगलगीत र वेणुगीतको भाव समान छ।

मनुष्य जब केही नगरी बेकार बस्दछ तब उसका मनमा पाप आउँछ। रात्रिमा जप गर। निवृत्तिका समय मनलाई काम सुख, द्रव्य आदितर्फ जान नदेऊ।

यो मन चञ्चल बाँदरजस्तो छ। एकलै र केही नगरी बस्नुपर्‍यो भने कुदाकुद गर्न थाल्छ। उसलाई सदा सत्कर्म, शुभ चिन्तनमा लगाइराख। केही काम नभएका खण्डमा ऊ खराब विचारमा अल्झिहाल्नेछ। त्यसकारण सदा भगवान्‌को स्मरण र सत्कार्य गर्दै रहू। आँखा, नाक, कान, जिब्रो, मन सबैलाई भक्तिमा लगाइराख।

एउटी ब्राह्मणकी पत्नीको मृत्यु भयो। उनी विचरा दुःखी भए। घरमाससाना केटाकेटी थिए, हेरचाह गर्ने पनि कोही भएनन्। उनले हार मानेर आफ्नो मित्रलाई दुःखको कहानी सुनाए। तब मित्रले भूत प्रसन्न गर्ने मन्त्र दिए। ब्राह्मणले मन्त्र जप गरेर भूतलाई प्रसन्न गरे।

भूतले प्रसन्न भएर भन्यो—'म तिम्रा सबै कामकाज गर्नेछु तर म बेकाम बस्न सक्दिनँ। यदि मलाई केही काम दिन सकेनौ भने तिमीलाई खानेछु। भूतले सबै काम केही मिनेटमै सक्थ्यो। ब्राह्मण विचार गर्न लागे यसलाई काम दिन नसकेमा मलाई खाइदिने भयो। यसबारेमा उनले मित्रसँग कुरा गरे। मित्रले भने—आफ्नो आँगनमा एउटा ठूलो बाँस गाड़िदेऊ र भूतलाई भन

कामकाज सकिएपछि बाँसमा चढ्ने ओर्लने गर्नू।' ब्राह्मणले त्यसै गरे। भूतले चाल पायो यो मेरो पनि गुरु निस्क्यो। त्यो शान्त भयो।

मन पनि त्यही भूतजस्तै हो। यसलाई काम दिएनौ भने उसले तिमीलाई खाइदिनेछ। जबसम्म निद्रा लाग्दैन ओछ्यानननजीक नजानु र काममा लागिरहनु पर्छ।

जसलाई मनको चञ्चलता भान भयो, उसलाई आत्मदर्शन भएको छ, यस्तो मानेको खण्डमा कुनै आपत्ति छैन। किनभने—

एको देवो मनः साक्षी।

गोपिनीहरू सारा दिन घरको कामकाज गर्थे। रातमा जम्मा भएर कृष्णलीलाको चिन्तन गर्थे, कीर्तन गर्थे।

ध्यान एक्लै गरियोस् तर कीर्तन सारा घरका मानिस मिलेर गर्नू। मानिस घरलाई स्वच्छ राख्छन् तर मनतर्फ ध्यान दिँदैनन्। राती सुत्नुभन्दा अघि घरका सबै साना-ठूला एकसाथ बसेर भजन-कीर्तन गरेमा बड़ो असल हुन्छ। घर पवित्र हुनेछ।

कथा-कीर्तन भक्ति हो। कीर्तनका तीन प्रकार छन्—नामसंकीर्तन, गुणसंकीर्तन र लीला-संकीर्तन। घरमा प्रत्येक दिन संकीर्तन हुनुपर्छ।

'ए सखी, मेरा कृष्ण पनि कति किसिमबाट बाँसुरी बजाउँछन्। जब उनी दाहिने गालातर्फ राखेर बाँसुरी बजाउँछन् तब गोपिनीहरू तन्मय हुन्छन्, आकाशतर्फ दृष्टि गरेर बजाउँछन् तब पातालका नागकन्या हल्लन थाल्छन्।'

दिनमा कृष्णलीलाको वर्णन र कीर्तन गरेर गोपिनीहरू ब्रह्मसम्बन्ध कायम गरिराख्छन्।

ब्रह्मसम्बन्धलाई बराबर कायम राख्नका निमित्त प्रयत्न गरियोस्। एकक्षण मात्र पनि जड़ वस्तुतर्फ ध्यान जानदिनुहुन्न।

अब अक्रूरागमनको प्रसङ्ग आउँछ।

एक पटक नारदजीले कंसछेउ गएर भन्नुभो तिमी बड़ा सोझा रहेछौ। यी वसुदेवले तिमीलाई उल्लू बनाइदिएको छ। तिनले आफ्नो आठौं पुत्रलाई नन्दजीकहाँ छोड़ेर नन्दजीकी पुत्रीलाई यहाँ ल्याएको छ। श्रीकृष्ण देवकीका पुत्र हुन् र बलराम रोहिणीका। यी दुवैले मिलेर तिम्रा कति सेवकहरूलाई मारिदिएका छन्। कंसले जब यी कुराहरू सुन्यो तब रीसले चूर भयो र वसुदेवलाई मार्नका निमित्त तयार भयो।

जसले वैरभाव बढ़ाउँछ, त्यो वैष्णव होइन।

नारदजी सल्काउन पनि जान्नुहुन्छ र निभाउन पनि। हामी जस्ताहरू सल्काउन मात्र जान्दछौं। नारदजी कंसलाई संझाउन थाल्नुभयो—'वसुदेवलाई मारेर के लाभ ? तिम्रो काल श्रीकृष्ण मात्र

हो। यदि तिमी वसुदेवलाई मार्नका निमित्त गयौ भने श्रीकृष्ण समाचार पाउनासाथ भागिजाने छन्। त्यसकारण तिमी कृष्णलाई मार्ने विचार गर।'

कंस सोच्न थाल्यो 'अब कृष्णलाई कुन उपायले मार्नुपर्ला।' ब्राह्मणले राजासँग भने— तिमी धनुष-यज्ञ गर। यस यज्ञले यजमानको आयु बढ्छ र शत्रु मर्दछ। तर यदि यज्ञको आरम्भका पाँचौं दिनमा विघ्न आयो भने यजमान मर्छ। त्यस समयमा कंसका केही पहलवानहरू आए। उनले भने—'अरे त्यो फुच्चे केटाले के गर्ला? उसको कालका पनि काल हामी छौं।'

कंसले यज्ञका बहानाबाट नन्दलाई पुत्र-सहित निमन्त्रण पठाउने सोचेर पहलवानहरूलाई भन्यो, 'तिनीहरू यता आउँदैमा काम तमाम गरिदिनू। तिनीहरू मेरा शत्रु हुन्।'

## विनाशकाले विपरीत बुद्धि।

काल समीप आइपुगेपछि पुण्यशाली, पुण्यको काममा लागिहाल्छ र पापी क्रोधी भइहाल्छ।

'राम-कृष्णलाई बोलाउनका निमित्त कसलाई पठाऊँ? अँ! अक्रूरलाई पठाऊँ, अक्रूर विश्वासघात गर्न सक्दैनन्।'

जो क्रूर हुन्छ, उसले श्रीकृष्णलाई कसरी ल्याउन सक्ला? कामसुखको चिन्तन गर्नेवाला मन क्रूर हुन्छ। अक्रूर बनेर जो जान्छ उसैले श्रीकृष्णलाई आफ्ना साथ ल्याउन सक्छ। जो क्रूर छैन ऊ अक्रूर हो।

कंसले अक्रूरजीलाई बोलाएर भन्यो—'काका, तपाईंले एउटा काम गर्नुपर्‍यो।' नारदजी भन्नुहुन्छ 'श्रीकृष्ण देवकीको आठौं पुत्र हो, जसले मलाई मार्ने भएको छ, म आफ्नो यस काललाई मार्न चाहन्छु। तपाईं गएर नन्दबाबालाई धनुष-यज्ञमा आउनुहोस् भनेर निम्ता दिनुहोस् र कृष्ण-बलराममलाई पनि आफ्ना साथै लिइआउनुहोस्। अँ, कसैलाई यो कुरा थाहा नहोस् म उसलाई मार्न चाहन्छु। बस्, मेरो सानो काम गरिदिनुहोस्।'

कंस साक्षात् मृत्युलाई निम्ता पठाइरहेछ। मानिसले बोलाएपछि मृत्यु अवश्य आउँछ। कंस मर्नका निमित्त अधीर भइरहेछ र काललाई बोलाइरहेछ। ज्यादा बाँच्न र छिटै मर्नको इच्छा नगर। कहिले मरूँला भनेर यस्तो कहिल्यै नसोच। जीवन कस्तो हुने हो यही सोच।

व्यासको शिष्य दासको कथा सुन्नुहोस्।

व्यासको शिष्य दास गुरुजीको बहुतै सेवा गर्थ्यो। उसले एक दिन गुरुजीलाई सोध्यो, 'म यो जान्न चाहन्छु म कहिले मरूँला?' व्यासले उसलाई भन्नुभो 'थाहा पाएर तिमी के गर्छौ? छोड़िदेऊ यो कुरा। दास किन मान्थ्यो र? ती दुवै यमराज छेऊ गए। यमराजले भने—मलाई थाहा छैन। मेरा मन्त्री मृत्युदेवले मात्र भन्न सक्छन्।' 'लौ जाऊँ उनैकहाँ।' तीनैजना मृत्युदेवकहाँ गए। मृत्युले भन्यो—'यो तर प्रारब्धले मात्र भन्नसक्छ।' अब ती चारैजना विधाताकहाँ गए।

विधाताले भने—दासको प्रारब्धमा लेखेको छ जब ऊ व्यास, यमराज र मृत्युदेवलाई लिएर मकहाँ आउला, तब उसको मृत्यु हुनेछ। व्यासजी, यो तपाईंको शिष्य हो। त्यो मर्न नपाओस्। यसैले मैले यस्तो लेखेको थिएँ। अब कुनै उपाय छैन। बस्, अब केही क्षण बाँकी रहेको छ ऊ मर्नमा।

मृत्यु कहिले होला भनेर यस्तो सोच्नु व्यर्थ छ। यो शरीर हरक्षण मरिरहेछ। मर्ने बाँच्नेको विचार धेरै नगर। यी दुवै विचार बाधक हुन्। त्यसकारण यति मात्र सोच आफ्ना हातबाट कुनै पाप नहोस्, परोपकार र पुण्य कार्यमै जीवन व्यतीत होस्।

कंस—'अक्रूरजी, तपाईं भोलि गोकुल जानुहोस् र कृष्ण-बलरामलाई ल्याउनुहोस्। यो कुरा गुप्त राख्नुपर्छ।'

अक्रूरजी—'तिम्रो आज्ञा छ तब म भोलिनै गोकुल जानेछु।'

कंसको मृत्यु नजिक आइरहेको थियो र उसले श्रीकृष्णलाई निम्ता पठायो।

अक्रूर राजसभाबाट निवृत्त भएर घर फर्के, सारा रात निद्रा परेन। उनी कृष्णको दर्शन गर्न अधीर भए।

मुझे लागी लगन, मुझे लागी लगन।<br>
मुझे लागी लगन तेरे दर्शन की॥<br>
जैसे वनमें पपीहा मनमें,<br>
आश करे नित दरशन की॥ ······· मुझे ·······<br>
गले वनमाला मुकुट विशाला,<br>
पीतवसन सुन्दर तन की॥ ······· मुझे ·······<br>
मणि कटि उर चरणन नुपूर,<br>
करमें गदा सुदर्शन की॥ ······· मुझे ·······<br>
ब्रह्मानन्द प्यास मन माँही,<br>
चरण कमल युग परसन की॥ ······· मुझे ·······

प्रातःकालमा अक्रूरजी छिट्टै सन्ध्यादि कर्महरूबाट निवृत्त हुनुभयो। कंसको सुवर्णरथ आउनासाथ अक्रूरजी चढेर गोकुलदिशातर्फ लाग्नुभयो। बाटामा श्रीकृष्णकै विचार गर्दै जानुभइरहेछ। मेरो भाग्य उदायो, आज भगवान्को दर्शन पाउने भएको छु। म अधम, पापी, अपात्र तपाईंको शरणमा आइरहेछु। मलाई आफ्नो गराउनुभएर मेरो जन्म सफल पारिदिनुहोस्।

अक्रूरजीको जस्तै बाटामा प्रभुकै चिन्तन गर्दै रहनुपर्छ। प्रत्येक पाइलामा कृष्णलाई स्मरण गर। आजकल तर मानिस हिँड्दा-हिँड्दै अरूका अनुहार, लुगा, मोटर, पसल आदि हेर्दै हिँड्छन् र उनैका विषयमा विचार गरिरहन्छन्। यसो गरेर के फाइदा होला ? मन अरू बिग्रिएला। मन चाँडै बिग्रन्छ तर सुध्रनमा बडो समय लाग्छ। त्यसकारण भगवान्कै स्मरण गर्दै गरेमा प्रत्येक पाइलामा प्रदक्षिणाको पुण्य पाइनेछ।

अक्रूरजी बाटामा प्रभुलाई मनाउँदै जानुभएको छ। तिमी पनि त्यसै गर। जो व्यक्ति बाटामा भजन गर्दैन, ऊ आँखा र मनले पाप गरिरहेको हुन्छ।

पापी हिँड्दा पनि पाप गर्दै हिँड्छ र पुण्यशाली पुण्य। आउने-जाने मानिस उनका चिल्ला अनुहार, रङ्ग-विरङ्गका लुगाहरूको तड़क-भड़क, मोटर, गाड़ी, पसल आदि सधैँका हुन्। उनका पट्टि दृष्टि कहिल्यै नदेऊ।

जसले भगवान्को कथा सुन्छ उसको भगवानसँग सम्बन्ध जोड़िन्छ।

बाटामा अक्रूरजी परमात्माको स्मरण गर्दै आफ्नो भाग्योदयका विषयमा विचार गर्दै गइरहनुभएको छ—'म जस्तो कामीलाई भगवान्को दर्शन कसरी होला ? तर कृष्णले मलाई आफ्नो तुल्याउनुभएको छ। त्यसकारण कंसले मलाई पठाएको हो। साँझका बखत गौशालामा कृष्णको दर्शन पाइएलाजस्तो लाग्छ। उहाँ गोपालहरूका साथ हुनुहोला। पहिले बलरामलाई वन्दना गरूँला र श्रीकृष्णसँग भनूँला, हजारौं वर्षदेखि छुट्टिएको मेरो जीवले आज तपाईंको भेट गर्न पाइरहेछ।'

हे नाथ, यस जीवलाई आफ्नो तुल्याउनुहोस्। एकपटक यस जीवमाथि कृपा गर्नुहोस्। एकपटक भनिदिनुहोस् तँ मेरो भइस्। मेरो भगवान्को दृष्टि प्रेमले भिजेको छ। उहाँका स्नेहले भरिएका नयनले मलाई पवित्र गरिदिनेछन्। जब म वन्दना गरूँला, उहाँले कृपादृष्टिले मलाई हेर्नुहोला। मेरातर्फ हेरेर मेरा शिरमा आफ्नो बरदहस्त राखिदिनुहुनेछ।

अक्रूरजी यस्तो कल्पनामा डुब्नुभयो र मनमनै उहाँले गोकुल पुगिसकेको मानिलिनुभयो र श्रीकृष्णले उहाँको शिरमा हात फेरिरहनु भएको छ। यस्तो विचार गरेर स्वयं आफ्नो हात आफ्नो शिरमा राख्नुभयो। प्रभुस्मरणबाट यस्तो एकाग्रता भएपछि प्रभु प्रसन्न हुनुहुनेछ।

पवित्र विचार गर्दै रहनाले जीवन सफल हुन्छ। 'मसँग यति धन छ, अब यति अरू जम्मा गर्न पाए मोटर कुदाउँदो हुँ। दुइ वर्ष धूमधामसँग काम चल्यो भने मोटर आइहाल्नेछ। यस प्रकार सुखोपभोगको विचार गर्नेको आत्मशक्ति नष्ट हुँदै जान्छ। पवित्र विचारले मात्र जीवनलाई सुधार्न सक्छौं। सबै आफ्नो मनको होइन, ईश्वरका मनको हुन्छ। पवित्र विचार गर्नाले, प्रभुसँग प्रेम गर्नाले हृदय पवित्र बन्दछ।'

आत्मामा जो शक्ति छ, त्यो परमात्माकै हो। आत्मा र परमात्मा एकै हुन्, पवित्र विचारहरूबाट हृदय पवित्र र शुद्ध हुन्छ। यसैले भनिएको छ।

तन्मे मनः शिवसङ्कल्पमस्तु।

मेरो मनले सदा शुभ सङ्कल्प गरोस्। कसैको पनि कुभलो नचिताऊ, सबैको भलो चिताऊ।

भगवान्ले अक्रूरका सबै शुभ सङ्कल्प पूर्ण गरिदिनुभएको थियो। भगवान्ले शुभ विचारहरूलाई सङ्कल्पहरूलाई पूर्ण गर्नुहुन्छ।

वेदान्त सङ्कल्पको निषेध गर्छ। सङ्कल्परहित बन्न पाउनु बड़ो कठिन छ। यसैले वैष्णवाचार्य भगवान्का निमित्त सङ्कल्प गर्नलाई भन्छन्।

अक्रूरजी सोच्नुहुन्छ, 'कृष्णले उनलाई उनको नाउँबाट बोलाउनुहुन्छ वा हुन्न। त्यसो म पापी हुँ, अधम हुँ, तर वयोवृद्ध हुँ। वसुदेवका भाइ पर्ने पनि हुँ र मित्र पनि। त्यसकारण कृष्णले भरसक मलाई काका भनेर बोलाउनुहुन्छ कि ? यदि उहाँले मलाई काका भनेर उठ्न-बस्न भन्नुहुन्छ भने पनि म उठ्ने छु र बस्ने छु।'

भगवान् जसको आदर गर्नुहुन्न, उसको जीवन व्यर्थ हो। जीवमात्र मानको भोको छ। जगत्को कुरामा ध्यान नदेऊ। कसैले प्रशंसा गर्छ भने सद्भाव जाग्नेछ र कटु बोलेछ भने कुभाव। त्यसकारण मानिसहरूका भनाइको चिन्ता छोड़ेर भगवान्ले के भन्नुहुन्छ, यस्तो चिन्ता गर्दै रहू। भगवान् हामीबाट सद्भावको अपेक्षा गर्नुहुन्छ। उहाँ विचार गर्नुहुन्छ 'यस जीवले पन्द्र दिनसम्म कथा सुनेको छ, त्यसो हुनाले उसको मनको सुधार केही पक्कै भयो होला।'

'ईश्वरका साथ कोही न कोही सम्बन्ध जोड्नैपर्छ।'

गोस्वामी तुलसीदासजी स्वयंलाई रामजीको सेवक मान्नुहुन्थ्यो।

ब्रह्म तू हौं जीव हौं, तू ठाकुर हौं चेरो।
तात, मात, गुरु, सखा तू, सब विधि हेतू मेरो।
तोहिं मोहिं नाते अनेक मानिये जो भावै।
ज्यों ज्यों तुलसी कृपालु चरन-सरन पावैं॥

वृन्दावनका वासी एक निःसन्तान महात्माले विचार गरे, 'जबसम्म योगाभ्यास गरिन्छ, मन स्थिर हुन्छ। प्राणायामको समाप्ति हुनासाथ मन चञ्चल भएर कुदाकुद गर्न थाल्छ। उनले संसारलाई बिर्सिदिने युक्ति गरे। उनले कृष्णलाई आफ्नो बालक भन्ठाने। म नन्द हुँ र ऊ मेरो छोरो हो। ऊ मेरो काखमा बसेको छ, उसले मेरो दाह्री तानिरहेछ।' यस प्रकार महात्माले वात्सल्य भावबाट भक्ति गर्न शुरू गरे।

संसारको विषयावेश उत्रिएपछि भगवान्का निमित्त भाव जाग्दछ। पुत्र दुःख पनि दिन्छ र सुख पनि।

यी साधुले परमात्मासँग पिता-पुत्रको सम्बन्ध जोड़ेर संसारलाई बिर्सिएर प्रभुमय भए। आमाको जस्तो गरेर पुत्र कृष्णलाई लाड़-प्यार गर्न थाले। यस प्रकार उनी मनैमन कृष्णाको सेवा गर्न थाले। कृष्णा तर यस्ता सोझा छन् जो मनद्वारा दिनेमाथि पनि प्रसन्न हुन्छन्।

साधु गङ्गास्नान गर्न जान भनी तयार हुन्छन् तब उनलाई लाग्छ कृष्णले उनलाई भनिरहेछन् 'बाबा, मलाई छोड़ेर कतै नजानु।' मानसी सेवामा लीन साधु यात्रा गर्न पनि जान नसक्ने भए किनभने उनको कृष्ण अहिले सानै छ, बालकै छ। उसको याद विचार कसले गरिदिने ?

यस प्रकार ती साधु मानसी सेवा गर्दै मरे। शिष्यले लाशलाई श्मशानमा लिएर गए। अग्नि संस्कारको तयारी हुँदै थियो। यत्तिकैमा एउटा सात वर्षको बालकले गङ्गाजल लिएर आयो र मानिसहरूलाई भन्न लाग्यो, 'म उहाँको पुत्र हुँ, त्यसकारण पिताको अग्निसंस्कारको हक मेरो हो। मेरा पिताजी गङ्गास्नान गर्न खोज्नुहुन्थ्यो। मैले गङ्गाजल लिएर आएको छु।' उसले साधुको लाशलाई स्नान गराएर फूलको माला लगाइदिई प्रणाम गरेर अग्नि संस्कार गरिदियो। त्यहाँ सबै शिष्य र साधु उभिएका उभियै भए।

अग्नि संस्कार सम्पन्न हुनासाथ बालक अन्तर्ध्यान भयो। अब सबैलाई होश आयो साधु निःसन्तान थिए। स्वयं भगवान् बालकको रूप धारण गरेर आउनु भएको थियो र महात्माको अन्त्येष्टि गरेर जानुभयो। महात्माको इच्छा पूर्ण भयो।

कतिपटक यस्तो हुन्छ लाखौंको सम्पत्तिको हकवाला पुत्र धन जम्मा गरेर हिंड़िहाल्छ। तर प्रभु यस्तो गर्नुहुन्न। उहाँ कहिल्यै विश्वासघात गर्नुहुन्न। उहाँ मानवको अन्तकालमा दौड़िएर आउनुहुन्छ। जीव तर जीवको विश्वासघात गर्छ, प्रभु यस्तो कहिल्यै गर्नुहुन्न।

जीव जुन भावले श्रीकृष्णाको स्मरण गर्छ, उसै भावले उहाँ आएर भेटिनुहुन्छ।

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्।**

जसको जस्तो भावना हुन्छ, त्यस्तै सिद्धि हुनेछ।

**यादृशी भावना यस्य सिद्धिर्भवति तादृशी।**

भगवान् भन्नुहुन्छ—'तिमीले जुन भावले चाहना गरेर भज, भज्नलाई भजिरहू। स्त्री-पुत्रादिको भजन केही काम लाग्दैन।'

यस क्षुद्र जीवले परमात्मासँग के प्रेम गर्न पाउला ? परमात्माले जस्तो प्रेम जीवसँग गर्नुहुन्छ त्यस्तो प्रेम उसले कहिल्यै प्रभुलाई गर्न पाउला के ? भगवान् भन्नुहुन्छ—'हे जीव ! तँ कहिले मसँग प्रेम गर्दछस् पनि ? म तर सारा दिन तेरो संझना गर्दै रहन्छु, तर तैंले दिनमा दुइपटक पनि मेरो दर्शन गर्दैनस् होला।'

आफ्ना-आफ्ना कुटुम्बका निमित्त काग र कुकुर पनि बाँच्दछ। जो ईश्वरका निमित्त बाँच्दछ, त्यसैको जीवन सार्थक मानिनेछ।

अक्रूरजी मनमा थरी-थरीका कल्पना गर्दै जानुभइरहेछ। 'अँ, कृष्णले मलाई काका भन्नुहोला, तर म कामी र विलासी छु। उहाँले मलाई दर्शन दिनुभएन भने ?'

जसको जीवन भोगविलासमा बित्दै गइरहेछ, उसलाई प्रभुले छिटै दर्शन दिनुहुन्न।

'म यौवनको नशामा चूर थिएँ। त्यस समयमा मैले धेरै पाप गरेको थिएँ। यदि यही कारणले मलाई कृष्णले आफ्नो ठान्नुभएन भने ? म पुग्नासाथ उहाँ कतै लुक्नुभयो भने ?'

आफ्नो युवावस्थाका समयका पापाचारलाई संझिएर अक्रूरजी अधैर्य हुन थाल्नुभइरहेछ। तैपनि उहाँ विचार गर्नुहुन्छ 'श्रीकृष्ण तर पतितपावन हुनुहुन्छ, उहाँले मलाई अवश्य आफ्नो गराउनुहुनेछ। यदि मजस्तो पापीलाई आफ्नो गराउनुभएन भने उहाँलाई पतितपावन कसले भन्ला ?'

हे नाथ, म पतित हुँ र तपाईं पतितपावन ! मलाई आफ्नो तुल्याउनुहोस्।

विचार गर्नु छ भने पवित्र विचार गर। खराब विचारले मनलाई भाँड्दछ।

बाटामा शुभ शकुन देखियो भने अक्रूरजी विचार गर्नुहुन्थ्यो, 'भगवान्‌ले मलाई अवश्य आफ्नो तुल्याउनुहुने छ।'

अक्रूरजीले बाटामा श्रीकृष्णको चरण चिह्न देख्नुभयो। 'कमल, ध्वजा र अङ्कुशयुक्त चरण पक्कै मेरा श्रीकृष्णकै हुन्। यसै बाटोबाट कृष्ण जानुभएको होला। उहाँ नाङ्गा गोड़ाले गाईहरूलाई चराउँदै घुमिरहनुहुन्छ।'

आदिनारायणको चिन्तन भइरहेछ। 'यदि उहाँ नाङ्गा गोड़ाले हिँड्नुहुन्छ भने म उहाँको सेवक हुँ, रथमा कसरी बस्न सक्दछु ? म सेवा गर्न योग्य छैन। म अधम हुँ, पापी हुँ। म वैष्णवको दास हुँ। म श्रीकृष्णको शरणमा गइरहेछु। मलाई चढ्ने के अधिकार छ ?' यस्तो विचार गरेर हिँड्न थाल्नुभो।

गोकुल पुगेर त्यहाँको धूलो सम्पूर्ण शरीरमा लगाउनुभो। व्रजको धूलोको बड़ो महिमा छ किनभने त्यो प्रभुका चरणद्वारा पवित्र भएको छ।

अक्रूरजी परमात्मानिमित्त पागलसरह हुनुभएको छ। जसरी पैसाका निमित्त पागल नभैकन पैसा पाईंदैन त्यस्तै गरी प्रभुलाई पाउनका निमित्त उहाँका पछि पागल हुनुपर्छ। पागल कुनै वस्तुका निमित्त होइन, प्रभुका निमित्त बन। कामान्ध व्यक्ति शरीरका निमित्त पागल हुन्छ, लोभी धनका निमित्त, कामान्ध व्यक्तिलाई ठाउँ र समयको पनि ख्याल हुँदैन।

भगवान्‌लाई पाउनका निमित्त देहभान र स्थल-काललाई बिर्सिएर पागल हुनु जरूरी छ।

'भगवान् खालीखुट्टा हिँड्नु हुन्छ र मैले पनि दण्डवत् गर्दै-गर्दै हिँड्नुपर्छ। तबमात्र मेरो पापमा डढ़ेलो लाग्ला' भनी अक्रूरजी दण्डवत्-प्रणाम गर्दै अगाड़ि बढ्न थाल्नुभयो।

अक्रूरजी वन्दना-भक्तिका आचार्य हुनुहुन्छ।

बद्रीनाथ जाँदा बाटामा हनुमानचट्टी नाउँ भएको स्थान आउँछ। त्यहाँ पुगेपछि यात्रीको हृदय मनभरी भएर आउँछ। 'म परमात्माको दर्शन गर्न गइरहेको छु। भोलि उहाँको दर्शन हुनेछ। म पापीलाई आफ्नो गराउनुहोला के ? मबाट जान-अनजानमा धेरै पाप भए होलान्। मैले दण्डवत् गर्दै जानुपर्छ। अनिमात्र मेरो पाप नष्ट हुनेछ। म साष्टाङ्ग प्रणाम गर्दै-गर्दै अगाड़ि जानेछु।' यस्तो विचार गर्दै कति यात्री दण्डवत् प्रणाम गर्दै अगाड़ि जान्छन् र हनुमानचट्टीदेखि बद्रीनाथको बाटो यसै गरी समाप्त गर्छन्।

शुकदेवजी वर्णन गरिरहनुभएको छ—

'राजन् ! अक्रूरजी आदिनारायणको दर्शन गर्नका निमित्त दण्डवत् प्रणाम गर्दै अगाड़ि बढ्दै हुनुहुन्छ।'

परमात्मालाई प्रसन्न गर्नका निमित्त एक असल साधन हो दण्डवत् वन्दना।

मथुराबाट निस्किएका अक्रूरजी गोकुल पुग्दा-नपुग्दै साँझ पऱ्यो। किनभने बाटामा बड़ो भक्तिभावका साथ दण्डवत्-प्रणाम गर्दै अगाड़ि बढ्दै आउनुहुन्थ्यो।

भगवान्ले अक्रूरजीको मनोरथ पूर्ण गरिदिनुभयो।

भगवान्का निमित्त गरिएको शुभ-सङ्कल्प उहाँबाट अवश्य पूर्ण हुन्छ।

सधैं भावना गर 'मृत्युका समयमा भगवान् तिमीलाई लिन आउनुहुन्छ।'

जब खराब सङ्कल्प पनि सिद्ध हुन्छ भने शुभ-सङ्कल्प सिद्ध किन नहोला ?

दण्डवत्-प्रणाम गर्दै-गर्दै अक्रूरजी गौशालामा आइपुग्नु भयो। उहाँले विचार गर्नुभएको थियो श्रीकृष्णको दर्शन उहाँ पाइएला, दर्शन भयो। उहाँ भन्न चाहनुहुन्थ्यो—म पापी छु र श्रीकृष्णको शरणमा आएको हुँ। तर उहाँ मनभरि हुनुभएका कारणले एक शब्द पनि बोल्न सक्नु भएन र भावावेशद्वारा अचेतजस्तो हुनुभई भगवान्का चरणमा ढल्न पुग्नुभयो। श्रीकृष्णलाई उहाँले प्रणाम गर्नुभयो।

परमात्माको आँखा तर सदा-सर्वदा प्रेमभोगी हुन्छन्। उहाँले देख्नुभयो अक्रूरजी आफ्नो शरणमा आउनु भएको छ।

अक्रूरजी चाहनुहुन्थ्यो जब उहाँले प्रणाम गर्नु होला, उसै समयमा भगवान्को दृष्टि उहाँमा पर्ला र उहाँको हृदय शुद्ध भई पाप गर्ने इच्छा पनि नहोला। उहाँको यो पनि इच्छ थियो प्रभुको हात उहाँको शिरमाथि परोस्।

प्रभुले अक्रूरजीको शिरमा आफ्नो वरद हात राखी उहाँलाई उठाउनुभयो। अक्रूरजीले सोच्नुभएको थियो 'जब कृष्णले मलाई काका भनेर बोलाउनुहोला अनि उभिउँला, तर मजस्तो पापीलाई काका भनेर किन भन्नुहुन्थ्यो ? उहाँले मलाई आफ्नो तुल्याउनु भएन भने ब्रह्मसम्बन्ध पक्का हुनेछैन।'

भगवान्ले कसैलाई पनि छिटै स्वीकार गर्नुहुन्न। जीव मन्दिरमा गएर भगवान्लाई भन्दछ 'म प्रभुकै हुँ।' घर आएपछि ऊ आफ्नी पत्नीलाई भन्दछ 'म तिम्रै हुँ', तर जीव बड़ो मूर्ख छ। उसलाई यति पनि थाहा छैन, *'प्रेम गली अति साँकरी तामें दो न समाय।'*

भगवान्ले अक्रूरजीको मनोभाव थाहा पाइसक्नुभयो। उहाँले विचार गर्नुभयो—यदि 'काका' भनेर अक्रूरजीलाई सुख हुन्छ भने यसो भनिदिनलाई के आपत्ति भयो र ! जीव जुन भावले मलाई भज्दछ, उसै भाव र सम्बन्धबाट म पनि उसलाई भज्दछु। म जीवको पिता हुँ र पुत्र पनि।

ईश्वर किन महान् मानिनुहुन्छ ? यसको कारण यो हो उहाँ दुराग्रही हुनुहुन्न, अनुग्रही हुनुहुन्छ। जीव मात्र दुराग्रही हो। जीवले केही सम्मान र सम्पत्ति पाउँदैमा ऊ दुराग्रही बनिहाल्छ।

ईश्वरका साथ जस्तो किसिमको भएपनि सम्बन्ध जोड़। उहाँले कहिल्यै विश्वासघात गर्नुहुने छैन। उहाँका साथ पिता-पुत्र-सखा-बन्धु-सेवक या अन्य जे चाहन्छौ सो सम्बन्ध कायम गरिलेऊ। कुनै पनि प्रकारको सम्बन्ध कायम नगरीकन जीवन सफल हुने छैन।

अक्रूरजी चाहनुहुन्थ्यो श्रीकृष्णले काका भनेर बोलाउनुहोला। श्रीकृष्णले उहाँको शिरमा हात राखेर भन्नुभयो, 'काकाजी, अब उठ्नुहोस्।' अनि उहाँलाई उठाएर अँगालो मार्नुभयो। जीव जब शरणमा आउँछ तब भगवान् उसलाई आफ्नो पूरा अँगालो मारिदिनु हुन्छ।

आज जीव भगवान्को शरणमा आएको छ। भगवान्ले अक्रूरजीका सबै मनोकामना पूर्ण गरिदिनुभयो।

प्रभु शुभसङ्कल्पलाई सदा साकार गरिदिनुहुन्छ। त्यो दाउरा चिरेर बेच्नेले सत्यनारायणको कथा लाउने सङ्कल्प गरेकोमा प्रभुले उसको पनि सहायता गर्नुभएको थियो। शुभ विचार सदा साकार हुन्छन्। अक्रूरजीको इच्छा पूर्ण भयो। जुन जीवले अक्रूरजीको जस्तो आदर पाउला, त्यही धन्य हो, अन्यथा जगत्का सबै मानपत्र बेकम्मा हुन्छन्।

जगत्को मान-अपमानबाट अप्रसन्न हुनु निरर्थक हो। मृत्युका समयमा जगत्को मानापमानले केही काम दिँदैन। भगवान्ले जसको आदर गर्नुहुन्छ उसैको मान चिरस्थायी हुन्छ।

गौशालाबाट सबै नन्दजीकहाँ आए। नन्दजीले अक्रूरजीको स्वागत गर्नुभयो। भोजनादिबाट निवृत्त भएर नन्दजीले अक्रूरजीसँग आउनाको कारण सोध्नुभयो।

अक्रूरजी—'नन्दजी, म राजा कंसको तर्फबाट निम्तो दिन भनी आएको हुँ। मथुरामा धनुष-यज्ञ हुने भइरहेछ। तपाईंहरूलाई दर्शनार्थ बोलाएको छ। तपाईं चाहे गाड़ीबाट आउनुहोस् तर बलराम श्रीकृष्णका निमित्त सुवर्ण-रथ पठाइएको छ।'

नन्दजी बहुतै सोझो हुनुहुन्थ्यो। उहाँ निम्ता पाएर प्रसन्न हुनुभयो। 'कंसलाई कर दिन्छु र मेरा छोराहरूलाई सुवर्ण-रथ पठाएको होला। मेरा पुत्रहरूलाई कंस कत्तिको माया गर्छन्।'

नन्दबाबालाई के थाहा विश्वास उत्पन्न गर्नलाई मात्र कंसले सुनको रथ पठाएको थियो।

नन्दबाबा भन्नुहुन्छ, 'मैले पनि खोजेको थिएँ आफ्ना पुत्रहरूलाई कहिले मथुरा देखाउन पाऊँला।'

गाउँका बालकहरूले यो कुरा थाहा पाए र उनीहरू पनि सँगै जान तयार भए। 'म भइनँ भने कृष्णको हेरचाह कसले गर्ला?' उनीहरूले भने 'कृष्णको यादविचार हामी मात्र गर्नसक्छौं।' जगत्को यादविचार गर्नेवालाको आज बालकले यादविचार गर्न खोजेका छन्। नन्दबाबाले सबै बालकहरूलाई सँगै हिँड्न भन्नुभयो।

यो सबै कुरा जब यशोदाकहाँ पुग्यो तब उनको मनै हरायो। 'यो अक्रूर होइन, क्रूर हो। मेरो कृष्णलाई जान नदेऊ। ऊ गयो भने गोकुल उजाड़ हुनेछ। ऊ भएन भने गाईहरूले पनि खानापिना छोड़िदिनेछन्। लैजानु छ भने पनि बलरामलाई लैजाऊ, कृष्णलाई होइन। मैले सुनेकी छु मथुराका आइमाईहरू जादूटुना गर्नेवाला हुन्छन् रे। यस्तो कुनै टुना गरिदेलान् कृष्ण फर्केर आउनै नसक्ला।'

यशोदा नन्दजीसँग पनि विन्ति गर्न लागिन्—'यदि तपाईंलाई मथुरा जानुछ भने जानुहोस्, तर कृष्णलाई नलैजानुस्। वहाँ उसको यादविचार कसले गर्ला? ऊ वहाँ लाज मान्छ। भोकै परे पनि केही माग्दैन। उसलाई मनाएर कसले खुवाउला?'

दुइ-तीन दिनअघि मैले खराब सपना देखेकी थिएँ। मेरो कृष्ण मलाई छोड़ेर सधैंका निमित्त मथुरा गइरहेछ। अक्रूर मलाई कालजस्तो लाग्छ। म कृष्णलाई आफ्ना नजरबाट टाढ़ा पार्न चाहन्नँ।

नन्दबाबाले यशोदालाई विश्वास गराउँदै संझाउन थाल्नुभो, 'कृष्ण एघार वर्षको भयो। अब त्यसलाई कति दिनसम्म तिमी घरमा राख्छ्यौ? उसले बाहिरको जगत् पनि हेर्नुपर्छ। म अब उसलाई गोकुलको राजा बन्नेयोग्य तुल्याउन चाहन्छु। हामी दुइ-चार दिन मथुरामा घुमघाम गरेर फर्किआउने छौं। तिमी चिन्ता नगर।'

तैपनि यशोदाको मन मान्दैन। आफ्नो कृष्णलाई आफ्नो नजरबाट टाढ़ा कसरी गरूँ? म यस वृद्धावस्थामा कृष्णका निम्ति मात्र बाँचिरहिछु। यै हो मेरो आधार।

रात पर्‍यो। सबैजना सुते तर यशोदाका आँखाबाट निद्रा टाढ़ा-टाढ़ा भएको थियो। के जानौं भोलि के हुने? कृष्ण गयो भने म एक्ली कसरी बाँचुँली? उनी बाहिर आँगनमा आएर स्वाँक्क-स्वाँक्क गर्न थालिन्।

कृष्णका आँखा अचानक खुले तब ओछ्यानमा आमा हुनुहुन्न। आमालाई यताउति खोज्न लागे। उनले आमालाई बाहिर रोइरहेको भेट्टाए। उनी आमाका नजिक बसी आमाको घाँटीमा हात राखेर उनको आँसु पुछ्दै रुनाको कारण सोध्न लागे। तपाईं किन रुनुहुन्छ? मलाई बड़ो दुःख लाग्छ।

कृष्णको कुरा सुनेर आमालाई अलिकति शान्ति भयो। उनी भन्न थालिन्—कुनै खासै कारण छैन, तँ भोलि जान्छस् त्यसैले मेरा आँखाबाट आँसु झरिरहेछ, मलाई छोड़ेर तँ कतैपनि नगएस्। तेरै सहाराले म बाँचिरहिछु।

कृष्ण आमालाई आश्वासन दिन थाल्नुभो। 'किन तपाईं चिन्ता गर्नुहुन्छ ?' म अवश्य फर्किएर आउने छु। कृष्णले यो कुराचाहिँ भन्नुभएन कहिले फर्किएर आउने हो। आमाले पनि सोधिनन्। उनी कृष्ण फर्किएर आउँछ भन्ने कुरा सुन्नासाथ आनन्दमा यति मग्न भइन् र यो कुरासम्म सोध्न बिर्सिन् फर्किने पक्कै हो तर कहिले फर्कने ?

यशोदाले कृष्णलाई भनिन्, 'हिंड़, अब हामी सुतौं। दुवै एउटै खाटमा सुते। आज श्रीकृष्णले यशोदाको हृदयमा प्रवेश गर्नुभो। अब कृष्ण बाहिर होइन, भित्रै देखिने हुनुभो।'

वसुदेव-देवकी कारागृहमा एघार वर्षदेखि तप गरिरहेछन्। अब यदि कृष्ण वहाँ नगए ती दुवैको प्राण जानेछ।

बिहान भयो। मङ्गल स्नान समाप्त भएपछि माता कृष्णको शृङ्गार गर्न थालिन्। 'तिम्रो मनोहर रूप देख्न अब म कहिले पाउँला ?'

यशोदाको मन आज अधैर्य भइरहेछ। उनले स्वयं भोजन तयार गरिन् र कृष्णलाई ख्वाइन्।

अक्रूरजी रथ लिएर आँगनमा आइपुग्नुभो।

जब गोपिनीहरूलाई खबर मिल्यो तब उनीहरू दौड़िँदै आइपुगे। तिनमा राधिकाजी पनि थिइन्। उनको मुखमा कान्ति फैलिएको थियो र सादा शृङ्गार थियो। आजसम्म कहिल्यै वियोग भएकै थिएन। आज वियोगको प्रसङ्ग उपस्थित भएकाले राधिकाजी अचेत जस्ती भइन्। उनी अचेतावस्थामै भन्न लागिन्—'हे प्राण, हे कृष्ण ! मलाई त्याग नगर्नुहोस्। मलाई छोड़ेर नजानुहोस्।'

गोपिनीहरू अक्रूरजीसँग झगड़ा गर्न लागे। 'हाम्रा कृष्णलाई किन लगिरहेछौ ? श्यामसुन्दरको दर्शनविना हामी बाँच्नु कसरी ? कृष्णलाई नलैजाऊ। तिम्रो नाम अक्रूर कसले राखेको हो ? तिमी क्रूर छौ। हामीलाई रुवाउन भनी आएका हौ। हामी तिम्रो घरको जे पनि काम गर्न तयार छौं, तर कृष्ण विरहमा हामीलाई नमार। कृष्णविरह भन्दा ठूलो अरू कुनचाहिँ दुःख होला ?'

अक्रूर ! कृष्णका विना गोकुल श्मशानजस्तो हुनेछ। चाहे बलरामलाई तिमी लैजाऊ तर कृष्णलाई हामीबाट खोसेर नलैजाऊ। मथुराका पढ़े-लेखेका नारीहरूले कृष्णको यस्तो सेवा गर्लान् उनले हामीलाई बिर्सिदिनेछन्। तिनीहरू बाठा छन् र हामी नपढ़ेका। तिनीहरूले कृष्णलाई के-के उल्टापाल्टा पढ़ाएर त्यहीं रोक्छन् होला। हाम्रो भाग्यै गयो।

गोपिनीहरू विलाप गरिरहेछन्—हे विधाता, तिमी पनि कस्ता निर्दयी छौ। जीवहरूका साथ परस्पर स्नेह गराउँछौ र तुरुन्तै छुट्याएर विरहाग्निमा डढ़ाइदिन्छौ। आफ्ना कृष्णका विना

हामी कसरी बाँच्ने होला ? अक्रूरजीको बुद्धिले कामै दिएन यिनीहरूलाई कसरी सम्झाउने होला ?

कृष्णले मूर्च्छित राधाजीलाई देखेर उनका नजिक गई कानमा भन्न लाग्नुभो—'राधे, पृथ्वीमा असुर धेरै बढे। ती पापी राक्षसहरूको नाश गरेर पृथ्वीको भार हलुको पार्नु छ। आजसम्म तिम्रा साथ नाच्दै-खेल्दै रहें। अब जगत्लाई नचाउन गइरहेछु। म तिमीहरूका साथै नाच्न सक्छु, अरूहरूका साथ होइन।'

सखीहरूहो ! म गइरहेछु तर मेरो प्राणको रक्षाका निमित्त तिमीहरूले आफ्नो प्राणको रक्षा गर्नू।

राधे, 'म आजसम्म तिम्रो नजीकमा थिएँ। अब केही टाढ़ा गइरहेछु, जेहोस् हामी अभिन्न छौं। लीलाका निमित्त नै हामीले भिन्ना-भिन्नै शरीर धारण गरेका हौं। मलाई आफ्ना प्राणहरूभन्दा पनि यो बाँसुरी ज्यादा प्यारो छ। तिमीले जहिले पनि यो बाँसुरी बजाउनु, म दगुर्दै आइहाल्नेछु।'

गोपी—'कृष्ण, विरहाग्निमा हामीलाई नडढ़ाउनोस्, हामीलाई कहीं नबिर्सनुहोस्।'

बाहिरको पानीबाट होइन, आँखाबाट बर्सिएको प्रेमाश्रुद्वारा मन धुन सकिन्छ।

गोपिनीहरू रोइरहेछन्। कृष्ण उनलाई धैर्य धारण गर भन्नुहुन्छ—'मेरो मङ्गलमय यात्राको समयमा रुनाले अपशकुन हुन्छ। म अवश्य फर्कनेछु।'

गोपिनीहरूको रोदन केही कम भएपछि कृष्ण र बलराम नन्दजीका साथ रथमा चढ़े। रथ हिँड्न लाग्दा गोपिनीहरू पनि पछिपछि हिँड्न थाले। कृष्णले 'नरोऊ' भनेपछि आँसु थामिएको थियो तर फेरि बगेर आयो। 'थाहा छैन कृष्ण अब कहिले फर्कलान् ? थाहा छैन कहिले उनको दर्शन पाइने हो ?' तिनीहरू बड़ो जोडसँग रुनथाले।

**विसृज्य लज्जां रुरुदुः स्मसस्वरं गोविन्द दामोदर माधवेति।**

(भा० १०-३९-३१)

कस्ता थिए ती गोपिनीहरू ?

**कृष्ण विसक्त मानसाः।**

श्रीकृष्णसँग नै मन लागिरहेको थियो।

हे गोविन्द ! हे माधव ! यस गोकुललाई उजाड़ नगर्नुहोस्। नाथ, यस गोकुललाई अनाथ नपार्नुहोस्। हामीलाई नबिर्सिनुहोला।

एउटी गोपिनीले भनिरहेकी छ, 'नाथ, तपाईंको दर्शन नगरीकन पानीसम्म नपिउने मेरो नियम थियो। मकहाँ केही क्षणका निमित्त आउँदै गर्नू।'

सम्पूर्ण गाउँ रोइरहेको थियो। अक्रूरजी पनि द्रवीभूत हुनुभयो। ग्रामजनको कृष्णप्रेम र कृष्णविरहको दुःख देखेर अक्रूरका आँखाले पनि आँसु बगाउन थाले। गाईहरू पनि रोइरहेका थिए। कोही गोपिनी रथका पछि-पछि दगुरिरहेछन् र कोही मूर्च्छित लड्न लागिरहेछन्।

श्रीकृष्णले अक्रूरजीसँग भन्नुभयो, यी प्रेमले छचल्किएका हृदय भएका ग्रामीणहरूले मलाई अगाड़ि लाग्न नदिने भए। त्यसकारण रथ अलि छिटो चलाउनुहोस्।

अधीर भएर यशोदा रथका पछि दगुर्न थालिन्, प्रभुले दगुरिरहेकी मातालाई देखेर रथ थाम्न लाउनु भो। आमाले पुत्रको लागो पन्साइन्, आरती गरिन्। 'छोरा, तिमी जानाले मलाई बड़ो दुःख भइरहेछ। मेरो इच्छा थियो, मेरा आँखाबाट तिमीलाई कहिल्यै टाढ़ा नपारूँ, तर मैले केवल आफ्ना निमित्त मात्र तिमीसँग प्रेम गरेकी होइन। म प्रार्थना गर्छु जहाँ पनि होऊ, सुखी भए।'

कृष्ण, म आज एउटा रहस्य खोल्दैछु, तिमी मलाई आमा भन्छौ र म तिमीलाई छोरा भन्छु तर तिमी मेरा छोरा होइनौ। तिमी तर देवकीका पुत्र हौ। मचाहिँ तिम्री पाल्ने आमा हुँ, तिम्रो लालन-पालन गर्ने धाई हूँ।

कृष्ण—आमा! तपाईं के भन्दै हुनुहुन्छ? मानिसले जे भन्छन् भनून्। म सारा जगत्सँग यही भन्ने छु म यशोदाकै छोरो हूँ।

यशोदा—'छोरा, मथुरामा गएर तिमीले बिर्सिंदिनू कुनै बखत मैले ओखलीमा बाँधिदिएकी थिएँ।'

कृष्ण—'म सबै कुरा बिर्सन सक्छु, तर तपाईंको बन्धनलाई कसरी बिर्सिऊँ? ममात्र तपाईंसँग बाँधिएको छु।'

यशोदा—'तिमीले कहिल्यै मलाई बिर्सिंदैनौ? मसँग भेट्न आउँछौ होलानि?'

कृष्ण—'अवश्य आउने छु। तपाईंले आफ्नो शरीर र हाम्रा गाईहरूको पूरा-पूरा यादविचार राख्नुहोला।'

माता—'तिमी जहाँ रहे पनि सुखी होऊ, यही मेरो आशीर्वाद छ।'

रथ अगाड़ि बढ्न थाल्यो। गोपिनीहरू पछिपछि दगुर्न लागे। उनीहरूले कृष्णको आरती गर्ने इच्छा गरेकाले रथ फेरि रोकियो।

श्रीकृष्ण गोपिनीहरूसँग भन्न लाग्नुभयो—'दुष्टहरूको हत्या, दैत्यहरूको संहार मेरो जन्मको गौण प्रयोजन हो। मेरो अवतारको प्रयोजन हो गोकुलमा प्रेमलीला गर्नु। मेरो एउटा स्वरूप यहाँ तिमीहरूकहाँ रहला र दोस्रो स्वरूप मथुरामा।'

पहिले यशोदाको घरमा मात्र एउटा कृष्ण थिए—अब प्रत्येक गोपीका घरमा एक-एक कृष्ण छन्। कृष्णले सबै गोपिनीहरूका हृदयमा प्रवेश गरेका छन्।

महाप्रभुजी भन्नुहुन्छ—यो अन्तरङ्गको संयोग हो र बहिरङ्गको वियोग। प्रत्येक गोपिनी अनुभव गरिरहेका छन् श्रीकृष्ण उनकै नजीक बस्नुभएको छ र मथुरा जानुभएको छैन।

श्रीकृष्णलाई लिएर रथ हिँड्यो र गोपिनीहरू चित्रलिखितजस्ता उभिएका उभियै भए।

कृष्णले गोकुलको त्याग गरेको छैन। उहाँ हरेक गोपिनीका हृदयमा बस्नुभएको छ। भगवान्ले वचन दिएको थियो—

वृन्दावनं परित्यत्य पादमेकं न गच्छति।

वियोगविना तन्मयता आउन सक्दैन। विना-वियोग ध्यानमा एकाग्रता आउन पाउँदैन र साक्षात्कार हुँदैन। व्रजवासीलाई आफ्नो विरहको सहाराले तन्मय बनाउनका निमित्त भगवान् मथुरा जानुभएको थियो।

वियोगबाट, विरहबाट प्रेम पुष्ट बन्दछ। त्यसैले श्रीकृष्णले गोपिनीहरूलाई यस वियोगरूपी विशिष्ट योगको दान गर्नुभयो।

गोपिनीहरूको दशा पनि हेर्नुहोस्—

श्याम बिनु ब्रज सूनो लागै:<br>
सूनी कुञ्ज, तीर जमुनाकी सब सूनी लागै।<br>
श्याम बिनु चैन नहीं आवै॥

रथ बढ्दै यमुनाकिनारा आयो। अक्रूरजी स्नानार्थ जलमा उत्रनुभयो तब जलमा श्रीकृष्ण र बलरामको दर्शन भयो। बाहिर हेर्दा दुवैलाई रथमा बसेको पाइयो। बारम्बार यस्तो अनुभव भयो। अक्रूरलाई भगवान् नारायणको दर्शन भयो।

केही वैष्णवहरू यस्तो मान्दछन् मथुरासम्म जाँदाखेरि श्रीकृष्णले यमुनाजी स्नान गर्नुभयो र नारायण रूप लिएर प्रकट हुनुभयो। अर्थात् श्रीकृष्ण स्वयं वृन्दावन फर्किएर आएर आफ्नो नारायणस्वरूप लीला देखाउन उहाँ मथुरा जानुभो। त्यसो तर कृष्ण र नारायण दुवै एकै हुन्। जो भेद छ, त्यो उपासनाकै कारणले हो।

अक्रूरजीले यमुनामा स्नान गरेर स्तुति गर्नुभयो।

रथ मथुराको सीमानामा आयो तब श्रीकृष्णले अक्रूरजीलाई भन्नुभयो, 'काकाजी तपाईं अगाड़ि बढ्नुहोस्। हामी यहीं उद्यानमा विश्राम गर्छौं।'

जुन नगरमा कंस हुन्छ त्यहाँ श्रीकृष्ण कसरी बस्नसक्नु हुन्छ ? यदि उहाँ भित्र जानुभयो भ' कंसको नाश हुनेभो। प्रकाश र अन्धकार एकसाथ कसरी रहन सक्छन् ?

विषयानन्द र ब्रह्मानन्द एकसाथ बस्न सक्दैनन्।

मथुरा-मानवकायामा श्रीकृष्ण-ब्रह्म र कंस-काम एकैसाथ कसरी बस्न सक्छन् ?

**जहाँ काम तहाँ राम नहीं, जहाँ राम, नहीं काम।**
**तुलसी कबहुँ न रहि सकैं, रवि-रजनी इक ठाम॥**

यशोदाले दही-दूध तथा अन्य खाद्य-सामग्री यिनलाई दिएकी थिइन्। जब भोजन गर्न बसे तब व्रजवासी, गोपिनीहरू, गाईहरू र यशोदा आदिको संझना भयो। हात थामियो, नन्दजीले यो देखेपछि कारण सोधे। कृष्णले भन्नुभो—'मेरा सखीहरू, सखा र माताजी मेरा वियोगका कारण भोकै होलान्। म खाऊँ भने कसरी खाऊँ?'

प्रभुका साथ यसरी प्रेम गर जो उहाँबाट तिमीलाई संझना होस्। जबसम्म प्रभुको स्मरणमा तिमी बस्न पाउँदैनौ, तिम्रो भक्ति पूरा भएको ठहरिन्न। जबसम्म उहाँबाट तिमी संझना हुन्नौ जीवको बन्धन भइरहन्छ। भक्ति यस्तो गर भगवान्‌लाई तिमीविना आनन्द नआओस्।

यशोदाजी र गाईहरूको प्रेम यस्तो गहिरो थियो जसले कृष्ण वियोगमा खान-पिउन पनि सकेनन्।

साँझ परेपछि दुवै भाई मथुरा हेर्न हिंड़े। महाद्वारबाट प्रवेश गरे। बानी भइराखेकाले गोकुलका बालकले कृष्णका साथ हिँड्दै 'कृष्णको जय' भनेर कराउन थाले। मथुराका नारीहरूले पनि सुने।

शुकदेवजी वर्णन गर्नुहुन्छ मानौं प्रत्यक्ष हेरिरहनुभएको छ।

जुन लीला कथाको प्रसङ्ग चलिरहेछ त्यसको यदि प्रत्यक्ष अनुभव गर्ने कल्पना गरेका खण्डमा वक्ता र श्रोतालाई बड़ो आनन्द आउनेछ।

दूध चुसाउन लागिरहेकी एउटी आमाले बालकलाई छोड़ेर कृष्णको दर्शनार्थ दौड़िहाली। आफ्नो बालक घरमै बस्ने हो, तर श्रीकृष्णको फेरि दर्शन नपाइने होला? यसै प्रकार नगरका साना-ठूला सबैजना आफ्ना कामकाज छोड़ेर श्रीकृष्णको दर्शनका निमित्त दौड़िहाले।

भगवान्‌को दर्शनका निमित्त यस्तै लगन हुनुपर्छ। आतुरताको विना दर्शन हुन पाउँदैन। दर्शनमा लीन भएमा बड़ो आनन्द आउँछ। यस्तो व्याकुलता, आतुरता, लगन भयो भने ईश्वरले दर्शन दिने कृपा गर्नुहुन्छ।

मथुराका स्त्रीहरू श्रीकृष्णको दर्शन गर्दै आफू-आफूमा कुरा गर्न थाले।

बाटामा राजा कंसको धोबी भेटियो जो राजाको लुगा लिएर गइरहेको थियो। यो उही धोबी थियो जसले रामावतारमा जानकी माताको निन्दा गरेको थियो।

निन्दा र नरक एकसमान हुन्। कसैको निन्दा कहिल्यै नगर।

श्रीकृष्णले त्यो धोबीसँग केही लुगा माग्नुभयो। त्यो धोबीले फुर्ती लाएर भन्न थाल्यो, 'यो तेरो गाउँ होइन, नगर हो नगर। यी वस्त्र राजाका हुन्। तैंले के तेरा बाबु-बराजुले पनि यस्ता दामी

कपड़ा कहिल्यै देखेका होलान् ? धेरै गड़बड़ गर्‍यौ भने राजाका सिपाहीको जिम्मा लाइदिनेछु। बाँच्नु छ भने यतैबाट भागिजाऊ।'

धोबीको धृष्टता बलरामबाट सहन भएन—'कृष्ण, यस धोबीको शिरमा मृत्युले घेरिरहेछ जस्तो मलाई लाग्छ। एक झापट यसलाई लाइदिऊँ।' कृष्णले पलभरमै त्यसको टाउको उड़ाइदिनुभयो। धोबीको यस्तो दशा देखेर धोबीका साथीले लुगाका पोकाहरू त्यहीं छोड़ेर भागिहाले।

ईश्वर, पापी इन्द्रियहरूलाई दण्ड दिनहुन्छ। अन्तकालमा त्यो पापी इन्द्रिय बड़ो दुःखी हुन्छ। वाणीद्वारा पाप गर्नाले वाग्देवी अन्तकालमा रिसाउनुहुन्छ। यस्तो पापीको बोली आफैं बन्द हुन्छ।

धोबीले मुखले निन्दा गर्‍यो तब भगवान्‌ले उसको मुखमा थप्पड़ लाइदिनुभो।

ईश्वर सरल जीवका निमित्त सरल हुनुहुन्छ र कुटिलका साथ कुटिल। जसको मन पवित्र हुँदैन, उसलाई अन्तकालमा पनि बड़ो कष्ट हुन्छ।

कृष्ण चोरी गर्नमा नामी हुनुहुन्थ्यो। उहाँले ती गोपमित्रहरूलाई ती पोकाहरूका लुगा लिनू भन्नुभो। बालकहरू केही डराइराखेका थिए, त्यसकारण कृष्णले स्वयं लुगा बाँड़िदिनुभयो। जसलाई जुन लुगा दिनु भयो उसलाई उस्तै मिल्ने नाप निस्कियो। बालक आनन्दसाथ नाच्न थाले। उनीहरूले माने यी लुगा सिउने मान्छे कति कुशल होला ? त्यसो तर यस्तो सुचिकार कहिल्यै भएकै थिएन। आफ्ना मित्रहरूलाई राम्रो सुन्दर लुगा लाउन दिने कृष्णको प्रतिज्ञा थियो जो आज पूरा गर्नुभयो।

गरीब बालकहरू राम्रो लुगा पाएर खुशी भए। उनीहरू भन्नलागे, 'यस्तो राम्रो लुगाको कारणले हाम्रो झटपट विवाह हुने भयो। हाम्रो विवाहमा तिमी पनि आउँछौ होला ?' कृष्णले भन्नुभो, 'अँ,जरूर आउँला।'

यस्तो भावना गर—तिमी कृष्णका हौ र उहाँ तिम्रा हुनुहुन्छ।

श्रीकृष्णले आफ्ना गरीब मित्रलाई लुगा लाउन दिएर पछिबाट आफूले पनि लगाउनुभयो। उहाँको प्रतिज्ञा आज पूरा भयो। पहिले उहाँ नसिएको पीताम्बर कमली लाउनुहुन्थ्यो।

राम र कृष्णले आदर्श मित्र-प्रेमको दृष्टान्त जगत्‌का सामुन्ने राखिदिएका छन्।

बाटामा सुदामा भेटिए जसले कृष्णलाई र कृष्णका साथीलाई माला लाइदिए।

अगाड़ि बढ़े तब कंसकी दासी कुब्जा भेटिई। उसका तीन अङ्ग बेढङ्गका थिए। ऊ चन्दनपात्र लिएर गइरहेकी थिई। उसले प्रभुलाई चन्दन दिई तब उहाँ बड़ो प्रसन्न हुनुभयो। प्रभुले विचार गर्नुभयो, 'यस कुब्जाले मलाई चन्दन दिएर मेरो शोभा बढ़ाइदिएकी छ। त्यसकारण म पनि यसको शोभा बढ़ाईदिऊँ।' उसको सम्पूर्ण अङ्ग सुन्दर भयो र सुन्दरी बनी।

चन्दन र वन्दनाले मानिसलाई नम्र बनाउँछ।

यस कुब्जा-प्रसङ्गमा एउटा रहस्य छ। हाम्रो बुद्धि कुब्जा हो जो काम, क्रोध र लोभले टेढ़ो भएको छ। प्रभुको पूजाले यी तीनै दोषहरूलाई नष्ट गरेर बुद्धि शुद्ध पार्दछ। बुद्धिले यदि कंसरूप कामको सेवा गर्छ भने विकृत हुन जान्छ। बुद्धि ईश्वरको समक्ष आएर सरल बन्न सक्छ। यदि यस्तो भएन भने पाँचै विषयहरूले जीवलाई सताइरहन्छन्।

कंसको सेवा गर्नेवाला बुद्धि भ्रष्ट वक्र हुनेछ। जसको बुद्धि वक्र हुन्छ उसको मन पनि उस्तै भइहाल्छ। विकृत मन हुनेको आँखा पनि दूषित हुन्छ। जसको आँखा दूषित हुन्छ, उसको जीवन पनि दूषित हुन्छ।

मथुराका बनियाँहरूले सुने यी दुइ केटाहरूले धोबीलाई मारे, कुब्जालाई कायापलट गरिदिए, त्यसैले उनीहरूले सोचे यी दुवै पराक्रमी हुन्। हुनसक्छ यिनीहरू मथुराका राजा बनून्। त्यसकारण यिनको आदर-सत्कार गर्नुपर्छ। समय आएपछि यिनीहरूसँग कुनै काम गराउन पाइनेछ। बनियाँको बुद्धि अगम्य छ। अलिकति दिएर धेरै लिने आशा राख्नु र प्रयत्न गर्नु बनियाँको काम हो। अलिकति लिएर धेरै दिने त्यो सन्त हो। सन्त र ब्राह्मणले अलिकति दक्षिणा पाएपछि आशीर्वाद दिन्छन्—आयुष्मान् भव, लक्ष्मीवान् भव।

यसरी ती बनियाँहरूले आज सेवा गरेर भोलि फाइदा लिने कुरा सोचिसके। उनीहरूले कृष्णलाई केही पान-सुपारी दिँदै भने, 'यी सबै तपाईंकै हो। पसल तपाईंकै हो।' बनियाँ बड़ो मीठो बोल्छन् तर बिल बनाउँदा, धन जम्मा गर्दा केही अर्कै भइहाल्छ। ऊ आफूलाई बुद्धिमान मान्छ। धन कमाउनका निमित्त मात्र बुद्धि उपयोग गर्नेलाई बुद्धिमान् कसरी भन्ने।

आफ्नो बुद्धिको उपयोग जो व्यक्तिले प्रभु प्राप्तिका निमित्त गर्छ उही बुद्धिमान हो।

ती बनियाँहरूले भगवान्लाई अरू केही दिएनन्। भागवतमा लेखेको छ—व्रजानुमार्गे वणिक पन्थे ······· ताम्बुल स्त्रग्गन्धैः। उनीहरूले पान र फूलमात्र प्रभुलाई दिए।

जे होस् कृष्ण तर भगवान् हुनुहुन्थ्यो। उनीहरूको यति स्वागतले पनि प्रसन्न हुनुभो। उनीहरूले मेरो यस्तो स्वागत गरे। बनियाँहरूलाई 'वर माग' भन्नुभयो।

बनियाँ—'प्रभु, हामी चाहन्छौं लक्ष्मीजी सदा हामीहरूकै घरमा बास गरून्। अरू कसैको घरमा नजाऊन्।'

श्रीकृष्ण—'के तिमीहरूलाई ज्ञान, भक्ति, सदाचार, वैराग्यको कुनै आवश्यकता छैन?'

बनियाँ—'हेर्नुहोस्, ती सबै चीजसँग हामीलाई केही लिनुदिनु छैन। हामीलाई बस् धन चाहिन्छ, धन जसरी भए पनि र जहाँबाट भए पनि पाइयोस्।'

भगवान् मथुरा आउनुभयो तब बनियाँहरूले पानसुपारीले स्वागत गरे तर ब्राह्मणले फूर्ति गरेर स्वागत गर्न गएनन्। तब लक्ष्मीजीले विचार गर्नुभयो—'जे होस् बनियाँले मेरा पतिको सेवा

गरेको छ र ब्राह्मणले केही पनि गरेको छैन। त्यसकारण लक्ष्मीजी बनियाँहरूका घरमा गइन्, ब्राह्मणहरूका घरमा गइनन्।'

मानिस भन्दछन् सम्पत्ति आयो तब सारा सुख आयो तर यस्तो सोच्नु ठीक होइन। संस्कारी बन्ने प्रयत्न गर।

भगवान् बनियाँहरूको पसलमै हुनुहुन्थ्यो। त्यत्तिकैमा केही ग्राहक आइपुगे। बनियाँ उनीहरूसँग मोलतोल गर्न थाल्यो। भगवान्ले ऊसँग 'धनुष-यज्ञ' जानेबाटो सोध्नुभो तब भन्न लागे—हेर, हामी यी ग्राहकहरूसँग कारबार गरौं या तिमीसँगै कुरा गरिरहौं। जाओ अगाडि कसैसँग बाटो सोध्नू। कति स्वार्थी हुन् यी बनियाँहरू लक्ष्मी भेटिइन् तब लक्ष्मी-पतिलाई बिर्सिए।

भागवतले मृत्यु सुधार्छ। यस्तो नभन्ठान तक्षक नाग केवल परीक्षित्लाई मात्र टोक्न आएको थियो। तक्षक नागले ( कालले ) सबैलाई कुनै न कुनै दिन टोक्नेछ।

तक्षक नाग कालको सूचना दिएर आउँछ। कपाल सेतो हुन थाल्यो, दाँत झर्न थाले भने मान तक्षकको सूचना आइपुग्यो। कालको सूचना ध्यानमा लिनुपर्छ र सबै कुरा छोड़ेर भगवान्को भक्तिमा लागिहाल्नुपर्छ।

यज्ञ प्रारम्भ भएको चार दिन पूरा भएर आज पाँचौं दिन भयो। यदि आजको दिन निर्विघ्न समाप्त भयो भने तब कंसको कसैले केही बिगार्न सक्ने छैन।

यता धनुष-यज्ञको स्थान सोद्धै खोज्दै कृष्ण-बलराम आइपुगे। कृष्णले धनुष उठाएर त्यसको टुक्रा-टुक्रा गरिदिनुभयो। उहाँले कंसका सेवकहरूको राम्ररी उपचार गरिदिनुभयो।

केही सेवकहरूले भागेर आई राजालाई यज्ञभंगको समाचार सुनाउँदै राजालाई भन्नथाले—'अब भने तपाईंको यज्ञ अपूर्ण रहने भयो। ती प्रतापी बालकहरूलाई राज्य दिनुहोस्। ईश्वरको भजन गर्न थाल्नुहोस्। तपाईंले कृष्णका मातापितालाई बन्दी बनाएर पाप गर्नुभएको छ तपाईं दुष्ट हुनुहुन्छ।'

कंस रीसले चूर भयो—'ए मूर्खहरू हो, तिमीहरूलाई होश छ, के भनिरहेछौ ? राजा म हुँ, आफ्नो राज्य म कहिल्यै कसैलाई दिन्नँ। बुझ्यौ ?'

सूर्यास्त भएपछि दुवै भाई आफ्ना मित्रहरूका साथ नन्दबाबाका नजिक फर्किएर आए।

नन्दजीले बालकहरूलाई बिहान भन्नुभएको थियो—'हेर ! यो हाम्रो गोकुल होइन, मथुरा हो। शान्तिले भलाद्मी भएर घुम-फिर गर्नू, कहिल्यै उधुम नमच्चाऊनू।'

जब उनीहरू फर्किएर आए नन्दजीले उनीहरूसङ्ग सोध्नुभयो—'नगर हेरी आयौ ? कहीं उधुम मच्चाएनौ ?'

कृष्ण—'अहँ, हामीले केही पनि बिगारेका छैनौं। मानिसहरू मेरो परिचय माग्थे तब भनिदिन्थें म नन्द-यशोदाको छोरो हुँ। बाबा, मेरो परिचय पाउनासाथ मानिसहरूले हामीलाई यी राम्रा-राम्रा लुगा दिए र फूल-माला लगाइदिए।'

बिचरा सोझा नन्द बाबा ! उनले छोराको कुरा सत्य माने। मैले यस नगरीका यादवहरूका साथ शुभ-अशुभ प्रसङ्गहरूमा योग्य व्यवहार गर्दै आएको छु। यी मेरा मित्रजस्ता छन्। त्यसकारण तिनीहरूले मेरा बालकहरूलाई केही दिन्छन् भने यो अस्वाभाविक होइन।

कृष्णले पटक-पटक भन्नुभो—'बाबा, म तपाईंको पुत्र हुँ, त्यसैले यी सबै हामीले पाएका हौं।' श्रीकृष्णजीले नन्दजीको पुत्र भावनालाई कायमै राख्नुभएको छ।

रातका समयमा भोजन गर्न बसे। व्रजवासीले आफ्नासाथ खाने-पिउने सरजाम धेरै ल्याएका थिए। कृष्णलाई यशोदा र आफ्नै गङ्गी गाई संझना भइरहेछ। 'मविना मेरी आमा र गङ्गीको के दशा भयो होला ? कृष्णलाई भोजन गर्न मन लागेन।'

भोलिपल्ट बिहान राजसभाको आरम्भ भयो। कंसको मृत्यु नजिक आइरहेको थियो। उसले आफ्ना मल्ल चाणूर-मुष्टिकलाई कृष्ण-बलरामको हत्या गर्ने आज्ञा दियो—

'कुनै किसिमबाट तीसँग कुस्ती गर्नू र पछारिदिनू।'

नन्दबाबा पनि कृष्ण-बलराम र अन्य गोपबालकहरूका साथ राजसभामा आउनुभयो। कुवलयापीढ़ हात्तीको उद्धारसाथै कृष्णको प्रवेश भयो।

रङ्गभूमिमा कृष्ण आउनुभयो। मल्लहरूका निम्ति बज्र जस्ता, सामान्य पुरुषहरूका निमित्त श्रेष्ठपुरुषहरू जस्ता, स्त्रीहरूका निमित्त मूर्तिमन्त कामदेव जस्ता, गोपालहरूका निमित्त स्वजनजस्ता, राजाहरूलाई शासकजस्ता, वृद्धहरूलाई बालकजस्ता, कंसलाई कालजस्ता, अज्ञानीलाई विराटजस्ता, योगीहरूलाई परमतत्त्वजस्ता र यादवहरूलाई परमदेवजस्ता लागे।

मल्लानामशनिर्नृणां नरवरः स्त्रीणां स्मरो मूर्तिमान्।
गोपानां स्वजनोऽसतां क्षितिभुजां शास्ता स्वपित्रो शिशुः॥
मृत्युर्भोजपतेर्विराटविदुषां तत्त्वं परं योगिनां।
वृष्णीनां परमदेवीति विदितोरंगं गतः साग्रजः॥

कृष्णको दर्शन गरेर सबै मानिसहरूले आफ्ना-आफ्ना भावनानुसार रौद्र, अद्भुत, शृङ्गार, हास्य, वीर, वात्सल्य, भयानक, वीभत्स, शान्त तथा प्रेमभक्ति रसको अनुभव गरे। जुन व्यक्तिको जस्तो भावना थियो उसलाई सोहीरूपमा भगवान् देखिनुभयो।

जब रामचन्द्रजी राजा जनकको सभामा आउनुभएको थियो त्यसवेला पनि त्यस्तै भएको थियो।

जिन्हकी रही भावना जैसी।
प्रभु मूरति देखि तिन्ह तैसी॥

चाणूर र मुष्टिक मदिरापान गरेर लड्नका निमित्त तयार भएर बसेका थिए। श्रीकृष्ण र बलराम राजसभामा आएपछि ती मल्लहरूले हाँक दिँदै भने—'ए बालकहरू हो ! आओ, हामी कुश्ती लड़ौं। महाराज कुश्तीका बड़ा शौकीन हुनुहुन्छ। जसले जित्ला उसलाई महाराजले इनाम दिनुहुनेछ।'

कृष्णा—'हुन्छ, राजालाई प्रसन्न गर्नु हाम्रो कर्तव्य हो, तर हामी भयौं बालक। हामी कुश्ती कसरी लड्ने ?'

मदिरापानद्वारा उन्मत्त चाणूर बोल्यो—'ए तँ बालक होइनस्। तँ ठूलो भइसकेको छस्। तैंले ठूल-ठूला राक्षसहरूलाई मारिदिएको छस्।' उसले कृष्णाको हात समातेर लछार्ने चेष्टा गऱ्यो।

कृष्णा—'यो तर अधर्मको युद्ध हुनेभो।'

चाणूर—'लड्नुमा धर्म के अधर्म के ?'

कृष्णा—'यदि तँलाई लड्नै छ भने म डराउने होइन। मेरी आमाले दूध-नौनी ख्वाएर हृष्ट-पुष्ट बनाइदिएको छ।'

अब चाणूरका साथ कृष्णाको र मुष्टिकका साथ बलरामको कुश्ती शुरू भयो। कंसका सेवक मल्लहरूलाई प्रोत्साहित गर्न नगरा बजाउन लागे।

संसार अखाड़ा हो, काम चाणूर हो र क्रोध मुष्टिक। संसाररूपी अखाड़ामा कामक्रोधरूपी मल्लहरूका साथ हामीलाई लड्नु छ। तिनीहरूले अनादिकालदेखि जीवहरूलाई पछार्दै आएका छन्। यदि सावधानीसाथ काम लियौ भने काम-क्रोधलाई मार्न सक्नेछौ, अन्यथा तिनैले तिमीलाई पछारिदिनेछन्। मनुष्यको अवतार कामक्रोधमाथि विजय पाउनका निमित्त हो।

कुश्ती शुरू भयो, नन्दबाबा आत्तिन थाल्नुभयो। 'यी मल्लले मेरा सानासाना बालक मार्ने भए।' श्रीकृष्ण परमात्मा हुनुहुन्छ तर नन्दजीका निमित्त ती बालकै थिए। नन्दबाबाले आँखा चिम्लेर नन्देश्वर महादेवको आराधना गर्नुभयो र भन्नुभयो—'यदि तपाईंले मेरा कृष्ण र बलरामको रक्षा गरिदिनु हुन्छ भने म एघार मन लड्डु चढ़ाउनेछु।' फेरि उहाँलाई ध्यान आयो कुश्तीका स्वामी तर हनुमानजी हुनुहुन्छ। हनुमानजीलाई पनि उस्तै आराधना गर्नुभयो—'मेरा बालकहरूको रक्षा गर्नुहोस्।'

जय जय जय हनुमान गोसाईं।
कृपा करो गुरुदेव की नाईं॥

कृष्णले देख्नुभो पिताजी भयभीत भएर देवहरूलाई भाकल गर्दै हुनुहुन्छ, त्यसकारण उहाँले छिटै काम पूरा गर्न चाहनुभयो। यता चाणूरले थाहा पायो कृष्ण कुनै सामान्य बालक होइन, उसको काल उही हो। यदि ऊ भाग्ने कोशिश गर्छ भने कंसले मार्नेछ। त्यसकारण असल यही हुन्छ कृष्णकै हातबाट आफ्नो ज्यान जाओस्। असावधानलाई कामले मार्नेछ, सावधानलाई होइन। श्रीकृष्णले चाणूरलाई मार्नुभयो र बलरामले मुष्टिकलाई।

उता कंसका सेवक तर आँखा चिम्लिएर नगरा बजाइरहेका थिए। तब कंसले कराएर भन्यो—'अरे मूर्खहरू हो ! मेरा मल्ल मारिए तैपनि तिमीहरू नगड़ा बजाइरहेछौ ? बन्द गर यो हल्ला ?' नगराहरूको स्वर बन्द भयो।

कंसको मृत्यु नजिकै आइरहेको थियो। उसलाई सन्निपात भयो। ऊ जथाभावी बोल्न थाल्यो, यी केटाहरूलाई मारिहाल, नन्दलाई बन्दी बनाइदेऊ, वसुदेवको वध गर।

भगवान्‌ले अनुग्रहशक्तिबाट कुब्जाको र निग्रहशक्तिद्वारा चाणूरको उद्धार गरिदिनुभयो।

श्रीकृष्णले कंसको कपाल समातेर भन्नुभयो—'कृष्ण मै हुँ, देवकीको आठौं पुत्र, तेरो काल।' कृष्णले उसलाई यस्ता प्रकारले झाङ्गलझुङ्गल पारी भुईंमा लड़ाइदिनुभयो, उसको प्राणै निस्कियो।

कंस वधबाट अरू सबैलाई प्रसन्नता भयो। तर कंसका रानीहरूलाई दुःख भयो। त्यसकारण कृष्णले माइजुहरूकहाँ आएर रोएको नाटक गर्नुभो। म एघारवर्षपछि पहिलो पटक मामासँग भेट्न आएको उहाँले छोड़ेर जानुभयो। हे ! मा .......... मा।

माइजु—कृष्ण, तिमी नरोऊ। जो हुनु थियो सो भैगयो। बालहत्याको कारणले उहाँ मर्नुभयो। तिम्रो केही दोष छैन।

श्रीकृष्ण परमात्मा हुनुहुन्छ, परमात्मा निर्दोष हुनुहुन्छ। उहाँले कसैलाई मार्नुहुन्न, तार्नु ( मुक्ति दिनु ) हुन्छ। उहाँले सबैलाई आनन्द दिनुहुन्छ।

रामायणमा मन्दोदरीले पनि श्रीरामलाई निर्दोष भनेर रावणलाई दोषी साबित गरेकी छन्। रावण उसको आफ्नो पापको कारणले मरेको थियो।

माथिको कथाको रहस्य पनि हेर्नुहोस्।

कुवलयापीड हात्ती अर्थात् दर्प, मद, मोहलाई श्रीकृष्णले मार्नुभयो।

चाणूर अर्थात् काम। कामलाई परब्रह्म श्रीकृष्णले मार्नुभयो।

मुष्टिक अर्थात् क्रोध। उसलाई बलराम ( शब्द ब्रह्म ) नादब्रह्मले मारे।

कंसका ती तीनै मित्रहरूबाट सदा बचेर बस।

कंस अभिमानको रूप हो। उसका रानीहरूका नाउँ पनि सूचक छन्, अस्ति र प्राप्ति। सारा दिन अस्ति र प्राप्तिका सोचमा डुबिरहने जीव कंस हो। नीति-अनीतिबाट धनोपार्जन गरेर मोज गर्ने

खोज्ने, संसार सुखको उपभोग गर्ने कंस हो। कंसले उग्रसेनलाई बन्दी बनाएर राजा भएर बसेको थियो। उसवेला एउटा कंस थियो, आज तर जहाँ हेर उहाँ कंस भेटिने छन्।

जीव सदा काम-क्रोधबाट पिटिँदै आएको छ। उसलाई मार्नु छ। शब्द ब्रह्मको उपासनाले क्रोध मर्दछ र परब्रह्मको उपासनाले काम।

कंसको उद्धार भयो किनभने भगवान्‌को नाउँ लिएर मर्ने व्यक्ति दुष्टात्मै किन नहोस्, उसको उद्धार भइहाल्छ।

सम्बन्धविना स्नेह उत्पन्न हुन पाउँदैन। त्यसकारण परमात्मासँग सम्बन्ध जोड़िदेऊ। उहाँसँग जो चाहे सम्बन्ध स्थापित गर। परमात्माको कुनै पनि स्वरूपलाई इष्टदेवको रूपमा स्वीकार गरेर सम्बन्ध जोर। लौकिक स्नेहमा पनि सम्बन्धको आवश्यकता पर्छ। कोही विरामी पर्‍यो भने उसको परिचित उसलाई हेर्न आउँछ। सम्बन्धले मात्र स्नेहलाई जन्माउँछ।

मानिस धनीहरू, अफिसरहरू, मंत्रीहरूका साथ तुरुन्तै सम्बन्ध जोर्दछन् तर परमात्मासँग जोर्नमा अल्छी मान्दछन्। सच्चा सम्बन्धी ईश्वर मात्रै हो। ईश्वरसँग सम्बन्ध कायम गर्नेलाई सबै कुरा पाइन्छ। श्रुतिका अनुसार, एक परमात्माका अनेक रूप छन्।

वन्दन र पूजन सबै देवहरूको गर्नुपर्छ तर ध्यान ईश्वरको मात्रै गर्नुपर्छ। एउटै स्वरूपमा मन लगाइराख्नाले ध्यान शक्ति बढ्छ र मन उसमा स्थिर हुन्छ। कंस वैरभावद्वारा कृष्णको विचार गरिरहन्थ्यो। फेरि उसको मनमा शत्रुरूपबाट पनि वास तर कृष्णको मात्र थियो र उसको उद्धार भयो।

ईश्वरको मारमा पनि प्यार हुन्छ। ईश्वर जसलाई मार्नुहुन्छ उसलाई उद्धार गर्नु ( तार्नु ) पनि हुन्छ। श्रीकृष्णले कंसको वध गर्नुभएको होइन, उद्धार गर्नुभएको हो।

भगवान् जब आफ्नो शत्रुलाई मुक्ति दिनुहुन्छ भने प्रेमसाथ पूजा-स्मरण गर्नेलाई मुक्ति किन दिनुहुन्न ?

श्रीकृष्ण वसुदेव-देवकीलाई प्रणाम गर्न झ्यालखानामा आउनुभयो। दुवैलाई बन्धनमुक्त गरिदिनुभयो। सेवकले जंजीर चुँड़ाउन नसक्दा श्रीकृष्णले आफ्नो दाँतले छिनालिदिनुभयो। वसुदेव-देवकीका सन्तान लुटिए, तर उनीहरूले भगवान्‌को ध्यान गर्दै रहेका हुनाले उनलाई पनि मुक्ति मिल्यो।

तन्मयता, तल्लीनताविना सिद्धि पाईंदैन। ध्यानविना साक्षात्कार हुन पाउँदैन। वसुदेव-देवकीले एघार वर्षसम्म कठोर तपस्या गरेका हुनाले कृष्ण भेटिनुभयो।

आज यतिका वर्षपछि पुत्रलाई देखेर वसुदेव-देवकीको मन भरियो। उहाँहरूले बोल्न धेरै चाहनुहुन्थ्यो तर प्रेम र भावावेशले गर्दा हेरिरहनु मात्र भयो। केही बोल्न सक्नुभएन। सबैले परस्परको प्रेमद्वारा सन्तोषसाथ हेरिरहेछन्।

कृष्णले भन्नुभयो—'पिताजी र माताजी, चारै पुरुषार्थलाई सिद्ध गर्ने यो मानव शरीर तपाईंहरूले मलाइ दिनुभएको हो। मेरा अपराधलाई क्षमा गर्नुहोस्। अब म कहिल्यै तपाईंबाट टाढ़ा जाने छैन। मेरो प्रणाम स्वीकार गर्नुहोस्।'

कृष्णलाई हात्तीमा चढ़ाएर सारा नगरको परिक्रमा गराइयो। नन्दबाबाले विचार गर्नुभयो, 'कृष्णको यत्रो धूमधामसँग सम्मान भयो तर कसैले यो सोधेनन् ऊ भोको छ कि ?' उनले नौनी र मिश्री ल्याए र कृष्णलाई हात्तीबाट तल झारेर डटेर ख्वाए। बाटामा यस प्रकार जहाँ पनि विश्राम गरियो। त्यहाँ विश्रामघाट पनि भयो।

कंसको वध भएपछि श्रीकृष्णको हातमा मथुराको राज्य आयो, उहाँलाई कुनै आसक्ति थिएन। त्यस कारण राज्य उग्रसेनलाई सुम्पिदिनुभयो।

वाणी र व्यवहार एक नभएमा वाणी शक्तिशाली हुन पाउँदैन। ज्ञानलाई क्रियात्मकस्वरूप दिनु छ। बङ्गलामा बसेर विलासी जीवन बिताउने व्यक्तिले वेदान्तको चर्चा कुन अधिकारबाट गर्न सक्दछ ? धेरै पढ्नुभन्दा पनि जीवनमा सिद्धान्तलाई लागू गराउनाको आवश्यकता धेरै छ। श्रीकृष्णले आफ्नो उपदेश जीवनमा लागू गराउनुभएको थियो। उहाँले गीतामा निष्काम कर्मको उपदेश दिनुभएको छ। उहाँले मथुराको राज्य उग्रसेनलाई दिएर चरितार्थ पनि गरेर देखाउनुभयो।

युद्धभूमिमा कृष्णले अर्जुनलाई अनासक्तिको उपदेश दिनुभएको थियो। त्यो अनासक्ति जीवनको परिपूर्णताको निमित्त आवश्यक छ र संसारका निमित्त बाधक छैन। संसार होइन तर उसको आसक्ति बाधक छ।

मानिसले श्रीकृष्णलाई मथुराको राज्य स्वीकार गर्न आग्रह गरे तब उहाँले भन्नुभयो मैले राज्यको लोभले होइन तर मानिसहरूको कष्ट हटाउनका निमित्त कंसको वध गरेको हुँ। कंसका पिता उग्रसेनलाई राजा बनाउनुपर्छ। म चाहिँ तपाईंहरूकै सेवक हुँ।

गर्गाचार्यले नन्दजीलाई भन्नुभयो—'श्रीकृष्ण वसुदेवका पुत्र हुन्, तपाईंका होइनन्। यशोदाले छोरी पाएकी थिइन्। अब कृष्ण गोकुलमा होइन। मथुरामै बस्ने छन् सुनेर नन्दबाबा व्याकुल भए।'

बलराम र श्रीकृष्ण पनि नन्दजीलाई भेट्न आउनुभयो र भन्नुभयो—'बाबा, जब हामी मल्लहरूका साथ युद्ध गरिरहेका थियौं तब हनुमानजीको दर्शन भएको थियो।'

नन्दजीले भन्नुभयो, 'मैले हनुमानजीलाई अनुरोध गरेको थिएँ र बालकहरूको रक्षा वहाँले गरिदिनुभएको थियो। यस्तो नभएको भए मेरा यी बालकले ती मल्लहरूलाई कसरी पछार्न सक्थे ?' नन्दबाबा बड़ो सूधो हुनुहुन्छ।

श्रीकृष्ण नन्दजीसँग भन्न थाल्नुभयो—मानिसले जे मन लाग्छ भनून्, म तर तपाईंकै सेवक हुँ। तपाईं मेरा पिता हुनुहुन्छ। मैले कंसको वध गरें, त्यस्तै जरासन्ध, दन्तवक्त्र आदि राजा मेरा शत्रु

भएका छन् । म गोकुल गएँ भने ती सबै वहाँ मसँग लड्न आउने छन् र सबै गोकुलवासीहरूलाई पनि सताउने छन् । त्यसकारण म केही समयका निमित्त यहीं बसेर ती राजाहरूलाई हराई गोकुल आउने छु । तपाईंको आशीर्वादले सबै कुरा ठीक हुनेछ । म यहाँको आफ्नो काम पूरा गरेर तपाईंकहाँ आउने छु । तपाईं गोकुल जानुहोस् र मेरी माता, सखीहरू र गाईहरूको यादविचार गर्नु होला । मेरी आमालाई भनिदिनुहोला उनको कृष्ण अवश्य फर्कनेछ ।

प्रेममा आग्रह हुन सक्छ, दुराग्रह हुँदैन ।

नन्दबाबा भन्न थाल्नुभयो—'छोरा ! म दुराग्रह कसरी गरूँ ? मैले तिम्रो होइन, तिम्रो सुखको कामना गरेको हुँ । मैले आफ्ना सुखका निम्ति प्रेम गरेको छु । म नारायणसँग सदा प्रार्थना गर्दै रहूँला उहाँले तिमीलाई सुखी राखून् । कुनै वेला व्रजमा अवश्य आउनू ।'

कृष्ण—'हवस्, आफ्नो काम पूरा गरेर म अवश्य आउनेछु । मेरी मातालाई पनि यही भनिदिनुहोला । मेरा गाईहरूको यादविचार गरिदिनुहोला ।' यो प्रसङ्ग भागवतमा छैन तर अरू ग्रन्थहरूमा छ ।

गोकुलका कृष्ण अनुपम हुनुहुन्छ । उहाँको स्वरूप दिव्य छ र आनन्द अलौकिक, तर तत्त्वतः गोकुल र मथुराका कृष्ण एकै हुन् ।

सद्गुरुको सेवा तर ईश्वरले पनि गर्नुपर्छ, गुरुसेवाको आदर्श स्थापित गर्नका निमित्त श्रीकृष्ण क्षिप्रा नदीको किनारमा उज्जैन क्षेत्रमा सान्दीपनी ऋषिको आश्रममा विद्या प्राप्त गर्न जानुभो ।

सुपात्र सन्तको सेवा नगरीकन ईश्वरको कृपा प्राप्त हुन सक्दैन । कुनै तपस्वी पवित्र सन्तको धन, तन, मनले सेवा गऱ्यौ भने उनका अन्तरको आशीर्वाद पाउनेछौ । मनुष्यका निमित्त यस्तो सन्तसेवा आवश्यक छ । सेवाद्वारा प्राप्त विद्या सफल हुन्छ । पुस्तक पढ़ेर प्राप्त गरेको ज्ञानले धन र प्रतिष्ठा दिन सक्छ तर मनको शान्ति भने पाइन्न । सन्त केवल बोलेर मात्र होइन मौन भएर पनि उपदेश दिन्छन् । सन्तको प्रत्येक व्यवहार ज्ञान र भक्तिले भरिएको हुन्छ, केवल स्वप्रयत्नले प्राप्त विद्याले अभिमान पनि ल्याउँछ, पवित्र सन्तको सेवा गरेर प्राप्त गरेको विद्याले विनय र विवेक ल्याउँछ ।

श्रीकृष्ण गुरुका निमित्त वनबाट समिधा ल्याइदिन्थे र पानी पनि भरिदिन्थे ।

प्राचीनकालका गुरु विरक्त हुन्थे । उनका शिष्य पनि उस्तै बन्दथे । वैराग्यविना विद्याले शोभा दिँदैन, यदि विद्याभ्यासका समय विद्यार्थीले विलासी जीवन बितायो भने विद्या नष्ट हुन्छ । भगवान्को विद्यार्थीजीवन बड़ो संयमी थियो ।

गुरुका राम्रा-नराम्रा विचार, संस्कार आदि सबै कुरा विद्यार्थीका जीवनमा उत्रेर आउँछन् । आजकलका प्रोफेसर विलासी हुन्छन् जसले गर्दा विद्यार्थी पनि विलासी बन्न जानु स्वाभाविकै

हो। विलासी शिक्षकले शाङ्करभाष्य पढ़ाउनु निरर्थक छ। प्राचीन गुरु स्वयं संयमी थिए र पो शिष्य पनि संयमी बन्थे। संयमै सुखदायी छ। विद्यार्थी अवस्थामा संयमको आवश्यकता धेरै पर्छ।

आजकाल तर पैसा कमाउने विद्या पढ़ाइन्छ, तर सांसारिक बन्धनहरूबाट मुक्त गराउने विद्या होइन। गाउँमा पढ़ाईको योग्य व्यवस्था छैन, शहरमा रुपियाँ कमाउन मात्र सिकाइन्छ। आज आत्मविद्या, अध्यात्मविद्याको नामोनिशान मेटाइदिएको छ। आत्मा, परमात्मा ती दुवैको सम्बन्ध, जीवनको सच्चा लक्ष्य आदि केही पनि संझाउने र पढ़ाउने गरिँदैन। ज्ञान बढ्दै गइरहेछ तर विद्या घट्दै गइरहेछ। ज्ञानको उपयोग छलकपटका निमित्त मात्रै गरिन्छ।

## सा विद्या या विमुक्तये।

विद्या त्यही हो जसले प्रभुचरणमा लैजाओस्, मुक्ति दिलाओस्।

गुरुकुलमा पढ्न आएका एक गरीब ब्राह्मण पुत्रका साथ श्रीकृष्णको मैत्री भयो। ऊ सौराष्ट्रको थियो र नाउँ सुदामा थियो। श्रीकृष्णका अन्य कुनै पनि मित्रको उल्लेख छैन।

सुदामाको अर्थ हो इन्द्रियहरूको दमन, निग्रह गर्ने व्यक्ति। इन्द्रियहरूको विग्रहविना न विद्या पाइन्छ न फल। विद्यार्थीका निमित्त इन्द्रिय दमन बहुतै आवश्यक छ। यस्तै सूचना दिनका निमित्त शायद सुदामाका सिवाय अन्य कुनै सहपाठीको निर्देश भागवतमा छैन।

सुदामाका साथ मैत्री गर्नेवालाले मात्र सरस्वतीको उपासना गर्न सक्छ। सुदामा त्यस संयमी व्यक्तिको प्रतीक हो, जो परमात्मालाई प्राप्त गर्न चाहन्छ।

परमात्माको दर्शन संयमविनाको विद्याले प्राप्त हुन सक्दैन। संयमविना जीवन दिव्य हुँदैन। संयम र वैराग्यलाई बढ़ाउँदै लैजाऊ। जुन सुखलाई त्याग गरेको छ, त्यसैलाई फेरि उपभोग गर्ने इच्छा भए त्यो थुकेको थूक चाटेजस्तो भयो। त्याग गरिएको विषयको इच्छा कहिल्यै नगर्नु।

शास्त्र र ईश्वर, जीव र पशुका निमित्त होइन, मनुष्यका निमित्त हो।

सुदामाका साथ मैत्री गर्‍यौ भने द्वारिकानाथ भेटिनुहुनेछ। सुदामा सर्वोत्तम संयमको साक्षात् रूप हो। मनलाई अङ्‌कुशमा राख।

जसले आत्म तत्त्वको सन्दीपन गराउन सक्छ त्यही सान्दीपनी हो, त्यही गुरु हो। सद्‌गुरुले बाहिरबाट केही ल्याइदिँदैनन्। उनी तर जो भित्र छ उसैलाई जाग्रत् गर्दिन्छन्। ज्ञानमार्गले प्राप्त गरेकोलाई प्राप्ति गराउँछ।

श्रीकृष्णलाई पनि पृथ्वीमा गुरुजीको आवश्यकता पर्छ। भगवान्‌ले सुदामा ( संयम )-का साथ मैत्री गरेर सदाचारपूर्ण जीवन बिताउनुभयो। आजका विद्यार्थीले पनि सुदामासाथ मैत्री गरेर विद्याभ्यास गरेमा उसको विद्या सफल हुन सक्छ तर त्यस्तो संयम आज कहाँ पाउनु ?

संसारमा बसेर ब्रह्मचर्यको पालन गर्नु बड़ो कठिन छ। सात्त्विक वातावरणले हृदय सुधार्दछ, दूषित वातावरणले बिगार्दछ।

स्वयं ईश्वर भएर पनि कृष्णले गुरुसेवा गरेर जगत्का सामुन्ने एक आदर्श स्थापित गर्नुभयो।

पिता-पुत्रको वंशलाई विन्दुवंश र गुरु-शिष्यको वंशलाई नादवंश भन्दछन्। नादवंश, विन्दुवंशभन्दा श्रेष्ठ छ।

विद्याभ्यासको समाप्ति भएपछि कृष्णले गुरुदक्षिणा दिने इच्छा प्रकट गर्नुभो। सान्दीपनीले भने—क्षिप्रानदीको किनारमा स्थित मेरो आश्रममा फलजलको केही कमी छैन र अरू कुनै वस्तुको मलाई आवश्यकतै छैन।

कृष्ण—'गुरुदेव, त्यो ठीकै छ, तर गुरुदक्षिणा नदिइकन मेरो विद्या असफल हुनजानेछ, त्यसकारण तपाईंले केही न केही माग्नै पर्छ।'

सान्दीपनी—'यदि कुनै सुपात्र विद्यार्थी भेटिएदेखि केही पनि पाउने आशा नगरेर विद्यादान गरी विद्याभ्यास बढ़ाउँदै रहनू। ज्ञानदानमा कृपणता नगर्नू। शिष्य परम्परा बढ़ाउँदै विद्यादान गर्दै रहनू। बस् यही मेरो इच्छा छ।'

कृष्णले गुरुले भनेका वचनअनुसार पूर्णतः पालन गर्नुभयो। उहाँले अर्जुनलाई युद्ध क्षेत्रमा गीताको दिव्य ज्ञान दिनुभयो तर उनबाट केही लिनुभएन। उहाँले अर्जुनलाई मात्र ज्ञान दिनुभएन उनको र उनका अश्वहरूको समेत सेवा गर्नुभो। महाभारतमा लेखिएको छ रात्रिका समय थाकेका अर्जुन सुतिहाल्थे र श्रीकृष्ण उनको सेवा गर्नुहुन्थ्यो र घोड़ाहरूको पनि यादविचार गर्नुहुन्थ्यो। घोड़ाहरूका घाउमा मल्हमपट्टी पनि लाइदिनुहुन्थ्यो।

अर्जुन श्रीकृष्णलाई आफ्नो गुरु मान्थे—तर श्रीकृष्णले उनलाई कहिल्यै शिष्य मानेनन्, सखा माने। ज्ञानोपदेश दिए तर गुरुदक्षिणा या अरू कुनै कुरा बदलामा मागेनन्।

गुरु निरपेक्ष हुनुपर्छ र शिष्य निष्काम, तर आजकल ठूला-साना सबै दुवै हातले बटुल्न खोज्छन्। आजकल मानिस चाहन्छन् कुनै सन्त महात्माका आशीर्वादले सम्पत्ति, सन्तति पाएदेखि कति असल हुन्थ्यो होला। तर सच्चा सन्त भएमा कहिल्यै सांसारिक झञ्झटको आशीर्वाद दिँदैनन्। सच्चा सन्तले तर विकारवासना नष्ट गर्ने वाला अलौकिक भजनानन्दको दान गर्दछ।

कृष्णले गुरुपत्नीलाई भन्नुभो—'गुरुजी केही माग्नै चाहनुहुन्न, तर तपाईंको केही इच्छा छ भने माग्न सक्नुहुन्छ।'

गुरुपत्नी—'मेरो एउटा छोरो थियो। ऊ प्रवास यात्राको समयमा समुद्रमा बग्यो। यदि तिमीलाई गुरुदक्षिणा दिनु छ भने त्यो हराएको मेरो छोरालाई ल्याइदेऊ।'

श्रीकृष्णले समुद्रमा गोता लगाउनुभो। वहाँबाट पाञ्चजन्य शङ्ख पनि प्राप्त भयो र गुरु पुत्र पनि। ती मुरलीधर अब शङ्खधारी पनि भए।

पुत्र पाएपछि गुरु-दंपत्ति प्रसन्न भए। उनीहरूले आशीर्वाद दिए—'बाबु, तिम्रो मुखमा सरस्वतीको र चरणमा लक्ष्मीको वास हुनेछ, तिम्रो कीर्ति विश्वव्यापी हुनेछ। मेरो विद्याको वंशलाई बढ़ाउँदै लानू।'

गोपिनीहरूले पनि श्रीकृष्णसँग केही मागेका थिएनन्। त्यसकारण उनी स्वयं तिनका ऋणी भए। भगवान्सँग केही पनि नमाग।

भगवान्को गोकुललीला एघार वर्षको, मथुरालीला चौध वर्षको र द्वारिकालीला सय वर्षको थियो। उहाँ पृथ्वीमा एकसय पच्चीस वर्षसम्म सशरीर रहनुभयो।

विद्याभ्यास समाप्त गरेपछि श्रीकृष्ण मथुरा आउनुभो। यादवहरूलाई परम आनन्द भयो। मथुराको राजप्रासादमा भगवान्ले निवास गर्नुभयो।

अब उद्धवागमनको प्रसङ्ग आइरहेछ।

उद्धवागमनको कथावक्ताका निमित्त एक आह्वान हो, यस्तो दक्षिणका महात्माहरूको मत छ। यस प्रसङ्गमा ज्ञान र भक्तिको मधुर कलह छ। यसमा ज्ञान र भक्तिको समन्वय पनि छ। उद्धव निर्गुण ब्रह्मको पक्षधर छन्, गोपिनीहरू शुद्ध प्रेमलक्षणा सगुण भक्तिको। त्यसो तर भक्ति र ज्ञानमा केही अन्तर छैन। भक्तिको परिणति हो ज्ञान।

ज्ञानको अभावमा भक्ति अन्धो छ र भक्तिको अभावमा ज्ञान पङ्गु। भक्तिका निमित्त ज्ञान र वैराग्य दुवैको आवश्यकता छ। ज्ञान र वैराग्यविना भक्ति बाँझी हुन्छे।

आरम्भमा यदि स्वयंलाई प्रभुको दास मानेर—दासोहम्को भावनाद्वारा ईश्वरको आराधना गरियो भने भगवान्सा सम्बन्ध हुन सक्छ। मान तिमी भगवान्कै हौ र उहाँ तिम्रै हुनुहुन्छ। यस्तो अनुभूति भएपछि मात्र देहभान बिर्सिइन्छ तब 'म'-को अस्तित्व मेटिन्छ। भगवान्को मात्रै अस्तित्व अनुभव हुन थाल्छ। अगाड़ि गएर भगवान्सङ्ग तादात्म्य बढ्दै जान्छ, 'दासोहम्'-को अवस्थाबाट 'सो हम्'-को अवस्थातर्फ प्रगति हुन्छ।

भक्ति ज्ञान हो र ज्ञान भक्ति। ती जब एक हुन जान्छन् तब जीवन सार्थक हुन्छ।

कोही ज्ञानी मान्दछन् उनलाई भक्तिको आवश्यकता छैन। तिनीहरू भक्तिको तिरस्कार गर्छन्। यस्तै प्रकारले केही भक्तजन ज्ञानवैराग्यको अपेक्षा गर्छन्। यी दुवैथरीको दृष्टिकोण गलत छ। भक्ति र ज्ञान परस्परका पूरक हुन्। एकको अभावमा दोस्रो पङ्गु बन्न जान्छ। भक्ति र ज्ञान दुवैको आवश्यकता छ।

ज्ञान-वैराग्यसहित भक्ति हुनुपर्छ। वैराग्यविनाको भक्ति काँचो हुन जान्छ। दुवैलाई एक अर्काको अपेक्षा छ।

उद्धव ज्ञानी हुनुहुन्थ्यो तर उहाँको ज्ञानलाई भक्तिको साथ थिएन। भक्तिरहित ज्ञानले अभिमानी बनाउँछ। भक्तिले ज्ञानलाई नम्र बनाउँछ। भक्तिको साथ नभएमा ज्ञानले अभिमानद्वारा जीवलाई

उद्धत बनाउँछ। ब्रह्मज्ञान भएर पनि यदि स्वरूपप्रीति भएन भने तब ब्रह्मज्ञान हुँदैन। सच्चा ज्ञानी त्यो हो जो परमात्मासँग प्रेम गर्छ। ज्ञानी भएपछि धन, प्रतिष्ठा, आश्रम आदि आइहाले भने पतन मात्रै हुनेछ। ज्ञानीलाई पनि भक्तिको आवश्यकता छ।

जीवले जब ईश्वरसङ्ग प्रगाढ़ प्रेम गर्नथाल्छ अनि उहाँले उसलाई आफ्नो मूल रूपको दर्शन गराइदिनु हुन्छ।

मनुष्यले आफ्नो सारा धन-सम्पत्ति केवल आफ्ना खास मानिसलाई दिन्छ। भगवान् पनि त्यस्तै हुन्, उहाँ पनि आफ्ना सच्चा भक्तलाई मात्र आफ्नो सच्चा स्वरूप देखाउनुहुन्छ। जब साधारण व्यक्ति पनि आफ्नो प्रेमीबाहेक कसैलाई आफ्नो अन्तर देखाउँदैन भने भगवान्ले पनि आफ्नो भक्त बाहेक अरू कसैलाई आफ्नो रूप किन देखाउने ?

भक्तिको विना ज्ञान, ज्ञानको विना भक्ति अपूर्ण छ। भक्तिलाई पनि यदि ज्ञानको साथ छैन भने ईश्वरको सर्वव्यापकताको अनुभव हुन सक्दैन। एउटै वस्तुमा ईश्वरको अस्तित्व मान्ने वैष्णव अधम हो। जहाँ पनि ईश्वरलाई मात्र देख्नेवाला महान् वैष्णव हो।

वैराग्य साथ भएन भने भक्तिले घरको कुनै एक-आध झ्यालबाट भगवान्लाई हेरिरहेको हुन्छ। यदि भक्तिलाई ज्ञानको साथ हुन्छ भने कणकणमा भगवान्को दर्शन हुनेछ।

उद्धवजीको ज्ञान र गोपिनीहरूको प्रेमलक्षणाभक्ति दुवै आफू-आफूमा महत्त्वपूर्ण छन् तर दुवैको समन्वय आवश्यक छ। उद्धवजीको निष्ठा ज्ञानमा छ र गोपिनीहरूको प्रेममा। ज्ञान प्रेमका विना शुष्क छ, निरर्थक छ। परमात्माको ज्ञान भएर पनि यदि उहाँका साथ प्रेम हुन पाएन भने परमात्माको अनुभव हुन पाउँदैन। ज्ञान प्राप्ति भएपछि प्रेमको प्राप्ति गर्नैपर्छ।

गोपिनीहरू प्रेमका ध्वजा हुन् र उद्धव ज्ञानका मूर्ति।

ज्ञान, भक्ति र वैराग्य यी तीनैवटाको समन्वय भएपछि मात्र परमात्मासँग साक्षात्कार हुनेछ।

उद्धव ज्ञानी थिए तर उनको हृदय प्रेम शून्य थियो, शुष्क थियो। त्यसकारण उनलाई अलौकिक आनन्द मिल्दैनथ्यो।

ज्ञान चर्चाको होइन, अनुभवको विषय हो। ज्ञानी कहिलेकाहीं अभिमानी बन्दछ।

भक्त सदा नम्र रहन्छ। नम्रता भक्तिको आसन हो।

भक्त स्वयंलाई जगत्को सेवक मान्दछ।

''मैं सेवक सचराचर रूप स्वामी भगवन्त।''

यो जगत् वासुदेवमय छ, भगवान्कै एक स्वरूप हो।

## वासुदेवः सर्वमिति।

गोपिनीहरूको भक्ति ज्ञानोत्तर थियो। उद्धलाई यति पनि थाहा थिएन ज्ञानोत्तर भक्ति पनि हुन सक्छ।

उद्धव ज्ञानलाई सबै कुरा ठान्दथे। त्यसकारण उनलाई प्रेमलक्षणा पाठ पढ़ाउन भगवान्‌ले व्रजमा पठाउनुभएको हो।

श्रीकृष्णले विचार गर्नुभयो यदि गोपिनीहरूलाई ज्ञानको अनुभव हुनगयो भने उनलाई दुःख आदिले सताउँदैन र उद्धवजीलाई भक्तिको अनुभव भयोभने उनको ज्ञान सफल हुनेछ। उद्धवको ज्ञानमा अभिमानको अंश थियो। गोपिनीहरूको प्रेम लक्षणाभक्तिको पुटबाट ज्ञान सम्हालिने र उद्धवजीको कल्याण पनि हुने थियो। उनको ज्ञानाभिमान नष्ट गरेर कल्याण गर्नुछ।

गोपिनीहरूलाई उद्धवजीबाट ज्ञानार्जन भयो भने मेरो विरहले उनलाई सताउने थिएन। उनलाई अनुभव हुनेथियो म उनका नजिकै छु। मलाई गोपिनीहरूको कल्याण गर्नु छ र उद्धवजीको पनि।

उद्धवागमनको पाठ गर्दै एकनाथ महाराज तीन दिनसम्म समाधिस्थ हुनुभएको थियो।

गुरुकुलमा विद्याभ्यास पूरा गरेपछि श्रीकृष्ण मथुरा आउनुभो। राजा उग्रसेन बड़ा विवेकी थिए। उनले भगवान्‌सँग भने, 'यो सारा राज्य तपाईंकै हो। म तपाईंको सेवक हुँ। तपाईंको आज्ञा मलाई शिरोधार्य हुनेछ।'

श्रीकृष्णको गोकुललीला समाप्त भएर मथुरालीला आरम्भ भयो। अब उहाँ मथुरानाथ हुनुहुन्छ, यहाँ ऐश्वर्यको प्राधान्य छ। गोकुलका गोपाल अब मथुराको अधिपति हुनुहुन्छ। गाई चराउने कृष्णलाई अब कैयौं दास-दासीहरूले सेवा गरिरहेछन्। उद्धवजी पनि श्रीअङ्गको सेवा गर्नुहुन्छ। सबै प्रकारका सुख र ऐश्वर्य चरणमा उपस्थित छन्।

जीवन ऐश्वर्यमय भयो, तर भगवान्‌ले व्रजवासीहरूको प्रेमलाई बिर्सनुभएको छैन। राजमहलको अटालीमा बसेर उहाँ गोकुलको दृश्य संझिरहनुहुन्छ। उहाँ बराबर यशोदाजीलाई संझनुहुन्छ। उहाँ मेरो प्रतीक्षामा रोइरहनुभएको होला। मेरी सोझी माताले मेरो वचन संझिएर बाटो हेरिरहनुभएको होला।

मेरा प्यारा गाईहरू र बाच्छा-बाच्छीहरू के गर्दै होलान् ! मथुराका तर्फ मुख गरेर मलाई बोलाइरहेका होलान्।

मेरो बाबाले पनि मलाई संझना गर्नुभएको होला।

यसप्रकार उहाँ बारम्बार सबैलाई संझनुहुन्थ्यो र आँसु पनि बगाउनुहुन्थ्यो।

मथुरामा ऐश्वर्य थियो तर प्रेम थिएन। प्रभुलाई उनीसँग प्रेम गर्ने जीवको आवश्यकता छ, उनका ऐश्वर्यको प्रेमीको होइन।

श्रीकृष्ण बारम्बार व्रजवासीहरूलाई संझिएर रोइरहनुहुन्थ्यो। माता-पिता, गोपिनीहरू, गाईहरू संझिनुहुन्थ्यो र रुनुहुन्थ्यो।

प्रेमीको विरहमा बग्ने आँसु सुखदायीजस्तो लाग्दछ। विरहमा आँसुले मात्रै साथ दिन्छ।

जीवको ईश्वर स्मरण चाहीं साधारण भक्ति हो, तर जुन जीवको भगवान् स्वयं स्मरण गर्नुहुन्छ त्यो तर असाधारण भक्त हो। यस्तो भक्तनै श्रेष्ठ हुन्छ। भक्ति गर तब यसरी गर जो स्वयं भगवान्ले पनि तिम्रो स्मरण गर्नुपरोस्।

बेलुका भएपछि अटालीमा बसेर व्रजवासीहरूको संझनामा आँसु बगाउने क्रम श्रीकृष्णको नियमजस्तो भएको थियो। उहाँ गोपिनीहरूलाई संझनुहुन्थ्यो, गाईहरूलाई पनि संझनुहुन्थ्यो र आमालाई पनि संझनुहुन्थ्यो। 'रोइरहेकी आमालाई कसले संझाउँदो हो ! व्याकुल गाईलाई कसले ख्वाउँदो हो।' सबैलाई संझिएर उहाँ मनभरि हुनुहुन्थ्यो।

प्रेमीको विरहमा, स्मरणमा तल्लीन भएर आँसु बगाउनाले दुःख कम हुन्छ, मन हलुको हुन्छ।

उद्धवजीले जब यो थाहा पाए तब उनी सोचमा परे। सुवर्णको राजप्रासाद, सेवामा उपस्थित अनेक दास-दासीहरू, छप्पन प्रकारको भोग सामग्री, यतिको ऐश्वर्य फेरि पनि उहाँलाई कुनचाहिँ दुःखले रुवाउँदो होला ? के हाम्रो सेवामा केही कमी हुन गयो कि ?

सेवक स्वयं यदि सुख भोग्ने इच्छा राख्छ भने उसले ठीकसित सेवा गर्न सक्दैन। सेवा त्यसैले गर्न सक्छ जसले आत्मसुखको बलिदान गर्छ।

आफ्नो सुखका निमित्त म प्रभुलाई कहिल्यै कष्ट दिने छैन। यदि कुनै दुःखद प्रसङ्ग आयो भने मानुँला यो मेरो कर्मकै फल हो। आफ्नो दुःख दूर गर्नका निमित्त म प्रार्थना गर्ने छैन।

उद्धवजीले सोचे—प्रभुसित दुःखको कारण सोध्नुपर्‍यो। उनी अटालीमा आए। त्यस समयमा भगवान् गोकुलको संझना गरेर रोइरहनु भएको थियो। उद्धवजीलाई आएको देखेर उहाँले आफ्नो दुःखको आवेगलाई वसमा गरेर स्वस्थ हुने प्रयत्न गरी अगाड़ि बढ़ी उद्धवजीको स्वागत गर्नुभयो। उद्धवजी वन्दना गरेर बस्नुभयो।

प्रेम प्रदर्शनको अपेक्षा गर्दैन। ऊ हृदयमै समाइएर बस्न खोज्छ। प्रेम आफ्ना प्रियमात्रका समक्ष मात्र प्रकट हुन चाहन्छ। अरू कसैको अगाड़ि होइन।

श्रीप्रभुले शान्त भएर उद्धवको स्वागत गर्नुभयो।

उद्धवजी—'प्रभुजी, एउटा विशेष कुरा सोध्नाको इच्छाले आएको छु।'

श्रीकृष्ण—'तिमी मेरा अन्तरङ्ग मित्र हौ। जे इच्छा छ सोध्न सक्छौ।'

उद्धवजी—'म र अन्य सबै सेवक-सेविकाहरूले बुद्धिले भ्याएसम्म यथाशक्ति तपाईंको सेवा गरिरहेछौं र पनि तपाईं प्रसन्न हुनुहुन्न। भोजनका समयमा मनभरि भएको देख्छौं। हिजो तपाईं सुतिरहनु भएको थियो र म चरणको सेवा गरिरहेको थिएँ। त्यस समय स्वप्नावस्थामा तपाईंले

''राधे-राधे'' भनी बोलाइरहनु भएको थियो। को हो त्यो राधा जो तपाईंको हृदय सिंहासनमा आसन जमाएर तपाईंलाई दुःख दिइरहिछ ? तपाईंको दुःख मबाट हेर्न नसकिने भयो।'

श्रीकृष्ण—'उद्धव, सारा मथुरामा मेरो दुःखलाई सोध्ने एक तिमी मात्रै निस्कियौ। के-के भनूँ म तिमीलाई, मेरा साँच्चिकैका माता-पिता देवकी-वसुदेव हुनुहुन्छ। तर गोकुलमा बस्ने यशोदा-नन्दजी पनि मेरा माता-पिता हुनुहुन्छ। मेरी माताले मलाई कति माया गरेर ख्वाउने-पियाउने गर्नुहुन्थ्यो। मलाई मेरा सखीहरू, आफ्ना मित्र र आफ्ना गाईहरूको संझना भइरहेछ। सबै गोपबालले आफ्ना-आफ्ना घरबाट ल्याएका खाद्य-सामग्री मलाई ख्वाउँथे, कमलो पातको ओछ्यान बनाएर सुताउँथे र मेरा गाईहरूको याद-विचार गर्थे। म आफ्ना माता-पिता, मित्र र सखीहरूलाई कसरी बिर्सिदिऊँ ?'

जब मैले कालीय नागका निमित्त यमुनामा हाम्फालेको थिएँ तब सबै गाईहरू रुन लागेका थिए र जब म सकुशल बाहिर निस्किएँ तब आनन्दले बहुलाएका थिए। उद्धव, ती गाईहरूलाई बारंबार संझन्छु।

उद्धव, वृन्दावनको प्रेमभूमि छोड्दा मलाई बड़ो दुःख लागेको छ। यहाँ मलाई मथुराधिपति बनाए, सबै मेरो वन्दना गर्छन्, सेवाका निमित्त दौड़धूप गरिरहेछन् तर यहाँ मसँग प्रेम गर्ने कोही छैन। म व्रजलाई बिर्सन सक्दिनँ। मेरी आमा, सखीहरूको जस्तो प्रेम गर्नेवाला यहाँ को छ र ? मलाई मान-ऐश्वर्यको होइन, प्रेम र स्नेहको अपेक्षा छ।

जीव अपात्र छ र पनि प्रभु उसलाई धन, प्रतिष्ठा र प्रेम दिनुहुन्छ। जीव दुष्ट छ तर प्रभु दयालु हुनुहुन्छ। हाम्रो पापको परिमाणमा भगवान् हामीलाई बहुतै कम सजाय दिनुहुन्छ। मनुष्य आँखा र मनबाट यति पाप गरिरहन्छ यदि ती सारा पापहरूको सजाय भगवान्ले हामीलाई दिनुभयो भने हामीलाई पिउने पानीसम्म पनि नपाइएला। तैपनि दुःख र आश्चर्यको कुरा यो छ मानिस प्रतिदिन नास्तिक हुँदै गइरहेछन्।

'उद्धव ! यशोदाको जस्तो प्रेम मेरा निमित्त यहाँ दुर्लभ छ। जबसम्म म खाँदिन थिएँ, उहाँ पनि भोकै बस्नुहुन्थ्यो। यहाँ भोजन सामग्रीको थुप्रो छ तर प्रेमपूर्वक खुवाउने मानिस छैन। यहाँ मेरो भोकै मरिसक्यो, जब मलाई कसैले हजार पटक मनाउँथे तब म खान्थें, यहाँ त्यस्तो मनाउनेवाला कोही छँदै छैन। खान बस्दछु तब आफ्नी आमालाई संझन्छु। म भोगको होइन प्रेमको भोको छु। जो आनन्द गोकुलमा थियो सो आनन्द यहाँ छैन। त्यहाँ सखा, सखीहरू, गाईहरू सबै मलाई संझिएर रोइरहँदा होलान्।' म व्रजलाई बिर्सन सक्दिनँ।

**ऊधो मोहि व्रज बिसरत नाहीं।**
**वृन्दावन गोकुल वन-उपवन, सघन कुञ्ज की छाँही॥**

प्रातसमय माता जसुमति अरू नन्ददेखि सुख पावत।
माखनरोटी दही सजायो, अति हितसाथ खवावत॥
गौ ग्वाल बालसँग खेलत, सब दिन हँसत सिरात।
सूरदास धनि-धनि व्रजवासी, जिनसौ हित जदुतात॥

उद्धव ज्ञानी छन्, तर प्रेम लक्षणा भक्तिको महिमाबाट अज्ञात हुनुहुन्छ। विना गुरुकृपाद्वारा प्राप्त ज्ञान विवेकयुक्त हुँदैन। जसले गुरुकृपाका विना प्रत्यक्ष ज्ञान पाएको छ उसलाई अभिमानले घेर्दछ। उद्धवको पनि यही दशा थियो। त्यसकारण भगवान् उपदेश दिन चाहनुहुन्थ्यो।

उद्धव भन्दछन्—'बालककालमा गोपबालकहरूका साथ खेल्दै रहने कुरा ठीक हो तर अब तपाईं मथुराका राजा हुनुहुन्छ र राजाले गोपबालकहरूका साथ खेल्ने विचार शोभा दिँदैन। तपाईंले व्रजलाई र सबै व्रजवासीहरूलाई बिर्सिदिनुभयो भने मथुराको ऐश्वर्य आनन्ददायी हुनेछ।'

ज्ञानाभिमानी उद्धवजी यो जान्नुहुन्न उहाँले कसलाई उपदेश दिइरहनुभएको छ।

श्रीकृष्ण—उद्धवजी, तिमी मलाई व्रज बिर्सिदेऊ भनिरहेछौ। म सबै कुरा बिर्सन सक्छु तर व्रजलाई बिर्सन सक्दिनँ। व्रजवासी पनि मलाई धेरै सम्झँदा होलान्। प्रेम अन्योन्य हुन्छ। अँ, व्रज बिर्सने एक उपाय छ। यदि उनले बिर्सिदिए भने म उनीहरूलाई बिर्सन सक्छु।

उद्धवजी ! तिमी व्रज जाऊ। वहाँ उनलाई वेदान्तको उपदेश दिऊ र उनलाई भन उनीहरूले मलाई बिर्सिदिऊन्। यदि उनले मलाई बिर्सन सक्दैनन् भने म पनि उनलाई बिर्सन सक्दिनँ। संसारका सबै सुखहरूलाई त्याग गरेर उनीहरू मेरा संसारकै निमित्त बाँचिरहेछन्। मैले फर्किएर जाने वचन दिएको थिएँ र त्यसै प्रतीक्षामा प्राण राखिरहेछन्। तिमीले उनलाई उपदेश दिएर निराकार ब्रह्मको उपासक बनाइदेऊ। त्यसो भएमा उनले मलाई बिर्सिदिनेछन् र मैले उनलाई।

मोह एकपक्षीय हुन्छ तर प्रेम पारस्परिक हुन्छ, अन्योन्य हुन्छ।

भक्तिहीन ज्ञानी अति बोल्दछ, भक्तियुक्त ज्ञानी मौन बसेर अध्ययन गर्दछ।

उद्धवजीसँग ज्ञान थियो तर भक्ति थिएन, उनी भन्न थाले—मलाई वहाँ पठाउनको साटो सात-सात दिनमा एक-एक पत्र पठाउँदै रहनुहोस्। उनीहरूले तपाईंलाई पत्र लेख्लान्। यस प्रकार पत्रव्यवहारबाट प्रत्यक्ष-मिलनजस्तो हुन्छ।

**प्रेमको सन्देश पत्रबाट पूर्णतः कसरी पठाउन सकिन्छ ? प्रेम प्रत्यक्ष मिलनबाट मात्र पूर्णतः व्यक्त गर्न सकिन्छ।**

**प्रेमका संदेशा ऊधो पाति ना पठाय।**

पत्रमा सबै कुरा इच्छानुसार कसरी लेख्न सकिएला। पत्रमा लेख्दाखेरि धेरै जसो मर्यादाले बाधा पुऱ्याउँछ।

प्रेमतत्त्वबाट उद्धवजी परिचित छैनन्। पत्रमा लेखिन्छ 'सदा संझनेवाली।' अहो, यस्तो कहिल्यै हुनसक्छ ? विचारमा व्यवहारमा अन्तर हुन्छ। त्यसकारण पत्रमा सबै कुरा खोलेर साँचो लेख्न सकिँदैन।

उद्धवजी के थाहा पाउन् श्रीकृष्ण र गोपी एकै हुन्। उनी पत्र लेख भनेर आग्रह गर्छन्, ज्ञानी पुरुष भक्त हृदयका कुराहरू जान्दैनन्। उद्धवजी प्रेमको रहस्य जान्दैनथे।

श्रीकृष्ण—'उद्धवजी, पत्र लेख्न मैले कति पटक कोशिश गरें तर लेख्नै सकिनँ। लेखौं भने के लेखौं ? म आफ्नी मातालाई पत्रको टुक्राबाट कसरी धैर्य लिनुहोस् भनौं ? उहाँ मलाई हेरेर, अङ्कमाल गरेर, ख्वाई-पिलाइकन मात्र शान्त र सन्तुष्ट हुन सक्नुहुन्छ।'

श्रीकृष्णले कतिपटक यशोदालाई पत्र लेख्न खोज्नु भयो तर उहाँ यस्तो सोचेर रोकिनु हुन्थ्यो पत्र पढ़ेर माता अरू ज्यादा संझिएर दुःखी हुनु होला। प्रथमतः ऊ यता आउँदैन पत्र पठाएर अझ दुःखित पार्दछ। श्रीकृष्ण पत्रमा 'यशोदा' शब्द लेख्दैमा रोकिनुहुन्छ। अगाड़ि केही लेखौं भनेर खोज्यो फेरि आँखाबाट आँसु आइहाल्ने।

प्रेमको भाषा अनौठो छ। प्रेम, भाषा र शब्दको सीमाभन्दा टाढ़ा छ। साँच्चिकैको प्रेम हृदयले हृदयलाई सुनाउन सक्छ, पत्रद्वारा व्यक्त गर्न सकिँदैन।

उद्धवजी, मेरो समझमा आउँदैन म के र कसरी लेखूँ ? त्यसकारण तिमी वृन्दावन गएर गोपिनीहरूलाई ब्रह्मज्ञान दिएर सम्झाई-बुझाईकन मलाई बिर्सन लगाऊ। मेरा माता-पितालाई सान्त्वना दिनू। व्रजमा गएर सबैसँग भन्नू—

ऊधो इतनो कहियो जाइ।
हम आवहिंगे दोऊ भैया मैया जानि अकुलाई॥
वाको विलग बहुत हम मान्यो, जो कहि पठायौ धाई।
वह गुन हमको कहा विसरि है बड़ो कियो पयप्याइ॥
औ जु मिलो नन्दबाबा सों, तो कहियो समुझाइ।
तौलौं दुःखी होन नहि पावै, धवरी धूमरी गाई॥
जद्यपि यहाँ अनेक भाँति सुख तदपि रह्यो नहिं जाइ।
सूरदास देखौं व्रजवासिन तबही हियो हरखाई॥

उद्धवजी ! यहाँ संसारको सबै वैभव छ तर हृदयको शुद्ध प्रेम यहाँ कहाँ छ ?

उद्धवले माने उनी ज्ञानी छन् र उनलाई व्रज पठाइदै छ। उनी ज्ञानी थिए, साथसाथै अभिमानी पनि। उनी भन्छन्—'वहाँ जानमा मलाई केही आपत्ति छैन तर गाउँका अनपढ़ गाउँलेहरूले मेरो वेदान्तको ज्ञान कसरी सम्झन सक्लान्? मेरो वेदान्तको चर्चा ती अनपढ़ गोपिनीहरूले कसरी बुझ्लान्? मेरो तत्त्वज्ञानको उपदेश बड़ो गहन छ। त्यसकारण मैले वहाँ जानु निरर्थक छ।'

यो वचन उद्धवजीको होइन, उद्धवजीका ज्ञानाभिमानको हो। उनलाई अभिमान थियो उनी वृहस्पतिका शिष्य र वेदान्तका आचार्य हुन्।

श्रीकृष्णले गोपिनीहरूको नराम्रो कुरा सहन सक्नुभएन। उहाँले उद्धवजीलाई भन्नुभयो—'उद्धवजी! मेरा गोपिनीहरू अनपढ़ छैनन्, ज्ञानभन्दा पनि उपल्लो दर्जाका छन्। उनीहरू पढ़ेलेखेका धेरै छैनन्, तर शुद्ध प्रेमका ज्ञाता छन्। अरू के भनूँ? उनीहरू छन्—'

**तामन्मनस्का मत्प्राणा मदर्थे त्यक्तदैहिकाः।**

(भा० १०-४६-४)

गोपिनीहरूको मन निरन्तर ममा लागिरहेको छ। उनको प्राण र जीवन मै हुँ। मेरा निमित्त उनीहरूले आफ्ना पति-सन्तान, नातागोताहरूको त्याग गरेका छन्। उनीहरू मलाई आत्मा मान्दछन्।

उद्धव, मेरा गोपिनीहरू अनपढ़ भएर पनि प्रेमका मूर्ति छन्, स्नेहका ज्योति छन्। प्रेमको रीत उनीहरूलाई राम्ररी थाहा छ।

उद्धव, मेरी गोपिनीहरूलाई ज्ञानको आवश्यकता छ र तिमीलाई प्रेमको र भक्तिको। त्यसकारण तिमीले वहाँ जानैपर्छ।

केवल ज्ञान मात्रबाट वा एक्लो भक्तिबाट मनुष्य पूर्ण हुँदैन। जीवनमा ज्ञान र भक्ति दुवैको समन्वय गरी प्रेममय जीवन बिताएर प्रभुलाई प्राप्त गर्नु छ।

शब्दज्ञानीलाई नम्र बन्न केही समय लाग्छ। उसको हृदयमा ज्ञानको घमण्ड हुन्छ। अभिमानले उसलाई नम्र हुनबाट छेक्दछ। विनयले आफ्ना साथ सद्गुण ल्याउँछ र अभिमानले दुर्गुण।

भगवान्‌लाई थाहा थियो अभिमानी उद्धव गोपिनीहरूलाई वन्दनासम्म गर्ने छैनन्। वन्दना नगरीकन कल्याण कसरी हुने? त्यसकारण उहाँले गोपिनीहरूलाई वन्दना गर्नू भनेर आदेश दिनुभएको थियो।

उद्धवजीको इच्छा थिएन तैपनि भगवान्‌का आग्रहका कारणले व्रज जानलाई उहाँ तयार हुनुभयो। 'तपाईंको आदेशै छ म वहाँ नन्द, यशोदा, गोपिनीहरू र गोपबालकहरूलाई उपदेश दिएर आऊँ।'

प्रभु—'उनीहरूलाई भन्नू उनका कृष्णले उनीहरू सबैलाई संझिएको छ। मातालाई भनिदिनू, मेरो वियोगमा नरुनू।'

प्रभुले सारा रात उद्धवलाई यस प्रकार सम्झाउनुभयो। प्रातःकालमा उद्धवजी जान थाल्नुभयो तब श्रीकृष्णले आफ्नो पीताम्बर र वैजयन्तीमाला प्रसादरूपमा दिँदै भन्नुभयो—'उद्धव, तिमीले मेरा यी प्रसादहरूलाई धारण गरेर मात्र गोपिनीहरूकहाँ भेट्‌न जानू। मेरा गोपिनीहरू न कुनै पुरुषहरूलाई हेर्दछन् न परपुरुषसँग बोल्दछन्। उनीहरूले मेरो यो पीताम्बर देखेर दूत मान्नेछन्। उनलाई विश्वास हुन जानेछ, तिमी मेरा हौ। उनीहरू मानिहाल्नेछन् यो हाम्रो श्यामसुन्दरको अन्तरङ्ग सखा हो। यस्तो विश्वास भएपछि उनीहरूले तिमीसँग कुरा गर्लान्। त्यसकारण यी दुवै वस्तुहरूलाई धारण गरेर मात्र जानू।'

उद्धव ! तिमी भाग्यशाली हौ व्रजभूमिमा गइरहेछौ। व्रज प्रेमभूमि हो जसले सबैको कल्याण गर्छ। तिम्रै कल्याणका निमित्त म तिमीलाई वहाँ पठाइरहेछु।

उद्धवजीको रथ हिँड्न थाल्यो तब श्रीकृष्णले उद्धवलाई भन्नुभयो—'मेरा माता-पितालाई मेरो प्रणाम भनिदिए र उहाँहरूलाई आश्वासन दिनू उहाँको कृष्ण त्यहाँ अवश्य आउने छ।' यस्तो भन्दा-भन्दै श्रीकृष्ण रुन लाग्नुभयो।

उद्धवजीले यो कुरा बुझ्न सक्नुभएन व्रजको सम्झना हुनासाथ प्रभुका आँखाबाट आँसु किन बगेर आउँछ ?

जीव जब आफ्नो जीवत्व छोड़ेर ईश्वरका साथ प्रेमद्वारा तन्मय भइहाल्छ तब ईश्वरत्व, ऐश्वर्य बिर्सिदिन्छ।

श्रीकृष्ण, मथुराका अधिपति, आफ्नो ऐश्वर्यलाई बिर्सिएर प्रेममा पागल भएर त्यस रथका पछिपछि दगुरिरहनुभएको छ र उद्धवजीलाई समाचार भन्दै गइरहनुभएको छ। उद्धवजीले भने—'म रथमा बसेको छु। तपाईं राजा हुनुहुन्छ, म सेवक। तपाईंलाई यस्तो किसिमले रथका पछिपछि दगुर्न शोभा दिएन। तपाईं चिन्ता नगर्नुहोस्। म सबैलाई राम्ररी उपदेश दिनेछु।'

अब प्रभु रोकिनुभयो। मेरा उद्धव भाग्यशाली छन्, जो प्रेमभूमिमा पुगिरहेछन्, उहाँले रथलाई हेरिरहनुभयो।

यसतर्फ जबदेखि कृष्णले गोकुल छोड़े वनका सघन कुञ्जहरू बिराना जस्तै भएका छन्। यमुनाको जल गोपिनीहरूका आँसुका धाराजस्तो लागिरहेछ। गाईहरूले घाँस खान छोड़िदिएका छन् र मथुरातर्फ हेरिरहन्छन्। श्यामविरहमा जो कोही पनि दुःखी छ, व्याकुल छ।

एउटी सखीले व्यथालाई यी शब्दमा वर्णन गरेकी छन्—

विनु गोपाल बैरिन भई कुंजै।
तब वे लता लगति अति शीतल,
अब भइ विषम ज्वाल की पुंजै॥

वृथा बहति जमुना, खग बोलत,
वृथा कमल फूलै अलि गुंजैं।
पवन, पानि, घनसार, सजीवनि,
दधि-सुत-किरन भानु भई भूँजै॥
ये उधो कहियो माधव सों,
विरह करद कर मारत लुंजै।
सूरदास प्रभुको मम जोवत,
अँखियाँ भई बरन ज्यों गुंजै॥

जबदेखि कृष्ण मथुरा गए, नन्द यशोदाले अन्नको एक दाना पनि मुखमा पारेका छैनन्— 'जबसम्म ऊ फर्किएर आउँदैन, हामी खाँदैनौं।' न राती निद्रा पर्छ न दिउँसो आराम।

कृष्ण-विरहमा जीव आकुल-व्याकुल हुन्छ, छटपटाउनेछ, आँखाबाट आँसु बरबरी झर्नेछ र मनको मलिनता धोइनेछ। बाहिरको जलले शरीर धुन्छ।

विरहाश्रुले हृदयको मलिनतालाई धुन्छ। विरहाश्रुले हृदयलाई शुद्ध, पवित्र गर्दछ।

यशोदाजी सोच्नुहुन्छ—'आफ्नो कृष्ण जब फर्किएला तब म उसलाई अँगालो मार्नेछु, काखमा बसाएर खाना ख्वाउनेछु। उसलाई ख्वाएपछि म पनि खानेछु। घरको प्रत्येक वस्तुले कृष्णको संझना गराउँछ। यस पात्रमा कृष्णले नौनी-मिश्री खाने गर्थ्यो, त्यस मेचमा आराम गर्थ्यो।' नन्द-यशोदा यसप्रकार कृष्णको संझनामा डुबिरहन्थे, आँसु बगाइरहन्थे र परस्पर आश्वासन दिन्थे र लिन्थे।

यशोदाजी आँगनमा बसेर नन्दलाई दोष दिइरहन्छिन्—'तपाईंकै कारणले कृष्णले व्रज छोड़ेर गयो। तपाईंले उसलाई गाई चराउन पठाउनुहुन्थ्यो तब ऊ भन्थ्यो उसलाई अरू गोपबालकले नचाउँथे र दौड़ाउँथे। व्रजवासी जसलाई रूखा-सुखा रोटी खान दिन्थे। त्यसकारण ऊ आजित भएर रिसायो र गोकुल छोड़ेर हिँड़िदियो। ऊ गाईको पछिपछि दगुररे, थाकेर हार हुन्थ्यो अनि ऊ यहाँबाट गयो।'

व्रजबाट जाँदाखेरि उसले फर्किएर आउँछु भनेर वचन दिएको थियो। मेरो आँसु झरेको ऊ हेर्न सक्दैनथियो। जब म रुन लाग्थें तब ऊ बड़ो स्नेहले मलाई संझाउन लाग्थ्यो। आज ऊ यस्तो निष्ठुरी किन भयो ? मथुराका मानिसले केही जादु-टुना गरिदिए होलान्। मैले सुनेकी छु, मेरो कृष्ण मथुराको राजा भयो रे। यस समाचारले मलाई बड़ो आनन्द भयो। तपाईं उसलाई गाईका पछि-पछि दौड़ाउने गर्नुहुन्थ्यो, त्यसै कारणले ऊ मसँग भेट गर्नसम्म आइरहेको छैन। यशोदा रुन लागिन्।

नन्दजी—'मैले कहिले उसलाई पठाएँ गाई चराउन? उही भन्थ्यो—म गाईको सेवाका निमित्त जन्मिएको हुँ। उसलाई गाईका विना चैन थिएन। ऊ जब यहाँ थियो तब गाईहरू खाइपिईकन कस्ता हृष्ट-पुष्ट थिए। अहिले कृष्णको विरहमा गाईहरूले खान-पिउन छोड़िदिएका छन्। हात्तीका छावा जस्ता हृष्ट-पुष्ट मेरा गाईहरू आज दुब्लाएर पातला भइसके। म यो दशा देखेर दुःखले गर्दा गोठमा पाइला हाल्न सक्दिनँ।'

मथुराको राजा हुनासाथ कृष्णले आफ्ना गाईलाई बिर्सिदिएको लाग्यो। यदि ऊ एकपटक पनि यसतर्फ आइदिए व्रज सनाथ हुने थियो। मलाई के थाहा थियो र ऊ मथुरा जानासाथ यस्तो निष्ठुर होला भनेर ! कृष्णकी गाई गङ्गी भोकै-प्यासै वृन्दावनमा घुम्दछिन्, फिर्दछिन्, घर आउँदै आउँदिनन्।

कृष्ण आफ्ना माता-पितालाई नभए पनि कमसेकम आफ्ना गाईहरूका निमित्त एकपटक यता आऊ। तिमीविना यी गाईहरू मर्न आँटेजस्ता भए।

तिमीलाई गाई प्यारा थिए। उनलाई चराउन जान्थ्यौ। मलाई लाग्दछ एकपटक तिमीलाई ओखलीमा बाँधिदिएकी थिएँ र रिसाई यहाँ नआएको हो कि ?

यस्तै किसिमबाट नन्द-यशोदाले सारा समय कृष्णका संझनामा व्याकुल भएर आँसु बगाएर बिताउँदथे। कसैको आग्रहमा कन्दमूल खाइ पनि हाल्थे।

एक दिन ती दुवैजना आँगनमा बसेर कृष्णका बाललीलाहरूको संझनामा तल्लीन भएका वेलामा एउटा काग आएर काक-काक गर्न थाल्यो। कागको बोली सगुन भन्छन्, कागबोली सुनेपछि यशोदाले सोचिन्—'आज मथुराबाट शायद कोही आउला।' उनले कृष्णको वचन संझिएर कागसँग भन्न थालिन्—'मेरो कृष्ण आयो भने तेरो चुच्चो सुनले मोरिदिन्छु। तँलाई मिष्ठान्न ख्वाउनेछु, कृष्ण आगमनको समाचार सुनाउने काग ! तेरो आजन्म सेवा गर्नेछु। काग 'मेरो कृष्ण कहिले आउँछ ?'

यता उद्धवजीको रथले मथुराको सीमा पार गरेर व्रजभूमिमा प्रवेश गऱ्यो। व्रजभूमि दिव्य छ, सात्त्विक छ, प्रेम भूमि छ। यहाँका पशु, पंछी, वृक्ष सबै दिव्य छन्, ती सबै राधाकृष्णको कीर्तन गर्छन्। वृन्दावनको महिमाको वर्णन कसले गर्न सक्छ ?

कृष्ण गएपछि व्रजका ग्वालबाल पनि सधैं प्रतीक्षा गर्थे। कृष्णले बेलुका फर्कने वचन दिएका थिए। उनी आउँदैनथे, त्यसैले सबै बालकहरू रुँदै घर फर्कन्थे। सबैको यही क्रम थियो।

एक दिन श्रीदामा, मधुमङ्गल आदि सबै ग्वाल-बाल बाटामा बसी कृष्णको प्रतीक्षा गरिरहेका थिए टाढ़ाबाट एउटा रथ आइरहेको देखियो। बालकहरूले विचार गरे कृष्ण आए होलान्। उनीहरू दगुरेर रथनजीक पुगे। तर रथमा जो बसेको थियो ऊ तल ओर्लिएन। कृष्ण भएको भए हाम्फालेर तल आई अँगालो मार्ने थिए।

उद्धवजी बालकहरूलाई देखेर पनि रथमै बसिरहे र बालकहरूलाई भन्न लागे—मैले श्रीकृष्णको सन्देश लिएर आएको छु। उनी आउनेवाला छन्। म उद्धव हुँ।

बालकहरू भन्न थाले—'उद्धवजी! हामी कृष्णलाई सुख दिनका निमित्त उनको सेवा गर्थ्यौं, कहिल्यै हामीले यस्तो विचार पनि गरेका थिएनौं उनी निष्ठुर भइजालान्। कृष्णका विना यहाँ सबै कुरा शून्य जस्तो लाग्छ। वंशीवट, यमुनाकिनारा, वृन्दावन सबै शून्य र उदास छ। यहाँ भएका वेलामा उनले हामीसङ्ग बड़ो प्यार गर्थे तर अब लाग्छ वहाँ गएर हामीलाई बिर्सिदिएका छन्। उद्धवजी, उनलाई भन्दिनु गोवर्धननाथ व्रजमा सबैले उनलाई संझना गर्छन्। उनका विना व्रज उजाड़ भएको छ। उनी यता कहिले आउँछन्?'

बालक उद्धवजीलाई नन्द बाबाको घरको बाटो देखाउँदै भन्न लागे, 'बेसै भयो, तपाईं आउनुभयो। हामीलाई पनि कृष्णलाई समाचार पठाउनु छ, तर तपाईं पहिले नन्दबाबा र यशोदाकहाँ गएर उनलाई सान्त्वना दिनुहोस्। उनीहरू रातदिन कृष्णको प्रतीक्षामा रोइरहेका छन्। हामी फेरि भेट्न आउने छौं।'

यता यशोदा कागसँग कुरा गइरहेकी थिइन् त्यो रथ आँगनमा आइपुग्यो। नन्द-यशोदाले भन्ठाने 'कृष्ण आइरहेछ' दुवै जनाको प्राणमा प्राण आयो। दुवै रथतर्फ दौड़िहाले। दुवैले कराएर बोलाए, 'कृष्ण आयो, कृष्ण आयो।' ती दुवैजना दगुर्दै रथका नजिकै पुगे, तर उसमा कृष्ण छैनन्। कोही अर्कै थियो। कृष्णलाई नदेख्दा नन्दबाबा 'कृष्ण' भन्दै मूर्च्छित भए। उद्धवजीले केही बुझ्नै सकेनन् यिनीहरू कृष्णको नाउँ लिएर किन रोइरहेछन्।

यशोदाजीले धैर्य लिईकन एउटी दासीलाई भन्न लागिन्—यी कुनै ठूला मानिस जस्ता छन्, यिनको स्वागत गर।

उद्धवजी स्नान र भोजनबाट निवृत्त भएर आराम गर्न थाले। दासीले नन्दजीलाई कृष्णका मित्र आएका छन् भन्ने समाचार दिंदा उनको मूर्च्छा खुल्यो। नन्दबाबाले आँखा खोले।

नन्दजीलाई प्रणाम गर्दै उद्धवजीले भने—'म तपाईंको कृष्णको मित्र उद्धव हुँ र उनको समाचार लिएर आएको छु।'

नन्दजीले पनि कुशलमङ्गल सोधे। उनले विचार गरे—'कृष्ण स्वयं आउन नसकेर आफ्नो मित्रलाई पठाएको होला।' 'उद्धवजी ! बेसै भयो तपाईं आउनुभयो। कंसका मृत्युले सबै यादव सुखी भए होलान्?'

उद्धवजी साँच्चि-साँच्चि भन्नुहोस्—के कृष्ण कहिल्यै हामीलाई संझन्थे?

अपि स्मरति नः कृष्ण मातरं सुहृदः सखीन्।
गोपान् व्रजं चात्मानाथं गावो वृन्दावनं गिरिम्॥

उद्धवजी, यहाँका गोपगोपिनीहरू, तरुवर, गिरि, गाईहरू, वन सबै कृष्णलाई मात्र आफ्नो सर्वस्व मान्दछन्। के कृष्ण कहिल्यै हामीहरू सबैको स्मरण गर्दछन् पनि?

उद्धवजी, कृष्णलाई भनिदिनू यी गिरिराज, यी जमुना उनैको प्रतीक्षा गरिरहेछन्। उनकी गङ्गी गाई वनमै घुमिरहन्छिन्।

यो उही यमुना हो जसमा कृष्ण जलक्रीड़ा गर्थे। यो उही गिरिराज हो जसलाई उनले आफ्नो औंलामा उठाएको थियो। यो वही वन प्रदेश हो जहाँ श्रीकृष्ण गाईहरू चराउँदै वंशी बजाउँदै थिए। ऊ फाँट हेनुहोस्, त्यहाँ कृष्ण आफ्ना मित्रहरूका साथ खेल्ने गर्थे। उद्धवजी, यी सबलाई देखेर मेरो मन श्रीकृष्णमय भइहाल्छ र म बौलाहाजस्तो भइहाल्छु।

मलाई लाग्छ कृष्ण मथुरामा छैन, यहीं छ। म देखिरहेछु ऊ झोलुङ्गोमा सुतिरहेछ। हिजो सारा रात मैले उसलाई झोलुङ्गोमा हल्लाइरहेको थिएँ र ऊसँग कुरा पनि गर्दै रहें। बिहान भयो, विचार गरें उठाइदिऊँ, नत्र गाई चराउन अबेर हुनेछ। जसै मैले झोलुङ्गोमा गएर हेरें तब त्यहाँ केही पाइनँ। म उसलाई कसरी बिर्सूं?

मलाई रोज-रोज उसको बाँसुरीको मधुर तान सुनिन्छ। हिजो मैले उसलाई कदम्बको हाँगामा बंशी बजाइरहेको देखें। मलाई लाग्यो कति घण्टादेखि उसले बंशी बजाइराखेको होला र उसलाई भोक पनि लाग्यो होला। म नौनी-मिश्री लिएर त्यो कदम्बमा चढ़ें तब वहाँ कोही पनि थिएन।

उद्धवजी, कति पटक मलाई यस्तो पनि लाग्छ ऊ मेरो काखमा बसेर खेलिरहेछ, मेरो दाह्री तानिरहेछ। यमुनामा स्नान गर्न जान्छु तब ऊ मेरो पछि-पछि आइरहेको जस्तो लाग्छ।

उद्धवजी, म उसलाई काँधमा चढ़ाएर घुमाउने गर्थें। मलाई कतिपटक आभास हुन्छ ऊ मेरो काँधमा बसिसकेको छ। त्यो समय अब कहिले फर्किएर आउला?

उसले कंसजस्तो राक्षसको वध गऱ्यो। मानिस उसलाई ईश्वर मान्दछन्। उनीहरूलाई जे ठीक लाग्छ मानून् तर मेरो ऊ पुत्रै हो। कृष्ण मेरो हो, मेरो मात्रै हो। नन्दजीका आँखाबाट आँसु बग्न थाल्यो।

'मलाई झोलुङ्गोमा, घरको कुना-कुनामा, आँगनमा, यमुनाको किनारामा जहाँकहीं कृष्ण मात्रै देखिन्छ। उद्धवजी, त्यो कहिले फर्केला? मैले कुन अपराध गरें जसले गर्दा ऊ रिसायो?'

उद्धवजी, वसुदेवजीलाई भनिदिनू—कृष्ण उहाँकै पुत्र हो। म उनको दास हुँ। कृष्णलाई भनिदिनू उनकी माता सारा दिन रोइ मात्र रहन्छिन्। ऊ जब यहाँ थियो तब मातालाई संझाउने गर्थ्यो। अब उसलाई कसले फुल्याउने? नन्दजी यति बोल्दा-बोल्दै व्याकुल भए।

उद्धवजी फसादमा परे, म यिनलाई के उपदेश दिऊँ? यिनलाई जहाँ कहीं कृष्ण अनि कृष्ण देखिन्छन्। झोलुङ्गोमा, घरमा, आँगनमा, वनमा, यमुनाकिनारामा, कदम्बको हाँगामा पनि कृष्णको मात्र दर्शन गर्छन् यी नन्दजी। ब्रह्मको सर्वव्यापकताको उपदेशक भएर पनि मैले त्यस्तो अनुभव

आजसम्म गर्न पाएको छैन। म यस्तो ब्रह्मदृष्टिवाला नन्दजीलाई के ऊपदेश दिऊँ। उनले नन्दजीलाई भने—'बाबा, धन्य हुनुहुन्छ तपाईं। तपाईंको जीवन सफल भयो। तपाईं कृष्णमय भइसक्नुभएको छ।'

यत्तिकैमा त्यहाँ यशोदाजी आइपुग्नुभयो—'उद्धवजी, साँचो-साँचो भन्नोस् मेरो कृष्ण कुशलपूर्वक छ ? ऊ खाने समयमा बड़ो जिद्दी गर्थ्यो। उ दुब्लाएको छैन ? के ऊ आनन्दमा छ ? कहिल्यै मलाई संझन्छ पनि ? वहाँ त्यसलाई कसले फकाउँदो हो ? गोकुल जब थियो तब ऊ मेरो आँसु देख्न सक्दैनथ्यो। ऊ मलाई फकाउँथ्यो।'

जब यमुनाजी जान्छु तब उसको श्याम रङ्गले कृष्णाको सम्झना गराइदिन्छ। मलाई लाग्छ अहिले ऊ यमुनाजीको जलबाट बाहिर निस्किएर मेरो काखमा आएर बसेको छ। ऊसँग सोध्नू उसकी माताले यस्तो कुन चाहिँ अपराध गरी जो ऊ यहाँ आउने नाउँसम्म लिइराखेको छैन ? मैले उसलाई एक पटक ओखलीमा बाँधिदिएकी थिएँ, यसैले ऊ रिसाएको होइन ?

ऊ कहिल्यै मलाई सम्झन्छ पनि ? म उसकी आमा होइन। उसकी आमा देवकी हुन्। देवकीलाई भनिदिनू सेविकाको आवश्यक परेछ भने मलाई बोलाउनू। कृष्णविरहमा हामी दुःखित छौं। ऊ जहाँ भए पनि, त्यहाँ मलाई लिएर हिँड्नुहोस्। मलाई वहाँ लिएर जानुभयो भने भगवान्ले तपाईंको कल्याण गर्नुहुनेछ।

म नारायणसँग प्रार्थना गर्छु कृष्ण इच्छा लागे यहाँ आऊन् वा नआऊन् तर जहाँ भए पनि सुखी रहून्।

उद्धवजी—'माताजी, श्रीकृष्ण तपाईं सबैलाई बारंबार संझना गर्नुहुन्छ। जहाँ स्वयं यहाँ आउनेवाला हुनुहुन्थ्यो तर मथुराको शासन उहाँले सम्हाल्नुपरेकाले फुर्सद पाउनुभएन। मलाई भन्नुभयो—म मथुरामा आएर यस कारोबारमा डुबेको छु, तिमी गएर मातालाई मेरो कुशल मङ्गल भनेर आऊ।'

नन्द-यशोदाको कृष्णप्रेम देखेर उद्धवजीको आधा अभिमान खतम भयो—जो व्यक्ति झोलुङ्गोमा, घरमा, आँगनमा, वृक्षमा, वनमा जहाँ-कहीं पनि कृष्णलाई देखिरहने हुन्छ उसलाई ब्रह्मको व्यापकताको कोरा उपदेश कसरी दिऊँ ? यी दुइटाले जहाँ-कहीं बुद्धि र मनबाट ब्रह्मको सर्वव्यापी रूपको अनुभव गरिरहेछन्।

कुराकुरैमा बिहान भयो।

ब्रह्ममुहूर्तमा गोपिनीहरू स्नानादिबाट निवृत्त भएर कृष्ण-कीर्तन गर्दै दधिमन्थन गर्नथाले। उनका आँखा रसाउँथे।

उद्धवजी यशोदासँग आज्ञा लिएर यमुना स्नान गर्न हिँड़े। सखीहरूलाई पनि कृष्णको सन्देश दिनु थियो। गोपिनीहरूको कृष्ण कीर्तन सुन्दा उनले सोचे—'जसको कण्ठ यति मधुर छ तिनीहरू कस्ता अद्भुत स्वरूपा होलान्।' उनले अहिलेसम्म कुनै गोपिनीको दर्शन पाएको थिएन। ब्रह्ममुहूर्तमा कृष्णकीर्तन गर्ने यी व्रजवासीहरूलाई धन्य छ। कृष्णको स्मरणमात्रले यिनको हृदय पग्लिन्छ।

गोपिनीहरू—'तपाईं खोक्रो पण्डित हो। के कृष्ण मथुरामा मात्र बस्नुहुन्छ। उहाँ सर्वत्र हुनुहुन्छ। तपाईंलाई मथुरामा मात्र भगवान् देखिनुहुन्छ? हामीलाई तर यहाँका कणकणमा उहाँको दर्शन भइरहेछ।'

उता हेर्नुस् कदम्बको वृक्षमा बसेका कृष्ण बाँसुरी बजाइरहनुभएको छ। तपाईं देख्नु हुन्न? सुनिँदैन?

उद्धवजी! यदि तपाईंलाई श्रीकृष्णको साक्षात्कार भएको भए उहाँलाई छोड़ेर यहाँ आउनु हुन्नथ्यो अथवा तपाईंलाई यहाँ पनि श्रीकृष्णको दर्शन हुनुपर्ने।

दान, व्रत, तप, होम, जप, वेदाध्ययन, ध्यान, धारणा, समाधि तथा कल्याणका अरू साधनहरूद्वारा ईश्वरसङ्ग साक्षात्कार गर्ने प्रयत्न गर्नुपर्छ, यी सबै साधन भगवान् प्राप्तिका निमित्त हुन्।

यो गोपिनीहरूले जप-तप आदि नगरीकनै केवल प्रेमभक्तिद्वारा भगवान्लाई पाएका छन्। उनीहरूले अनायासै सबै कुरा पाइसकेका छन्।

दान, जप, तप, व्रत आदि मनलाई ईश्वरसँग एकाग्र गर्नका निमित्त मात्र हो। यदि यी साधनहरूको प्रयोगपछि पनि मन ईश्वरमा लाग्दैन भने सबै कुरा व्यर्थ हुनेछ।

उद्धवले गोपिनीहरूलाई व्यापक निर्गुण-ब्रह्मको उपदेश दिने विचार गरे। उनी भन्न लागे—'निर्गुण ब्रह्मको उपासना गर।'

गोपिनीहरू—'उद्धवजी, जो आनन्द प्रभुले दिएको छ त्यो आनन्द तपाईंको कोरा ज्ञानले दिन सक्दैन। हामी कृष्णको जपका सिवाय अरू केही पनि गर्न जान्दैनौं। हामी गाउँका अनपढ़ गोपिनी हौं। आफ्नो सगुण-निर्गुण ब्रह्मको विवेक तपाईंलाई लागोस्। हामी कृष्ण-प्रेममै तन्मय रहन्छौं, त्यसैकारण उहाँले हामीलाई प्रत्यक्ष दर्शन दिइरहनुहुन्छ। तपाईंको त्यस निर्गुण ब्रह्मको आराधनाका निमित्त हामीले मन, चित्त कहाँबाट ल्याऊँ? हाम्रो जो चित्त थियो त्यो कृष्णले चोरेर लगिदिनुभो।'

**चित्त चैन नहीं, चित चोर चुरायो है।**

उद्धवजी, भगवान्ले कुनै दस-बीस मन बनाउनुभएको छैन र जुन एक थियो, त्यो श्यामसुन्दरले उड़ाएर लगिहाल्नुभो। अब तपाईंको निर्गुण ब्रह्मको उपासना कुन मनले गरौं?

**ऊधो मन न भये दसबीस।**
**एक हुतो सो गयो श्यामसँग को आराधै ईश॥**
**इन्द्रिय शिथिल भइ केशव विनु ज्यों देही विन शीश।**
**आसा लागि रहित तन स्वासा, जीवहीं कोटि बरीस॥**

तुमतौं सखा श्याम सुन्दरको, सकल जोग के ईश।
सूर हमारे नन्दनन्दन विनु और नहीं जगदीश॥

उद्धवजी, ती नन्दनन्दनका सिवाय आफ्नो कुनै अन्य ईश्वर छैन। उहाँ मात्र हाम्रो सर्वस्व हुनुहुन्छ।

उद्धवजी, ती कृष्णको कुरा छोड़िदिऊँ। ती कपटी, काला कृष्णको मित्रता हामीलाई चाहिँदैन। उहाँले हाम्रो कलेजो खुर्किदिएको छ।

भक्तकवि दयाराम भन्नुहुन्छ—

कालजुं कोर्युं ते कोने कहिए जी रे—
वैरी जो होय तो बढ़तां रे फावीये, प्राणथी प्यारो येने लहीए.....
सोडनो घाव मार्यो स्नेही शाम लिये, किया राजने रावे जइये जी रे.....
कल न पड़े काँई पेर न सूझे, रात-दिवस घेलाँ रहीए जी रे.....
कोइ वस्तुमाँ क्षण चित्त न चोटें, अलवेलो आवी बैठी हैये जी रे.....
दयाना प्रीतम जीनेजए येटलु तो कहेजो, क्यां सुधी दुःख सहीये जी रे.....

श्यामले आफ्ना हृदयमा घाउ पार्नुभएको छ र पनि उहाँले बिर्सनु, उहाँले उपेक्षा गर्नु हाम्रा निमित्त अशक्य छ।

दुस्त्यजस्तत्कथार्थः।

उद्धव, अरू हामी के भनौं? सबैभन्दा पहिले श्रीकृष्णको दर्शन हामीले नन्दमहोत्सवका दिन गरेका थियौं र त्यसवेलादेखि उहाँले यस्तो जादू गरिदिनुभयो हामी उहाँकै भएका छौं।

उद्धवजी, अब यस हृदयमा अरू कसैका निमित्त स्थान छँदै छैन। हिँड्दा, डुल्दा, ब्युँझिँदा-सुत्दा, विचारमा, सपनामा तिनै श्यामकै मूर्ति हृदयमा समावेश भइरहेछ।

नाहिं न रह्यो हिय मे ठौर।
नन्दनन्दन अछत कैसे आनिये उर और॥
चलत चितवत दिवस जागत, स्वप्न सोवत रात।
हृदयतें वह श्याम मूरति, छिण न इत उत जात॥
श्याम गात सरोज आनत, ललित गति मृदु हास।
सूर ऐसे रूप कारन, मरत लोचन प्यास॥

उद्धवजी, कृष्णले हामीलाई रासलीलाको महानन्दको अनुभव गराउनु भयो र अहिले बिर्सिदिनुभयो। यस्ता निष्ठुर किन भइदिनुभयो उहाँ?

उद्धवजी— 'होइन, होइन। यस्तो हुनुहुन्न। मेरा स्वामी तपाईं सबैलाई धेरै संझिरहनुहुन्छ।'

गोपिनीहरू—'उद्धवजी, तपाईंलाई यदि श्रीकृष्णको मूल स्वरूपको ज्ञान भएको भए यहाँ आउनुहुन्नथ्यो। तपाईंलाई ब्रह्मज्ञानको कुराले अल्मल्याइदिएको छ। जसले उहाँको असली रूपको दर्शन गर्न पाएको छ, उसले उहाँलाई कहिल्यै छोड्न सक्दैन। तपाईंले उहाँलाई छोड़ेर आउनुभयो। त्यसकारण लाग्दछ तपाईंले उहाँलाई चिनेको रहेनछ।'

हे उद्धव ! तपाईंले कस्तो सन्देश लिएर आउनुभो ? यस अनाथ व्रजलाई उहाँले कहिले सनाथ गर्नुहुनेछ ?

गोपिनीहरू बहुलाएर प्रलाप गर्न थाले। वृक्षहरूमा श्रीकृष्णको रूप हेरेर वृक्षहरूलाई आलिङ्गन गर्न लागे। यी भए मेरा श्रीकृष्ण।

अब उद्धवजी गहिरो सोचमा डुब्न लागिरहेछन्। यी गोपिनीहरू, यी नन्द-यशोदा झोलुङ्गेमा, घरमा, आँगनमा, वृक्षहरूमा, जलमा, पृथ्वीका कण-कणमा श्रीकृष्ण-ब्रह्मको अस्तित्व अनुभव गरिरहेछन्। यी अनपढ़ गाउँले भएर पनि ब्रह्मको सर्वव्यापकताको अनुभव गरिरहेछन्। यता एउटा म छु जसले वर्षौंदेखि व्यापक ब्रह्म वेदान्तको रटनाचिन्तना गर्छु, तैपनि उनको दर्शन र अनुभव पाइरहेको छैन। मेरो शुष्क ज्ञान निष्फल भयो। मेरो ज्ञान पाण्डित्याईं निरर्थक भयो।

म बुद्धि लड़ाउँदै रहें, वेदान्तका सिद्धान्तहरूमा अल्झिँदै रहें र ब्रह्मको अनुभव गर्न पाइनँ।

ज्ञानार्जन एक कुरा हो, ज्ञानानुभव दोस्रो। ज्ञानार्जनको महत्त्व भएर पनि ज्ञानानुभवको महत्त्व ज्यादा छ।

सखीहरूले उद्धवजीलाई राधिकाजीको दर्शन गराउन लिएर गए। सखीहरूका मण्डलीमा विराजमान श्री राधाजीको शोभा अवर्णनीय छ। नौ वर्षको निर्दोष वय, साधारण शृङ्गार, मुखमा दिव्य तेजको आभा, सात्त्विकता र प्रेमको मूर्ति, जगत्का आनन्ददाता श्रीकृष्णकी आनन्ददायिनी श्री राधिकाजीलाई उद्धवजीले साष्टाङ्ग प्रणाम गर्नुभयो।

तर राधिकाजीको शरीर श्रकृष्णको विरहका कारणले सुकेको काँड़ाजस्तो भइगएको थियो। मन व्याकुल र व्यथित थियो। कपाल रुखो र छरिएको थियो। चन्द्रमुख शुष्क भइगएको थियो। मुखबाट वेदना भरिएको सुस्केरा निस्किरहेको थियो र आँखाबाट अश्रुधारा बगिरहेको थियो। यस प्रकार दुःखवल्लरी-जस्ती देखिएकी थिइन्।

सुखकर काँटा हुआ तन, था विकल बेहाल मन।
बाल बिखरे शुष्क थे, मुरझा हुआ था विधु-बदन॥
मुखसे निकलती आह थी, थे आँख आँसू से भरी।
वसन अस्त-व्यस्त थे, थी दुःखलता पूरी हरी॥

श्री राधाजीले उद्धवजीलाई सोध्न लाग्नुभयो—'तपाईं कुनचाहिँ श्रीकृष्णको संदेश लिएर आउनुभो ? मेरा श्रीकृष्ण यहीं हुनुहुन्छ। म वियोगिनी होइन। अन्तरकी संयोगिता राधा श्रीकृष्णको चिन्तनमा लीन भइन्।'

उद्धवजीले फेरि भने—'म मथुराबाट आएको हुँ। श्रीकृष्ण यहाँ आउनेवाला हुनुहुन्छ।'

श्री राधाजी—'के तपाईंले मेरा स्वामीको संदेश लिएर आउनुभएको हो ? तर त्यस संदेशले मलाई कत्ति पनि शान्ति हुँदैन। विरहिणीको दुःखलाई कसले बुझ्न सक्छ ?' रामबाण वाग्यां होय ते जाणे।' मलाई शान्ति दिनसक्ने कुनै शास्त्र, मन्त्र या ज्ञान जगत्‌मा छैन। म प्रतिक्षण श्रीकृष्णको भजन, ध्यान र दर्शन गरिरहिछु।'

राधिकाजीको काँतर दशा देखेर सबै गोपिनीहरू वृक्ष-वेलीहरू, फूल-कलीहरू, पशुपक्षी रुन थाले। राधाजीको दिव्य प्रेमले उद्धवजीलाई रुवाइदियो 'म यी राधिकालाई के उपदेश दिउँला ?'

'श्रीराधाजीको मुखकमलको वासनाले एउटा भ्रमर आकर्षित भई घुम्न लाग्यो। राधिकाजी उसलाई पन्छाउन थालिन्। तँ कप्टी छस्, काला कृष्णको कप्टी बन्धु होस्, मेरा नजिक नआ।' उद्धवजीले राधिकाजीलाई फेरि प्रणाम गरे।

सतचालीसौं अध्यायको बाह्रदेखि एक्काईसौं श्लोकसम्मलाई भ्रमर-गीत भन्दछन्। भ्रमरगीतमा राधिकाजीले भ्रमरलाई दोष दिन्छिन् तर उनका लक्ष्य हुन् उद्धवजी र साथसाथै कृष्णलाई पनि सुनाइएको छ। भ्रमरगीत एक वचनमा छ र वेणुगीत, युगलगीत आदि बहुवचनमा छन्।

उद्धवजी भन्छन्—'श्रीकृष्णलाई कप्टी नभन्नुस्। उहाँ दया र प्रेमको सागर हुनुहुन्छ। उहाँले तपाईंहरू कसैलाई पनि बिर्सनुभएको छैन। सबैलाई बारम्बार संझनु भएको छ।'

राधाजी—'उद्धव, तपाईंले उहाँलाई राम्ररी चिन्न पाएको रहेनछ। यदि उहाँको मूल स्वरूपको ज्ञान र अनुभव भएको भए उहाँलाई छोड्नु हुन्नथ्यो। तपाईंलाई ज्ञान र शास्त्रका ठूला-ठूला कुरा गरेर उहाँले छलिदिनुभएको छ। तपाईंको शुद्ध ज्ञानबाट यस शुद्ध प्रेमको भूमिलाई के लिनु-दिनु छ ? योग-चर्चा यहाँ गर्ने होइन। प्रेम राज्यमा एउटै प्रियतमको शासन हुन्छ। हाम्रो ज्ञान, शास्त्र, कर्म, धर्म सबै कुरा श्रीकृष्ण हुनुहुन्छ। हाम्रो साससम्म श्रीकृष्णमय छ। त्यसकारण तपाईंको ज्ञानलाई हामी कहाँ ठाउँ दिऊँ ? यस प्रेमको भूमिमा तपाईं प्रेमको कुरा गर्न सक्नुहुन्छ, शुष्क ज्ञानको होइन।'

उद्धवजी—'मैले मथुरावासी श्रीकृष्णको सन्देश लिएर आएको हुँ। उहाँले तपाईंहरूलाई बिर्सनु भएको छैन। तपाईंहरूलाई र तपाईंको प्रेमलाई बारम्बार संझिरहनु भएको छ।'

राधाजी—'उद्धवजी, तपाईं यो के भन्नुहुन्छ ? भगवान् सर्वव्यापी हुनुहुन्छ तैपनि तपाईं उहाँलाई केवल मथुरावासी भन्नुहुन्छ। षड्शास्त्रको तपाईंले अभ्यास गरेको छ, तर तपाईं कोरा मात्र हुनुहुन्छ। शास्त्रमा डुब्नुभो तर मोती हात परेन।'

उद्धवजी, मेरा कृष्ण केवल मथुरामा मात्र हुनुहुन्न, जहाँ पनि हुनुहुन्छ। मलाई चारैतर्फ उहाँ मात्र देखिनुहुन्छ, श्रीकृष्ण यहाँका कण-कणमा हुनुहुन्छ, हाम्रा मनमा हुनुहुन्छ, हाम्रा हृदयमा हुनुहुन्छ। हाम्रा रौं-रौंमा बस्नुभएको छ। यी कप्टी कहिले अगाडि आउनुहुन्छ, फेरि लुकिहाल्नुहुन्छ। तपाईंले मात्र दुइ-चार महीनादेखि सेवा गरेको हो। म तर जन्म-जन्मान्तरदेखि उहाँकी दासी हुँ। तपाईंले उहाँको विषयमा के जान्नुहुन्छ ? कृष्ण स्वार्थी हुनाले आफ्नो रामावतारमा सुग्रीवको पक्ष लिनुभएको थियो। कपटी हुनाले हामीलाई छोड़ेर जानु भयो।

तपाईंले मलाई बारम्बार बन्दना किन गरेको ? यहाँ किन आउनु भो ? तपाईंलाई आफ्नो कृष्णले पठाएको हो भने हामी तपाईंको स्वागत गर्दछौं तर हामी अनपढ़लाई तपाईंको शास्त्र ज्ञानसँग के वास्ता ?

उद्धवजीले मानिलिनुभयो उनका आफ्नै शब्द गोपिनीहरू फर्काइरहेछन्। उनले कृष्णसँग गोपिनीहरूलाई अनपढ़ भनेका थिए।

उद्धवजी—'मलाई क्षमा गर्नुहोस् राधिकाजी, मैले तपाईंको अपमान गरेर अपराध गरेको थिएँ। त्यसबेला मै अज्ञानी थिएँ। राधाकृष्ण मिलन अभिन्न हो। यो आज मैले प्रत्यक्ष देखें।'

## विना राधे कृष्ण आधे।

राधाजी—उद्धवजी, म र कृष्ण अभिन्न हौं। तपाईं के चाहनुहुन्छ ? हाम्रा अतिथि भएको नाताले तपाईंको इच्छा पूर्ण गर्ने हाम्रो कर्तव्य हो।

उद्धवजी—'मेरो बुद्धि ज्ञानको अभिमानले गर्दा कुण्ठित, कठोर भएको छ। ज्ञानले मलाई जड़ र शुष्क बनाइदिएको छ। मलाई तपाईंले प्रेमलक्षणा भक्तिको दान गर्नुहोस्।'

राधाजीले उद्धवको इच्छा पूर्ण गरिदिइन्। उनलाई प्रेमलक्षणा भक्तिको ज्ञान प्राप्त भयो।

गोपिनीहरू भित्र र बाहिर कृष्णको अस्तित्वको अनुभव गरिरहेछन्। राधाजीले बाँसुरी बजाइन् तब 'राधे गोविन्द राधे गोविन्द' को सुरिलो तान बग्न थाल्यो। गोपिनीहरू पनि कृष्णकीर्तनमा लीन भए।

गोपिनीहरूको भावविह्वलतालाई देखेर कृष्ण पनि मथुराबाट दगुरेर आइपुग्नुभयो। सखीहरूका मण्डलीमा राधिकाजीका साथ राज गर्नुभयो। गोपिनीहरू र उद्धवजीले राधाकृष्णको

मनोहर स्वरूपको दर्शन गरे। उनलाई अहिले यो पनि ज्ञान छैन ती को हुन्, कहाँ छन्, कहाँबाट किन आएका हुन् ?

उद्धवजीको ज्ञानाभिमान निर्मूल भयो। उनी दुइ-चार दिनलाई गोकुल गएका थिए तर ६ महीना बितिसक्यो। उनलाई विश्वास भयो कृष्ण गोपिनीहरूबाट टाढ़ा पनि छैनन् र भिन्न पनि छैनन्। जहिले पनि गोपिनीहरू कृष्णकीर्तन गर्छन्, उहाँ मथुराबाट आइहाल्नुहुन्छ।

'उद्धवजी, एउटा प्रसंग सुनाऊँ ? एकपटक कृष्ण आफ्ना मित्रहरूका साथ आँखमिचौली खेलिरहेका थिए। श्रीदामा खोजिरहेका थिए। पहिले कृष्ण यस कुण्डमा लुके र फेरि भाग्दै मेरो घरमा आएर भन्न लागे, 'मलाई कतै लुकाइदेऊ नत्र श्रीदामाले मलाई घोड़ा बनाउने भयो। मैले उनलाई आफ्नो काखमा राखेर आँचलले छोपिदिएँ। अब अहिले जहिले पनि सुत्न जान्छु तब लाग्दछ कृष्ण मेरो काखमा लुकिराखेका छन् र म बहुलाई जस्ती हुन्छु।'

भगवान्को लीलाकथा सुन्दा उद्धवजीका आँखाबाट आँसु छचल्किन्छन्। 'यी गोपिनीहरू धन्य छन् जो प्रतिक्षण ब्रह्मको अनुभव गर्न पाउँछन्।'

कृष्ण गोपिनीहरूसँग भन्नुहुन्छ—'गोलोकधाममा मेरो नित्य सम्बन्ध छ। हामी वियोगी हुन सक्दैनौं।' ज्ञानदृष्टिबाट हेर्‍यौ भने म यहाँ छु सर्वत्र छु, तिमीसँग पनि छु। मैले विरहको दान यसका निमित्त तिमीलाई दिएको छु, तिमी सदा मेरो स्वरूपको ध्यान र स्मरण गर्दै रहू। मेरो दूरत्वले तिमीलाई मेरो ध्यान गराइरहेछ।

विरहावस्थामा चित्त प्रियपात्रमा एकाग्र हुन जान्छ र उसैको ध्यान स्मरण गर्दै रहन्छ, विरहावस्थामा प्रियपात्रको सतत् सान्निध्य अनुभव हुन्छ।

मेरो तिमीहरू अविरल ध्यान गर्दै रहू भनेर मैले तिमीलाई विरह दिएको छु।

संयोगावस्थामा चक्षुदर्शन हुन्छ, वियोगावस्थामा मनोदर्शन। वियोग एक विशिष्ट प्रकारको योग हो। पति कहीं बाहिर गएमा पत्नी बड़ो लगनले उसको ध्यान गर्दै रहन्छे।

गोपिनीहरूलाई विशिष्टयोगको दान गर्नका निमित्त मात्र भगवान्ले वियोग दिनुभयो।

'हामी छुट्टिनै सक्दैनौं। म तिम्रो समीप छु। तिमीले मेरो स्वरूपलाई स्मरण गर्दै रहनू। तिमीहरू गोलोकका नित्यसिद्धा गोपिनीहरू हौ।'

गोपिनीहरूलाई पनि उद्धवका साथ बस्नाले ज्ञानलाभ भयो। उनको भक्ति ज्ञानका कारण दिव्य बन्यो। विरहावस्थामा उनीहरूले मात्र लागे श्रीकृष्ण तत्त्वतः उनका नजिकै हुनुहुन्छ।

प्रेमलक्षणा भक्ति पाँचौं पुरुषार्थ हो। भक्तिले अभेद सिद्ध गर्छ। ज्ञानले पनि अभेद सिद्ध गर्छ तर ज्ञानको तुलनामा भक्तिमार्ग ज्यादा सरल छ।

प्रभुसँग भन, 'तपाईं मेरा होइन, म तपाईंको हुँ।' समुद्रको तरङ्ग हुन्छ, तरङ्गको समुद्र होइन।

नन्द, यशोदा, राधा तथा अन्य गोपिनीहरूका तीव्र कृष्णप्रेमलाई प्रत्यक्ष देखेर उद्धवजीको ज्ञानाभिमान डढ़ेर खरानी भयो। उनलाई स्पष्टतः ज्ञान भयो प्रेमभक्तिका विना ज्ञान निरर्थक छ, प्रेम ज्ञानभन्दा श्रेष्ठ छ।

गोकुल छोड्ने इच्छै उद्धवजीलाई भइरहेको थिएन। उनी आएका थिए गोपिनीहरूको गुरु बन्न तर उनकै शिष्य बने। अब उनले भगवान्सँग प्रेमलक्षणा भक्ति मात्रै माग्ने विचार गरे।

'जसलाई महान् मुनि पनि पाउन सक्दैनन्, यस्ता भगवान्लाई यी गोपिनीहरूले सहजै पाए। म उनको चरणरजले स्नान गरौं जसद्वारा आगामी जन्ममा मनुष्य हुन नसके पनि वृन्दावनका लता, पशु, पक्षी केही पनि बन्ने लाभ मिल्नसकोस्। यस्तो मात्र भए पनि म कृतार्थ भइहालौंला।'

गोपिनीहरूको सत्सङ्गबाट उद्धवजीलाई ज्ञानोत्तर प्रेमलक्षणा भक्तिको प्रत्यक्ष दर्शन भयो। उनले सबै गोपिनीहरूका चरणरज आफ्नो शिरमा लगाए। सबैलाई वन्दना गरे।

कृष्ण विरही जीवको वर्तन र व्यवहार कस्तो हुनुपर्छ, त्यसको आदर्श यी गोपिनीहरूले जगत्का समक्ष राखिदिएका छन्। धन्य छ ती व्रजवासी नारीहरूलाई !

उद्धवजीले जब मथुरा जाने आज्ञा मागे तब राधाजीले भनिन्, 'उद्धवजी, कृष्णलाई भन्नू उनले छिट्टै यहाँ आएर गोकुललाई सनाथ पारून्।' कृष्णका निमित्त केही भेट पनि उनले दिइन्।

यसै समयमा यशोदा र नन्दजी पनि आइपुगे। उनीहरूले संदेश पठाए—

मनसोवृत्तयो नः स्युः कृष्णपादाम्बुजाश्रयाः।
वाचोऽभिधायिनीर्नाम्नां कायस्तत्प्रह्णादिषु॥
कर्मभिर्भ्राम्यमाणानां यत्र क्वापीश्वरेच्छया।
मंगलाचरितैर्दानैरतिर्नः कृष्णईश्वरे॥

(भा० १०-४७-६६-६७)

उद्धवजी हामी यही चाहन्छौं तर आफ्ना सबै वृत्ति-संकल्पहरू श्रीकृष्णका चरणकमलहरूका आश्रित रहून्। सधैं उनकै सेवामा लागिरहून्। आफ्नो वाणीले उनकै नाउँ उच्चारण गरिरहोस्। आफ्नो शरीरले उनकै सेवा गरिरहोस्। हामीलाई मोक्षको इच्छा छैन। आफ्नो कर्म र प्रभुको इच्छानुसार हामीलाई जुन कुनै योनिमा जन्म पाइयोस्, हामी शुभाचरण, दानधर्म गर्दै रहौं, ईश्वरका प्रति हाम्रो प्रीति उत्तरोत्तर बढ्दै रहोस्।

सन्देश सुनाउँदा-सुनाउँदा नन्द, यशोदा र गोपगोपिनीहरूको हृदय भरिएर आयो।

यी दुवै श्लोकमा समग्र भागवत्को हृदय समावेश भएको छ। विषयका प्रति वैराग्य र कृष्णका प्रति प्रीति गर्ने यी दुइ श्लोक भागवतका आत्मा हुन्।

'उद्धवजी, कृष्णसँग भन्नू मेरो मन सदा-सर्वदा उनमै रमिरहोस्। मेरो मन संसारको कुनै पदार्थतर्फ नलागोस्। मेरो वाणीले कृष्णको जप गरिरहोस् र दृष्टि उनको दर्शनमा।'

यदि प्रारब्ध कर्मानुसार पुनर्जन्म दिनै छ भने पनि कुनै पवित्र वैष्णवको घरमा दिनू जसद्वारा कृष्णकीर्तन सुन्ने लाभ सदा पाइरहोस्। कृष्णकीर्तन सुनेर म कृतार्थ भइरहूँ र सेवामा तन्मय हुने अवसर पाइयोस्।

यशोदाजी भन्न लागिन्—'उद्धवजी, कृष्णलाई भनिदिनु उसलाई इच्छा छ भने यहाँ आउनू। केवल मेरा निमित्त कष्ट गर्नुपर्दैन। यदि उसलाई उहीं सुख सुविस्ता छ भने उहीं बसोस्। हाम्रो वियोगले उसलाई सुख हुन्छ भने उसले मथुराबाट यहाँ आउने कष्ट नगरोस्। हामी यहाँ उसका विरहमा पिल्सिनु र आँसु बगाउनमा पनि सुखै मानौंला। हाम्रो सुखका निमित्त उसलाई कष्ट गर्नुपर्ने कुनै आवश्यकता छैन। ऊ जहाँ पनि रहोस् सुखी रहोस्।' यति भन्दैमा यशोदाजी पनि रुन लागिन्।

यशोदाजीको भक्ति पुष्टिभक्ति हो। पुष्टिभक्त आफ्नो सुखका निमित्त होइन, आफ्नो आराध्यको सुखको मात्र विचार गर्दछ।

राधाजीले भनिन्—उद्धवजी, कृष्णको यो बाँसुरी र कमली पनि लिएर जानू। यिनलाई मैले यहाँ राखेर के गर्नु ? तपाईंले कृष्णलाई दिनू।

उद्धवजी, कृष्ण अब ठूलो राजा हुनुभयो। उहाँलाई म के पठाऊँ ? मैले नौनी-मिश्री तयार गरेर राखेकी छु त्यसलाई तपाईंले मेरा तर्फबाट ख्वाइदिनू तर मेरो नाउँ भने नभन्नू ?

उद्धवजीले सबैलाई धैर्य दिँदै भने—'तपाईंहरू चिन्ता नगर्नुहोस्। म कृष्णलाई छिट्टै लिएर आउने छु।'

उद्धवजीको रथ मथुरातर्फ बढ्न थाल्यो। उनको मन पनि विचारहरूको गहिराइमा गोता मार्न थाल्यो। मैल आजसम्म मानेको थिएँ कृष्ण करुणानिधि, कृपासागर हुन् तर रहेछन् बड़ो कठोर। यी सुधा ब्रजवासीहरूलाई विरहाग्निमा पिल्स्याइरहेछन्। म उनलाई दोष दिनेछु।

उद्धवजी मथुरा आइपुगे। कृष्णकहाँ गए। अन्तर्यामी श्रीकृष्ण जान्नुहुन्छ उद्धवले के भन्न लगिरहेछन्। उहाँले भन्नुभयो—'उद्धव, जब तिमी यहाँ थियौ तब मेरो प्रशंसा गर्थ्यौ। अब गोकुल पुगेर आएपछि गोपिनीहरूको प्रशंसा गर्न थालेका छौ। म निष्ठुर छैन।'

भगवान्ले उद्धवजीको शिरमा बरदहस्त राखिदिनु भयो। उद्धवजी समाधिस्थ भएर हेर्न थाले यो सबै कृष्णलीला मात्र हो, उहाँ मथुरामा पनि हुनुहुन्छ र गोकुलमा पनि। भगवान्ले आफ्नो

सबै गोकुल लीलाको दर्शन गराउनु भयो। एक स्वरूप मथुरामा देखियो तब अर्को गोकुलमा। एक स्वरूप यशोदाको काखमा थियो र दोस्रोले राधाजीका साथ रास रचाइरहेको थियो। उद्धव, मेरी यशोदा माताले प्रेमबन्धनबाट मलाई यसरी बाँधिदिएकी छन् म वृन्दावन छोड्नै सक्दिनँ। भलै म मथुरामा देखिऊँ तर म हुन्छु ती गोपिनीहरूकै नजिक। म गोपिनीहरूबाट अभिन्न छु। राधाकृष्ण एकै हुन्।

उद्धवको गोकुलागमन-प्रसङ्ग ज्ञान र भक्तिको मधुर कलहको चित्रण हो। उद्धवको ज्ञान र गोपिनीहरूको भक्ति—निर्गुण र सगुणको यहाँ समन्वय छ।

भगवान्को गोपी-प्रेमलीलाको कथा दशम स्कन्धको अठ्चालीसौं अध्यायमा समाप्त हुन्छ। भगवान्को राजसलीलाको आरम्भ हुन थालेको छ।

राजसभक्तहरूको मनको निरोधका निमित्त राजसलीलाको कथा हो।

कृष्ण कथाले सबै प्रकारका जीवहरूलाई आनन्द दिन्छ। कृष्ण सबै जीवलाई आफ्नातर्फ आकर्षित गरेर परमानन्दको दान दिनुहुन्छ। कुब्जालाई पनि उहाँले कृतार्थ गर्नुभयो।

भगवान्ले अक्रूरजीको घर आएर उनलाई आज्ञा दिनुभयो—'धृतराष्ट्र पाण्डवहरूलाई लाक्षागृहमा भस्मीभूत पार्न चाहन्छन्। त्यसकारण तिमी धृतराष्ट्रको घरमा दुइ-चार दिन बसेर यो बुझेर आऊ उनी पाण्डवहरूका प्रति कस्तो भावना राख्छन्। तिमी वहाँ प्रत्यक्ष गएर परीक्षा गरिआऊ।'

अक्रूर हस्तिनापुर आएर धृतराष्ट्रसँग दुइ महीनासम्म बसेर उनलाई उपदेश पनि दिए—'हे धृतराष्ट्र, जीव एक्लो जन्म लिन्छ र मर्छ पनि एक्लै। त्यसकारण कुटुम्बका निमित्त पाप गर्नु अत्यन्त अनुचित हो।'

आँखाहरूको अन्धो-अन्धो होइन तर जसको आँखा छ तापनि लोभ, मोह, मद, कामको पट्टीको कारण देख्न सक्दैन उही अन्धो हो। धृतराष्ट्रको आँखा लोभ र मोहको कारण अन्धो भएको थियो। जसको आँखालाई रुपियाँ पैसाले जेलेको छ, उही धृतराष्ट्र हो। धृतराष्ट्र जस्तो लोभी अक्रूर जस्तोको सत्सङ्गबाट पनि सुध्रन पाएन।

मृत्युका समय धन होइन, धर्म र सत्कर्म मात्र साथ जान्छन्। तैपनि विचित्रता हेर मनुष्य विषय सुखहरूका पछि लागिरहन्छ। उसले संसारबाहेक अरू कुनै आनन्द खोज्ने प्रयत्नै गर्दैन।

अक्रूरजीले धृतराष्ट्रलाई सोधे—'तिमी जानी-बुझीकन यो पाप, यो कपट किन गर्छौ ?'

धृतराष्ट्र—'तपाईंको कुरा सत्य हो तर दुर्योधन मनजीक आयो भने मेरा सारा ज्ञान, विचार, विवेक हावा भइहाल्छन्।'

जसले साँचो र योग्य कुरा बुझेर पनि पाप गर्दछ, जानी-जानी पाप गर्दछ, त्यही धृतराष्ट्र हो।

भगवान्‌को पनि अब इच्छा छ कौरवको विनाश होस्।

बीज शुद्ध भएपनि कुसङ्गका कारण जो बिग्रन्छ त्यो शठ हो। जसको बीज दुष्ट छ, त्यो खल हो। शठ सत्सङ्गबाट सुध्रन सक्छ तर खल सुध्रन सक्तैन।

मन्दारमूले वदनाभिरामं बिम्बाधरे पूरितवेणुनादम्।
गोगोपगोपी जनमध्यसंस्थं गोविन्द दामोदर माधवेति॥

जसको मुखारविन्द अतिशय मनोहर छ, जो विम्बसमान अधरहरूमा बाँसुरी राखेर मधुर तान छोड़िरहेछन्, जो कदम्ब वृक्षका तल्तिर गाईहरू, गोपी र गोपिनीहरूको मध्यमा विराजमान छन् यस्ता भगवान्‌को 'हे गोविन्द, हे दामोदर, हे माधव' यस्तो सम्बन्धद्वारा सदा-सर्वदा स्मरण गर्नुपर्छ।

कुञ्चितै कुन्तलैर्भ्राजमाननं
रत्नमौलिं लसत्कुण्डलं गण्डयोः।
हारकेयूरकं कङ्कणप्रोज्ज्वलं
किङ्किणीमञ्जुलं श्यामलं तं भजे॥

छुटी कैद सिंहासन पाया, हरिही तिलक साथ ले आया।
श्याम कृपा सब मंगल साज, उग्रसेन अब यादवराज॥

कृष्णाय वासुदेवाय हरये परमात्मने।
प्रणतक्लेशनाशाय गोविन्दाय नमोनमः॥

प्रणाम गर्नेहरूका दुःखहर्त्ता, श्रीकृष्ण, वासुदेव, हरि, परमात्मा गोविन्दलाई बारम्बार नमस्कार छ।

सबै साधनहरूको फल हो मनशुद्धि। यसका निमित्त भाँतिभाँतिको साधन गर्नु छ। जगत् विकृत भएको छैन, मनको अशुद्धिको कारणले जगत् पनि विकृत लाग्छ, यस जगत्मा ज्ञानी पनि छन् अज्ञानी पनि। ज्ञानीका निमित्त यो जगत् आनन्ददायी छ र अज्ञानीका निमित्त दुःखदायी। ज्ञानीको मन अति शुद्ध हुन्छ र अज्ञानीको पशुसमान जड़।

कामक्रोधादि विचारले मनलाई अशुद्ध पार्छन्। मन निर्विकार, निर्वासनामय भयो भने मात्र शुद्ध हुनेछ। शुद्ध भएको मन निष्काम हुनेछ र तब मात्र ज्ञानको उदय हुनेछ। मन शुद्धिका निमित्त योगीजन ध्यान, धारणा, प्रत्याहार, प्राणायाम आदि गर्छन्, तर कति पटक यस्तो गर्दा पनि मन पूर्णतः शुद्ध हुन पाउँदैन।

जब श्रीकृष्णको दर्शनका निमित्त श्रीकृष्णविरहबाट व्याकुल भएर प्राण छट्पटाउन थाल्छ अनि मन शुद्ध हुन्छ। विरहाग्निमा मनको मलिनता डढ्दछ। साधारण मानिसले मात्र प्रभुविरह सहिलिन्छ तर सन्तहरूका निमित्त भने प्रभुविरह असह्य हुन्छ। उनको दर्शनातुरताले शरीरलाई डढाएर मनलई तन्मय गराइदिन्छ। तब उनीहरूले ईश्वरको अनुभव गर्दछन्।

ईश्वर सर्वत्र हुनुहुन्छ। कृष्णविरहमा डढ़िरहेका व्रजवासी आँसु बगाउन थाल्छन्। उनलाई वृन्दावन श्मशानजस्तो लाग्दछ।

विरहमा जब जीव बेचैन हुन्छ, तब आफ्नो प्रियपात्रको मधुर तस्वीर दृष्टिमा बगेर आउँछ। संयोगको अवस्थामा ऊ प्रिय एउटै देखिन्छ। उता विरहावस्थामा स्थान-स्थानमा कैयौं रूपहरूमा ऊ देखिन्छ। वियोगावस्थामा जहाँ-जहाँ दृष्टि जान्छ, वहाँ-वहाँ आफ्नो प्रियपात्र दृष्टिगोचर हुन्छ।

गोपीप्रेमको कथा उद्धवजीको प्रसङ्गका साथ समाप्त भयो। गोपिनीहरू प्रेमलक्षणा भक्तिका आचार्या हुन्। संसार व्यवहार चलाउँदै गरेर पनि कस्ता प्रकार प्रभुभक्ति गर्न सकिन्छ, त्यो उनीहरूले देखाएका छन्।

भागवतमा प्रत्येक चरित्रको अन्तमा उसको रहस्य पनि लक्षित छ। कंस र कंसका रानीहरू अस्ति र प्राप्तिको कुरा हामीले देखिहाल्यौं। नीति-अनीतिबाट कुनै प्रकारको चाल चलेर धन कमाउने व्यक्ति कंस हो। जबदेखि मानिसहरूले धनलाई मात्र सबै सुखहरूको आधार मानेका छन् र बैङ्कब्यालेन्सको चिन्तामा डुबेजस्ता भएका छन्, त्यस वेलादेखि पाप बढ्दै गइरहेछ, कंस पनि बढ्दै गइरहेछन्। पैसाले जुनसुकै सुख दिन सकोस्, शान्ति दिन सक्दैन।

दशम स्कन्धको उत्तरार्द्ध पचासौं अध्यायमा जरासन्धका आक्रमणको कथा छ।

जब तिमी पचास वर्षका हुनेछौ, जरासन्ध-( काल ) तिम्रो मथुरा नगरी शरीरमा आक्रमण गर्नेछ। जरासन्ध वृद्धावस्था हो। हाम्रो उत्तरावस्था भनेको जरासन्ध हो जो शरीरका कैयौं अङ्गहरूमा आक्रमण गरिदिन्छ।

पचास वर्ष पुगेपछि जरासन्ध आउँछ। जीवनको पूर्वार्द्ध समाप्त भयो र अब उत्तरार्द्ध आएको छ। वृद्धावस्था आरम्भ भइरहेछ। जरासन्धको आगमनपछि मथुराको किल्ला भत्कन थाल्छ। आँखाहरूका, कानहरूका, हात-गोड़ाको शक्ति क्षीण हुँदै जान्छ।

चालीसौं वर्ष प्रारम्भ भएपछि प्रवृत्तिमा कमी गर्दै लानुपर्छ र प्रभु सेवाको समय बढ़ाउँदै लानुपर्छ।

श्रीकृष्णले जरासन्धलाई सत्र पटक हराउनुभयो तब उसले अठारौं पटकमा काल यवनलाई सँगै लिएर आयो। उसले पहिले काललाई पठायो।

जब जरासन्ध ( वृद्धावस्था ) आफ्ना साथ कालयवन ( काल )-लाई पनि लिएर आउँछ तब बाँच्न सजिलो छैन। जरासन्ध र कालयवन एकैपटक आइलागेपछि श्रीकृष्णलाई मथुरा छोड़ेर द्वारिका जानुपर्‍यो।

द्वारिका अर्थात् ब्रह्मविद्या। द्वारिका ब्रह्मधस्या सा ब्रह्मविद्या। अर्थात् श्रीकृष्णले ब्रह्मविद्याको आश्रय लिनुभयो।

मथुरा ( मानव काया ) छोड़ेर ब्रह्मविद्याको आश्रय भगवान्लाई पनि लिनुपर्‍यो।

जब वृद्धावस्थाले आफ्नासाथ काललाई पनि लिएर आउँछ तब द्वारिका-( ब्रह्मविद्या )-को आश्रय लिइदेऊ।

ब्रह्मविद्या—( द्वारिका )-को द्वार काल र जरासन्धका निमित्त खुल्न सक्दैन।

ब्रह्मनिष्ठलाई कामभोग, काल या वृद्धावस्थाले सताउन सक्दैन।

वृद्धावस्थामा बूढ़ो सत्र पटक बिरामी भएर बाँच्दछ तर अठारौं पटक भने कालले उसलाई छोड्दैन।

जरासन्धको त्रास अर्थात् जन्ममृत्युको त्रास। जन्म लिएको छ भने जरा र मृत्युको व्यवस्था सहनै पर्छ।

नरक के हो ?

शङ्करस्वामी भन्नुहुन्छ—'यो शरीर नरकवास हो। जन्म धारण गर्नु नरकवास हुनु हो।' कुनै पनि समयमा गर्भवास नगर्नुपरोस् यस्तो प्रयत्न गर।

भगवान्को प्रेरणाको कारण केही महापुरुष भगवान्का कामहरूका निमित्त जन्म लिन्छन् त्यो उत्तम हो। तर वासनाहरूका बन्धनहरूको कारण जन्म लिनु नरकवास हो।

जरासन्ध र कालयवनको धक्का खाँदै मथुरा शरीर छोड्नुको अपेक्षा संझीबुझीकन छोड्नु बहुतै असल हो। प्रकृतिले हामीलाई छोड़िदिनुभन्दा अघिबाटै हामीले उसलाई किन नछोड़िदिने ?

आफ्नो पति कंसको मृत्यु भइगयो तब अस्ति र प्राप्ति आफ्ना पिता जरासन्धको घर गए। जरासन्धले कंसहत्याको सम्पूर्ण विवरण थाहा पायो र उसले मथुरामा आक्रमण गऱ्यो। उसको सत्रह आक्रमणलाई श्रीकृष्ण र बलरामले भगाए। जब ऊ अट्ठारौं पटक लड्नका निमित्त आयो र आफ्ना साथ कालयवनलाई पनि ल्यायो तब कृष्णले मथुरात्यागको निश्चय गर्नुभयो। अब म आनर्त देश ( वर्तमान ओखा प्रदेश )-मा समुद्र किनारमा शान्तिसङ्ग बस्नेछु।

भगवान्ले विश्वकर्मालाई द्वारिका नगरीको निर्माणको आदेश दिनुभयो। ठूला-ठूला राजप्रसादको निर्माण भयो। भन्दछन् यी महल यति विशाल थिए मानिसहरूलाई ढोका खोज्नुपर्थ्यो। द्वार कहाँ छ यस्तो पटक-पटक सोधिनाकै कारणले यस नगरीको नाउँ 'द्वारिका' रह्यो। 'का' अर्थात् ब्रह्म, उपनिषद्का अनुसार 'क' अक्षर ब्रह्मसूचक हो। जहाँ प्रत्येक द्वारमा परमात्माको वास छ, त्यो नगरी द्वारिका हो।

शरीररूपी नगरीका इन्द्रियरूपी द्वारहरूमा परमात्मालाई स्थान दियौ भने जरासन्ध र कालयवनले तिमीलाई सताउन सक्ने छैन। द्वारिकामा यी दुवै छिर्नै सक्दैनन्। प्रत्येक इन्द्रियबाट भक्ति गर्ने जीवले कालयवनमाथि विजय पाउँदछ।

यदि जरासन्ध तिम्रो पछि लागेको छ भने, प्रवर्षणमा निवास गर। प्रवर्षण पर्वत अर्थात् जहाँ ज्ञान र भक्तिको मूसलधारे वर्षा भइरहेछ त्यो स्थान। जहाँ कथा श्रवणको लाभ होस्, भक्ति रसको धारा बगिरहोस्, वहाँ जाऊ। एकान्नब्बे वर्षमा प्रवर्षण पर्वतमा गएर बस। त्यहाँ जरासन्धले सताउन पाउँदैन। श्रीकृष्ण पनि जरासन्धको त्रासबाट छुट्कारा पाउन प्रवर्षण पर्वतमा जानुभएको थियो।

एकाउन्न-बाउन्न वर्षको उमेर हुनेबित्तिकै गृहस्थाश्रमका निमित्त पात्र हुँदैनौ। तिमीले वनमा जाने अनुमति पायौ अर्थात् घरको आसक्ति अब छोड्नु छ। विलासीहरूका बीचमा बसेर विरक्त जीवन बिताउनु सजिलो छैन। जहाँ भक्ति र ज्ञानको सतत वर्षा भइरहेछ, त्यस्तो पवित्र भूमिमा बसेर मात्र तिमी जरासन्धको लखेटाइबाट बाँच्न सकौला। भोगभूमिमा भक्ति ठीक हुन पाउँदैन। शहरलाई छोड़ेर गङ्गा जस्तो पवित्र नदीका किनारमा बसेर भक्ति गर।

आज नगरहरूमा बड़ो भीड़ भएको छ। फेटा ब्राह्मणहरूका शिरबाट उड़ेर घरहरूका माथि पुगेको छ। यदि यी बूढ़ाहरूले शहर छोड़ेर नदीहरूका किनारामा गएर बसे भने शहरमा भीड़ अलि कम हुने थियो र तिनीहरूले वहाँ भक्ति पनि राम्ररी गर्ने थिए।

जन्ममृत्युको व्यथा भनेकै जरासन्ध हो। सङ्कल्प गर अब मलाई न पुरुष बन्नु छ न स्त्री। मलाई पुनर्जन्मै लिनु छैन। जरासन्ध, जन्म, जरा, मृत्युको त्रासबाट मुक्त हुनका निमित्त प्रतिदिन एक्काईस हजार जप नियमित रूपले गर्दैरहू। जप विना पाप र वासनाले छोड्ने छैन।

कथा श्रवण पापलाई डढ़ाएर मार्गदर्शन दिन्छ। कथा सुनेर जपको, भगवानको भक्ति, सत्कर्म गर्ने सङ्कल्प गर। कथा श्रवण गर्नाले भगवान्सँग सम्बन्ध जोरिन्छ। त्यसकारण ब्रह्मचर्यपालनको, ध्यान-जपको र सेवा-स्मरणको व्रत लेऊ।

एउटा बनियाँ कथा श्रवण गर्न जान्थ्यो। कथाकारले उसलाई भने, तिमी कथा सुन्छौ त्यसकारण केही राम्रो सङ्कल्प गर। सत्य बोल्ने सङ्कल्प गर। तर बनियाँले भन्यो ऊ व्यापारी हो सत्य मात्र बोल्यो भने सारा कारबार खतम हुनेछ। अनि कथाकारले भने—कसैको निन्दा नगर्ने व्रत लेऊ। बनियाँ भन्न थाल्यो, महाराज, जबसम्म राती दुइ तीन घण्टा कुरा गरेर नबिताऊँ मलाई निन्द्रै आउँदैन। त्यसकारण म यो व्रत पनि लिन सक्दिनँ। महाराज म सङ्कल्प गर्छु प्रतिदिन बिहान आफ्ना सामुन्ने बस्ने कुम्हालेको मुख हेर्ने छु।

देख्यौ, बनियाँको सङ्कल्प। ऊ प्रत्येक दिन बिहान कुम्हालेको 'मुख' हेर्ने गर्थ्यो। एक दिन बिहान अलि छिट्टै उठेर त्यो कुम्हाले गाउँ बाहिर माटो लिन भनेर गयो तब त्यस बनियाँले मुख हेर्न पाएन। ऊ आफ्नो नियम पालन गर्नका निमित्त कुम्हालेलाई खोज्न भनी निस्क्यो।

भाग्यको कुरा—त्यस दिन कुम्हाले माटो खनिरहेको थियो तब सुनले भरिएको एउटा गाग्रो फेला पार्‍यो। ऊ त्यस घड़ालाई झिकिरहेको थियो त्यसै वेलामा बनियाँ आइपुग्यो। बनियाँले कुम्हालेको मुख हेरेर भन्यो, 'हिँड़, मैले देखें।'

उता कुम्हालेले संझ्यो बनियाँले सुनले भरिएको घड़ा देखिसकेको छ। यदि उसले राजाकहाँ भनिदियो भने सबै कुरा जफत हुन्छ। त्यसकारण उसले बनियाँलाई भन्यो—'तिमीले देखेका छौ तर कसैसँग नभन्नु। म तिमीलाई आधा भाग दिनेछु।' बनियाँले सुन पायो।

अब बनियाँ विचार गर्नथाल्यो, मैले यस कुम्हालेको मुखदर्शनको व्रत लिएँ तब लक्ष्मीजीको आगमन भयो। यदि मैले स्वयं प्रभुको दर्शनको व्रत लिएको भए तब कति राम्रो हुन्थ्यो। 'यस्तो मामूली र हाँसोउठ्दो सङ्कल्पद्वारा यस्तो लाभ भयो भने शुभ सङ्कल्प गरेको भए तब कति असल हुने थियो।'

दृढ़ सङ्कल्प सबैले गर्नुपर्छ, एउटा पाप कर्मबाट बाँच्ने, अर्को सत्कर्ममा मात्र लागिरहने।

एक्काईस हजार जप गर्न यस निमित्त भनेको हो जो मनुष्य सामान्यतः दिनमा २१,६०० पटक सास फेर्छ अर्थात् प्रत्येक श्वासोच्छ्वासका साथ भगवान्‌को नाउँ जस्तै रहनु हो। यसो भए मात्र जरासन्धको त्रासबाट बाँच्न सक्नेछौ।

कालयवनको नाश गर्नु थियो तर श्रीकृष्ण उसलाई स्वयं मार्न सक्नु हुन्नथ्यो। कालयवनलाई ब्रह्माजीले वर दिएका थिए यदुवंशको कुनै व्यक्तिले उसलाई मार्न सक्दैन। कालयवन जब श्रीकृष्णको पछि लाग्यो तब उहाँ भाग्दै लुक्दै प्रवर्षण पर्वतको त्यस गुफामा पुग्नुभयो, जहाँ राजा मुचुकुन्द तपश्चर्या गरिरहेका थिए। मुचुकुन्दको आँखा खुल्यो र उनको दृष्टि कालयवनमा पर्नासाथ त्यो डढ़ेर भस्म भयो।

परमात्माको ध्यानमा लागेको व्यक्तिलाई कालले मार्न सक्दैन। उसका सामुन्ने काल उल्टै आफैं मर्दछ।

जब मुचुकुन्दले थाहा पाए श्रीकृष्ण आउनु भएको छ भनेर तब उनी प्रार्थना गर्नथाले।

जीवलाई मनुष्यको शरीर पाइएको छ, तर विषयासक्त हुनाको कारण त्यो भगवान्‌का चरणारविंदको सेवा गर्दैन। मनुष्य कति प्रमादी छ ? जीवनको स्थिति तर सर्पको मुखमा फँसेको भ्यागुतो जस्तो छ। सर्पको मुखमा फँसेको भ्यागुतोले आफ्नो मृत्युबारे सोच्दै-सोच्दैन, उल्टै कुनै जन्तु नजिक आयो भने उसलाई निल्न जिब्रो लामो गर्छ। मनुष्य पनि कालको मुखमा फँसेको छ, तैपनि उसको विषयासक्ति मेटिँदैन।

पचास वर्षको उमेर पूरा हुनासाथ संझ तिमी कालका मुखमा आधा गइसक्यौ। काल तर सदा सावधान रहन्छ, जीव मात्र असावधान रहन्छ, सत्सङ्गका विना ज्ञान प्राप्त हुँदैन।

मुचुकुन्द प्रार्थना गरिरहेछन् 'नाथ ! कृपा गर्नुहोस् मेरो मन सांसारिक जड़ पदार्थहरूका तर्फ नजाओस्। मलाई अनन्य भक्ति दिनुहोस्।'

भगवान् भन्नुहुन्छ—'मुचुकुन्द, यस जन्ममा तिमी अनन्य भक्ति पाउन सक्दैनौ। तिमी युवावस्थामा बड़ो कामी र विलासी थियौ। जो कामका हातहरूबाट पिटिन्छ उसले कालको हातद्वारा पिटिनुपर्छ। तिमीलाई एक जन्म अरू लिनु छ। तिम्रो त्यो जन्म ब्राह्मण योनिमा हुनेछ र त्यस जन्ममा तिमीलाई अनन्य भक्ति प्राप्त हुनेछ।'

मुचुकुन्दले कठोर तपस्या गरेर क्षत्रिय शरीर छुट्यो। अर्को जन्ममा उनी ब्राह्मण भए। द्वापर युगका क्षत्रीय मुचुकुन्द राजा कलियुगमा नरसिंह मेहताको रूप लिएर अवतरित भए। उनी द्वारिकाधीशका अति प्यारा थिए। भगवान्‌ले उनको बाउन्न काम परिपूर्ण गरिदिनु भएको थियो।

मुचुकुन्द राजाको कथा यस तथ्यको द्योतक हो आफ्नो युवावस्था विलासितामा बिताइदिनेलाई मुक्ति मिल्न बड़ो कठिन छ, यस्तालाई अनन्य भक्ति पनि पाईंदैन। त्यसकारण संयम बिस्तार-बिस्तार बढ़ाउँदै लानुपर्छ र भगवद्मय जीवन बिताउनुपर्छ। प्रभुसँग अनन्य भक्तिको

माग गर। जवानीमा पनि सतत् ईश्वरस्मरण गर। युवावस्था पनि प्रभुभजनमा बिताऊ। यसो गर्नाले मात्र यस जीवनमा अनन्य भक्ति प्राप्त हुनेछ।

वृद्धावस्थामा मात्र ईश्वरको सेवा-स्मरण-भजन गर्नाले आगामी जन्म मात्र सुध्रिन सक्नेछ, वर्तमान होइन।

अब अगाडि रुक्मिणीहरणको प्रसङ्ग आउनेछ।

परमात्मा लक्ष्मीका स्वामी हुन्। लक्ष्मीजी जीवमात्रकी माता हुन्। त्यसकारण जीवलाई लक्ष्मीको विवेकपूर्ण उपयोग मात्रको अधिकार छ। उपयोग र उपभोगमा अन्तर छ। इन्द्रियहरूलाई अनिवार्य वस्तु-विषयहरू दिनुलाई उपयोग भन्छन्, तर इन्द्रियहरूलाई विना आवश्यकताको पनि विषय दिँदै रहनु, तिनलाई सानन्द दिँदै गर्नु उपभोग हो, स्वेच्छाचार हो। इन्द्रियहरूका अधीन भएर विषयरूलाई दिँदै रहनु उपभोग हो। धनको दुरुपयोगबाट इहलोक-परलोक दुवै बिग्रन्छ।

सम्पत्ति र शक्तिको सदुपयोग गर्ने देव हो र दुरुपयोग गर्ने दैत्य हो।

भगवान्‌को कथा मानवदेह बनाउनका निमित्त हो।

समय, शक्ति र सम्पत्तिको सदुपयोग गर। मनुष्य आफ्नो धेर समय सम्पत्ति र सन्ततिका पछि खर्च गरिदिन्छ। शरीर या सन्ततिलाई अतिशय कष्ट दिनु वा अतिशय प्यारो गर्नु ठीक छैन। यदि परमात्माले धेरै दिएको छ भने सदुपयोग गर्ने अधिकतर उत्तरदायित्व तिमीमा मात्रै छ। भगवान् अप्रसन्न हुनुभयो भने जीवमात्रको दुर्गति हुनेछ।

शास्त्रहरूले लक्ष्मीका तीन भेद बताएका छन्—लक्ष्मी, महालक्ष्मी र अलक्ष्मी।

( १ ) लक्ष्मी—नीति-अनीति दुवैतर्फबाट प्राप्त धन, साधारण लक्ष्मी हुन्, जसको केही सदुपयोग पनि हुनेछ र केही दुरुपयोग पनि।

( २ ) महालक्ष्मी—धर्मानुसार प्राप्त धन महालक्ष्मी हो। मिहिनेत गरेको भन्दा अलिकति ज्यादा लाभ गर्ने। मुनाफा गर्नु पाप र चोरी हो। जीवनमा धन होइन, धर्म मुख्य हो। धर्म मात्र मृत्युपश्चात् पनि साथ आउँछ।

धर्मानुसार, श्रमपूर्वक, नीतिद्वारा प्राप्त धन महालक्ष्मी हो। यस्तो धन सदा शुभकार्यहरूमा मात्र खर्च गर्नुपर्छ।

( ३ ) अलक्ष्मी—पापाचरण, अनीतिबाट प्राप्त धन अलक्ष्मी हो। यस्तो धन विलासितामा मात्र बगेर जान्छ र जीवनलाई शक्ति दिनुको साटो रुवाउँदै जाने छ।

मृतात्माका साथ धर्मका सिवाय अन्य केही जाँदैन। नीति, धर्म, सदाचारबाट प्राप्त धन मात्र महालक्ष्मी हो जो शान्तिदायी पनि छ।

रुक्मिणीहरण कथाको तात्पर्य महालक्ष्मी नारायणलाई मात्र प्राप्त हुन सक्छिन्, शिशुपाललाई होइन। रुक्मिणीहरण कथाको तात्पर्य यही हो। रुक्मिणी महालक्ष्मी हुन् जो शिशुपाललाई होइन नारायणलाई वरण गर्छिन्।

शिशुको लालन-पालनमा जसको धन र समय लागिरहन्छ, त्यो कामी पुरुष शिशुपाल हो। जो सदा सांसारिक र भौतिक सुखहरूका पछि मात्र दगुरिरहन्छ त्यही शिशुपाल हो।

भगवान्‌ले मथुरामा एउटा पनि बिहे गरेको थिएन। उहाँका सबै विवाह द्वारिकामा भएका थिए।

प्रत्येक इन्द्रियहरूलाई वशमा गरेर, ब्रह्मविद्या प्राप्त गरिसकेपछि मात्र विवाह गर। विनायोगको भोगले आफ्ना साथै रोग ल्याउँछ। तप भएन भने भोगले शरीरलाई रोगी बनाइदिन्छ। सबै इन्द्रियहरू शरीरका द्वार हुन् र कृष्ण सबै इन्द्रियहरूका स्वामी। जितेन्द्रिय भएर विवाह गर, इन्द्रियहरूको सेवक भएर होइन। यसै कारणले गृहस्थाश्रमको पूर्व ब्रह्मचर्याश्रमको आयोजना गरिएको हो।

राजा परीक्षित्—महाराज, म रुक्मिणी विवाहको प्रसङ्ग विस्तारपूर्वक सुन्न चाहन्छु।

शुकदेवजी—राजन्, सुन।

विदर्भ देशका राजा भीष्मकका पाँच पुत्र र एक कन्या थिए। ज्येष्ठ पुत्रको नाउँ रुक्मि थियो र कन्याको नाउँ रुक्मिणी थियो। भागवतमा उनकी माताको नाउँ उल्लेख भएको छैन तर अन्य ग्रन्थका अनुसार उनकी माताको नाउँ शुद्धमति थियो। जहाँ मति शुद्ध हुन्छ, त्यहाँमात्र महालक्ष्मीको आगमन हुन्छ। रुक्मिणी लक्ष्मीकी अवतार थिइन्।

भीष्मक राजाको इच्छा थियो रुक्मिणीको विवाह श्रीकृष्णसँग होस् तर रुक्मि आफ्नी बहिनीको विवाह गोपालका साथ नगराएर राजा शिशुपालका साथ गराउन चाहन्थ्यो। रुक्मिणीले दाज्यूको इच्छा थाहा पाइन् र उनलाई बड़ो दुःख लाग्यो।

रुक्मिले शिशुपाललाई जन्ती लिएर आउनु भनी निम्ता पठायो। कामी शिशुपाल जन्ती सहित आइपुग्यो। गणपति पूजाका समयमा पनि त्यस कामीको ध्यान तर रुक्मिणीका तर्फ लागिरहेको थियो। उसको ध्यान कन्याको सौन्दर्यतर्फ थियो।

जब साधारण जीव विवाह गर्न जान्छ तब कामाधीन भएर जान्छ। प्रभु तर गोपाल अर्थात् गो ( इन्द्रियहरू )लाई नियन्त्रण राख्नेवाला हुनुहुन्छ। भगवान् जितेन्द्रिय भएर विवाह गर्न जानुहुन्छ।

शुद्धमतिको अन्तःपुरमा एकजना सुदेव नामक ब्राह्मण आउने जाने गर्थे। रुक्मिणीले ती ब्राह्मणलाई भनिन्, म श्रीकृष्णसँग विवाह गर्न चाहन्छु। सात श्लोकमा लेखिएको मेरो यो पत्र श्रीकृष्णकहाँ पुऱ्याई दिनुहोस्।

एकनाथ महाराजले रुक्मिणी स्वयंवरमा भाष्य लेखेको छ। उहाँ भन्नुहुन्छ रुक्मिणी-श्रीकृष्णको विवाह शुद्ध जीव र ईश्वरको विवाह हो। भागवत कथाको अन्तिम दिनमा यस विवाहको कथा आउँछ। जसलाई तक्षक नागको दंशले मर्नु छ, के उसले लौकिक विवाहको कुरा सुन्ला ? योगी श्रेष्ठ परमहंस शुकदेवजीले यो कथा भनिरहनुभएको छ। भाषा विवाहको छ तर तात्पर्य जीवको ईश्वरसङ्गको मिलनको छ।

श्रीकृष्ण भन्नुहुन्छ, 'मलाई सांसारिक सुखोपभोगको इच्छा छैन। मलाई कुनै पनि वस्तुको अपेक्षा छैन। म निरपेक्ष छु, म निष्काम छु। रुक्मिणी पनि भन्दछिन् उनलाई पनि विषयसुखको इच्छा र अपेक्षा छैन।'

रुक्मिणीले आफ्नो पत्रमा लेखेकी थिइन्, 'उनी निष्काम छिन्, उनको मनमा कुनै विकार-वासना छैन। सामान्य कन्याले यस्तो कसरी भन्ली ? श्रीकृष्ण र रुक्मिणी दुवै निष्काम, निर्विकार छन्।'

अर्थात् यो प्रसङ्ग लौकिक-विवाहको होइन, आध्यात्मिक मिलनको हो। अलौकिक सिद्धान्तलाई संझाउनका निमित्त लौकिक शब्दावलीको प्रयोग गरिएको छ। भागवतको श्लोकले यही अर्थ लगाएको छ। लगनको पहिले पनि रुक्मिणीले निर्विकारिताको कुरा गरेकी थिइन्। लगनको पछि पनि भगवान् उनीसँग भन्नुहुन्छ, 'मलाई स्त्रीको र वंशवृद्धिको इच्छा छैन।' के कुनै साधारण पुरुष विवाहपछि यस्तो कुरा गर्ला ?

जो व्यक्ति ईश्वरका साथ विवाह गर्न चाहन्छ उसलाई उसका नातागोताले ज्यादै सताउँछन्। रुक्मि पनि आफ्नी बहिनीको विवाह भगवान्सँग गराउनुको विरुद्धमा थियो। तर यदि जीवले सद्गुरुको शरण लियो भने सफल भयो। रुक्मिणीले पनि सुदेवको सहायता लिएकी थिइन्। जो ईश्वरसँग मिल्न चाहन्छ, उसले आफ्नो जीवन सादा राख्नुपर्छ। राजकन्या भएर पनि रुक्मिणी पार्वतीको दर्शन गर्न हिँड़ेर जान्थिन्। शुकदेवजी यो कथा भनिरहनु भएको छ। परीक्षित्को यस अलौकिक विवाह कथामा तन्मयताले जाहेर गर्छ यो विवाह साधारण मनुष्यको थिएन।

यदि रुक्मिणीले लौकिक सुख चाहेकी हुन् भने वहाँ उपस्थित अन्य कुनै राजाका साथ विवाह गर्न सक्थिन्। तर उनले बड़ो विवेकसाथ कृष्णको वरण गरिन्। जीव जब ईश्वरसँग विवाहित हुन्छ तब कृतार्थ हुन्छ। रुक्मिणी-श्रीकृष्णको विवाह जीव र ईश्वरको मिलन हो जो सुदेवजस्ता सद्गुरुका कृपाले भयो।

रुक्मिणी भगवान्की आद्याशक्ति हुन्। सन्तले मात्र ब्रह्मसम्बन्ध गराउन सक्छ। कुनै सुयोग्य सद्गुरुको मध्यस्थता विना जीवले ईश्वरसँग भेट्न पाउँदैन।

रुक्मिणीको पत्र लिएर सुदेव द्वारिका आए। भोजनादिबाट निवृत्त भएपछि द्वारिकानाथले सुदेवसँग कुशलमङ्गल सोध्नुभयो। 'तपाईंको दर्शनबाट म कृतार्थ भएँ। के सेवा गरूँ म तपाईंको ?'

सुदेवले भगवान्लाई रुक्मिणीको पत्र दिए र भने—'प्रभु ! यी रुक्मिणी एक सुपात्र कन्या हुन्। उनी सुन्दरी छिन्, सद्गुणी, चतुरी र सुशीला पनि छिन्। यिनका साथ तपाईंको विवाह भयोभने तपाईंको जीवन सुखसन्तोषसाथ बित्ने छ।'

श्रीकृष्णले रुक्मिणीको पत्र पढ्नुभयो। अक्षर र भाषाबाटै मनुष्यको परीक्षा हुन्छ, पत्र विस्तृत नभए पनि, भावार्थ तर पूरा-पूरा हुनैपर्छ त्यसमा। रुक्मिणीले पनि त्यो सानो पत्रमा सात

श्लोकहरूमै गाग्रामा सागर भरेको जस्तो गरिदिइन्। दुवैको सप्तपदी सम्बन्ध छिट्टै जोड़िनुपर्छ, यस्तो सूचित गर्नलाई मात्र सातश्लोक लेखियो। ६ श्लोकहरूमा रुक्मिणीले ऐश्वर्य, यश, श्री, ज्ञान, वैराग्य एकदम भरिदिएकी छिन्। जीव यदि दीन बनेर भगवान्को शरणमा आउँछ तब उसको उपेक्षा उहाँ गर्नुहुन्न, उसलाई उहाँले आफ्नो तुल्याउनुहुन्छ। जीवको धर्म पनि शरणागति लिनु हो।

पत्रमा श्रीकृष्णलाई सुन्दरजस्तो भनेर सम्बोधन गरिएको थियो। यो जगत् होइन, जगत्को स्त्रष्टा सुन्दर हो। संसारमा जे-जति सुन्दरता छ, त्यो सबै श्रीकृष्णका सौन्दर्यको अंशमात्र हो। संसार कार्य हो कृष्ण कारण। सौन्दर्यको कल्पनाभिन्नबाट विकारको पनि जन्म हुन सक्दछ।

सदा यही विचार गर मनुष्यको सुन्दरता ईश्वरको कारणले मात्र हुन्छ। भागवतले सुन्दर दृष्टि दिन्छ। 'अहम्' को दृष्टिलाई बदलिदिन्छ। जगत् जस्तो छ उस्तै रहने छ। प्रश्न बुद्धिको हो। जस्तो बुद्धि उस्तै दृष्टि।

'नाथ, तपाईं अतिशय सुन्दर हुनुहुन्छ। तपाईंको सौन्दर्यका साथ-साथ तपाईंका सद्‌गुणहरूको कथा पनि मैले महात्माहरूबाट सुनेकी छु, यसै कारणले तपाईंसँग विवाह गर्ने मैले निश्चय गरेकी छु। तपाईंका सद्‌गुणहरूले मेरो मन मोहित भएको छ, मेरो चित्त चोरिएको छ, तपाईंको सौन्दर्य र सद्‌गुणहरूको वर्णन सुनेर मेरो मन निर्लज्ज भएको छ।'

बारम्बार श्रीकृष्ण-कथा सुन्नेको पनि मन श्रीकृष्ण हरिलिनुहुन्छ। शुकदेवजीजस्तो निरपेक्ष वक्ता पनि कृष्ण-कथा भन्न खोज्नुहुन्छ। यदि कुनै श्रोता भेटिएन भने उहाँ वृक्षहरूलाई रासपञ्चाध्यायी सुनाउनुहुन्थ्यो।

'नाथ, म कुनै कामी पुरुषसँग विवाह गर्न चाहन्नँ, मैले आफ्नो आत्मालाई तपाईंको चरणमा अर्पित गरिदिएकी छु।'

परमात्माले विचार गर्नुहोला यस्ती निर्लज्ज कन्यासँग कसरी विवाह गर्ने? त्यसकारण रुक्मिणीले अगाड़ि श्लोकमा लेखिन्, 'नाथ, यसमा मेरो आफ्नो कुनै दोष छैन म निर्लज्ज भएकी छु। म त्यसो तर लज्जायुक्त थिएँ तर तपाईंका सद्‌गुणहरूले मात्र मलाई निर्लज्ज बनाइदिएको छ। मेरो निर्लज्जताको दोषी तपाईंकै सद्‌गुण हुन्। तपाईं अन्तर्यामी हुनुहुन्छ। म अरू लेखूँ भने के लेखूँ? मेरो मनोभावनाबाट तपाईं सुपरिचित हुनुहुन्छ।'

रुक्मिणी शिशुपालको नाउँ उल्लेख गर्न चाहन्नथिन् किनभने उनले विचार गरिन् यदि हरण गरेर मलाई विवाह गरेका खण्डमा उहाँले केही पाउने होइन। जुन कन्याले विवाह गरेर आफ्ना साथ केही सम्पत्ति ल्याइन भने ऊसँग विवाह गरेर के लाभ होला? त्यसकारण रुक्मिणीले अगिल्लो श्लोकमा लेखेकी छन्—'उनी आफ्नो निजी सम्पत्ति श्रीकृष्णलाई दिनेछिन्। कुनचाहिँ होला त्यो निजी सम्पत्ति? मैले सधैं नियमित सत्कर्म गरेकी छु। तुलसीको पूजा नगरीकन पानीसम्म खान्नँ।'

आजकल तर नारीहरू तुलसीको पूजा गर्दै गर्दैनन् र यदि कसैले गरे भने पनि चियापान गरेपछि मात्र। संयम र सदाचारका विना जीवन कसरी सुध्रिएला? सदाचारको अर्थ हो शास्त्रसम्मत, धर्मद्वारा आचार, स्वेच्छाचार होइन।

मैले कति व्रत-नियम आदि गरेको छु। मैले गरीबहरूलाई वस्त्र र अन्नदान पनि दिएकी छु। म आफ्नो पुण्य सम्पत्ति साथै लिएर आउनेछु। म आफ्नो अलौकिक सम्पत्ति साथै लिएर आउनेछु। तपाईंले मलाई स्वीकार गर्नुहोस्।

पतिव्रता, पुण्यशाली नारीको पति कहिल्यै दुःखी हुँदैन, सदा सुखी हुन्छ।

आफ्नो सम्पत्तिको चर्चा गरिसकेपछि रुक्मिणीले स्वयंलाई पाउने उपाय पनि बताइन्। 'म प्रतिदिन पार्वतीको पूजा गर्न मन्दिर जाने गर्छु। तपाईंले मलाई वहाँबाट हरेर लैजानुहोस्। मलाई विश्वास छ तपाईंले यस दासीलाई स्वीकार गर्नुभएन भने म तपाईंलाई प्राप्त गर्नका निमित्त हजारौं जन्म लिइरहनेछु। म तपाईं निष्काम प्रभुसँगै विवाह गर्नेछु। अरू कुनै पुरुषका साथ होइन।'

यर्ह्यम्बुजाक्ष नलभेयभवत्प्रसादं
जह्यामसून् व्रतकृशाञ्छतजन्मभिःस्यात्।

चाहे सय जन्मनै किन नलिनुपरोस् म वरण गर्नेछु तपाईंलाई मात्र।

रुक्मिणी जस्ती अटल निश्चयीलाई परमात्मा भेटिनुहुन्छ।

'यदि तपाईंले मलाई स्वीकार गर्नुभएन भने म यस शरीरलाई त्यागिदिनेछु। तपाईंका सिवाय अन्य कोही व्यक्ति पनि मेरो पति हुन सक्दैन।'

रुक्मिणीको पत्र पढ़ेर श्रीकृष्णले प्रसन्न हुँदै भन्नुभयो। 'सुन्दछु उनले मेरा निमित्त अन्न र निद्राको पनि त्याग गरेकी छन् रे। त्यसकारण म उनीसँगै विवाह गर्नेछु, अवश्यै।'

मन र क्रियालाई, मन र वचनलाई एक बनाऊ। त्यस्तो व्यक्ति मात्र भगवान्‌लाई मन पर्छ। उहाँ भन्नुहुन्छ।

मोहिकपटछल छिद्रन भावा।

रुक्मिणी श्रीकृष्णकी आद्याशक्ति हुन्। उनी श्रीकृष्णका सिवाय अरू कसैसँग पनि विवाह गर्न सक्दिनन्।

भगवान्‌ले आफ्नो सारथी दारुकलाई अऱ्हाएर रथ तयार गर्न लाउनुभयो र ब्राह्मण सुदेवलाई वन्दना गरेर गणपतिको स्मरण गर्नुभयो र रथारूढ़ हुनुभयो।

घरबाट बाहिर निस्कँदाखेरि गणपतिका यी शब्दहरूमा स्तुति गऱ्यौ भने कुनै पनि बाधा उपस्थित हुने छैनन्—

सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः।
लम्बोदरश्चविकटो विघ्ननाशो विनायकः॥
धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः।
द्वादशैतानि नामानि यः पठेच्छृणुयादपि॥

भगवान् जगत्लाई यो देखाउनुहुन्छ आफू स्वयं भगवान् भएर पनि मर्यादाको पाल गर्दछु। मर्यादा भङ्ग गर्ने मानिस दुःखी हुन्छ। यदि तिमीलाई बढ़ी सुख-सुविधा प्राप्त छ भने मर्यादाको पालन पनि ज्यादा गर्नुपर्छ।

भगवान्ले पहिले सुदेवलाई रथमाथि चढ़ाउनुभयो। सुपात्र ब्राह्मणलाई सम्मान गर। साधु-सन्तको सम्मान गर्नाले लक्ष्मीजीको सवारी तिम्रो घरमा हुनेछ।

एकै रातमा श्रीकृष्णको रथ विदर्भ नगरी पुग्यो। मानिसहरूलाई प्रभुदर्शनबाट बहुतै आनन्द भयो। सबैले भन्न लागे—'रुक्मिणीका लागि योग्य वर यिनै छन्। दुवै लक्ष्मीनारायणजस्ता शोभायमान हुने भए।'

उता ब्राह्मण हाँस्दै रुक्मिणीकहाँ पुगे। मैले भगवान्लाई लिएर आएको छु। रुक्मिणीले प्रणाम गर्दै सोधिन्, 'म तपाईंको के सेवा गरूँ?' सुदेवले भने, 'मलाई कुनै वस्तुको पनि इच्छा छैन। तपाईंको जय होस्!'

रुक्मिणी भगवानसँग मिलाइदिने ती ब्राह्मणको जन्म-जन्मान्तर ऋणी भइन्।

यता शिशुपाल र जरासन्ध राजाहरूका साथ आइपुगे। उनीहरूले श्रीकृष्ण आगमनको समाचार सुनेर डराएजस्तो गरे। शिशुपालले जरासन्धलाई भन्यो, 'त्यो चोरले कहीं मेरी हुनेवाली पत्नीको चोरी गरिलियो भने?' जरासन्धले उसलाई 'धैर्य गर' भन्दै भन्यो—'हामी यहाँ खानपिउन मात्र आएका होइनौं। समय आयो भने तिम्रा निमित्त लड्छौं पनि।' रुक्मीले पनि भन्यो, मैले यस्तो व्यवस्था गरेको छु मेरी बहिनीका नजिक कुनै मानिस के पक्षीसम्म जान सक्दैन। जब ऊ पार्वतीको मन्दिर जाने छ उसको अगाड़ि-पछाड़ि सोह्र कन्या र मेरा कैयौं पहलवान पनि साथ हुनेछन्। यो कुरा सुनेर शिशुपाललाई केही शान्ति भयो।

उता रुक्मिणीले स्नान श्रृङ्गार पूरा गरी तुलसी र माता-पिताको पूजा गरिन्। माताले भनिन्—तिम्रो विवाह हुने भइरहेछ। त्यसकारण उचित छ तिमी हिंड़ेरै पार्वतीको मन्दिरमा जाऊ। रुक्मिणीले दोस्रो पटक प्रणाम गरिन् तब आमाले कारण सोधिन्। छोरीले आशीर्वाद मागिन्। छोरीलाई थाहा थियो उनी पार्वतीको मन्दिरबाट सोझै द्वारिका जानेवाली छन्, उनलाई घर फर्कनु छैन।

कैयौं राजाहरूले रुक्मिणीजीको दर्शन गरे, आमालाई सिँगारिएकी छोरी हेर्ने इच्छा थियो तर उनले हेर्न पाइनन्।

रुक्मिणी मन्दिरमा पूजा चाहीं पार्वतीको मूर्तिको गरिरहेकी थिइन् तर त्यस मूर्तिमा उनलाई द्वारिकानाथको मात्रै दर्शन भइरहेको थियो। किनभने उनको भक्ति अनन्य थियो। रुक्मिणीले गणपति र पार्वतीको पूजा गरिन् र प्रार्थना गरिन्, 'म सदा तपाईंको पूजा गर्नेछु। मेरो श्रीकृष्णसङ्ग विवाह होस्। यस्तो मिलाइदिनुहोस्।' पार्वतीजीले उनलाई आशीर्वाद दिनुभयो।

रुक्मिणी पूजा गरेर विस्तार-विस्तार मन्दिरबाट तल आइरहेकी बखत कामांध राजागण उनका सौन्दर्यको प्रशंसा गर्न थाले।

माताजीलाई वन्दना गर्नुपर्छ। रुक्मिणीले विचार गरिन् म जीवमात्रकी आमा हुँ। यी आफ्ना बालकहरू मलाई कामभावले हेरिरहेछन्। रुक्मिणीले आफ्नो दृष्टिबाट त्यो तेज प्रकट गरिदिइन् र सबै कामांध राजा मूर्च्छित भए। माताजीलाई जसले कामभावले हेर्छ, त्यसको पतन हुन्यै छ।

प्रभुले दारुकहरूलाई रथ अगाडि बढ़ाउने आज्ञा दिनु भयो। टाढाबाट गरुड़ध्वज देखेर रुक्मिणी प्रसन्न भइन्। प्रभुले उनको हात समातेर आफ्नो रथमा बसाउनुभयो र रथ द्वारिकातर्फ प्रस्थान गर्‍यो।

मूर्च्छित राजाहरूलाई जब होश आयो तब आफ्ना लुगाहरू टकटक्याउँदै उभिए। एउटाले भन्यो, 'मलाई रिँगटा लाग्यो, अर्को भन्थ्यो तेजका मारले लड़ें। उनीहरूलाई जब विश्वास भयो श्रीकृष्णले रुक्मिणीलाई हरेर लगेका छन् तब उनलाई आश्चर्यका साथसाथै आघात पनि भयो। के यति क्षणमै ती सुन्दरीलाई लिएर भाग्यो ? हामी ऊसङ्ग युद्ध गर्छौं—'

माता लक्ष्मीलाई भोगेच्छाका दृष्टिले हेर्नेको पतन हुन्छ।

शिशुपालले रूँलारूँला जस्तो गर्‍यो, 'मेरो नाक काटियो।' जरासन्ध आदिले भने—'नारीको जस्तो विलाप गर्ने घड़ी अहिले छैन। हामी सबैको नाक काटिइसकेको छ। हामीले त्यस गोपालसङ्ग युद्ध गर्नै पर्छ।' शिशुपाल, जरासन्ध, दन्तवक्त्र आदि आफ्ना सेना लिएर श्रीकृष्णका पछि दगुरे।

उता बेलुकासम्म श्रीकृष्ण घर नपुगेकाले बलरामलाई चिन्ता भयो। सोधपुछ गरेपछि उनलाई सबै कुरा थाहा भयो। त्यो पनि कस्तो लाज मान्ने रहेछ मसङ्ग कुरै गरेन ? उनी तुरुन्त सेना लिएर विदर्भ आइपुगेर शिशुपाल, जरासन्ध आदिका सेनालाई तितर-वितर गरिदिए। साथै मद्दत गर्न आएका राजा पनि भागे। शिशुपाल मात्र एक्लै आफ्नो भाग्यलाई धिक्कार्दै बाँकी रह्यो।

शिशुपाल रुँदै बस्यो, लड्न गएन। कामी व्यक्ति डरपोक हुन्छ। उसका नजिक जरासन्ध आयो र भन्न थाल्यो, 'यदि श्रीकृष्ण एक्लै भएको भए म उसलाई हराइदिन्थें तर बलरामलाई हराउन सजिलो छैन। समय हाम्रो विपरीत छ। यस पटक हामी भागौं।'

रुक्मी श्रीकृष्णसँग लड्न आयो तब उहाँले उसलाई एउटा खाँबामा बाँधिदिनु भयो। रुक्मिणीले प्रार्थना गरिन्, 'मेरो दाज्यूलाई नमारिदिनुहोस्।' बलरामले पनि भन्नुभयो—'जे होस्,

अब यो तेरो जेठान भयो, उसलाई मार्नुहुन्न।' उहाँले रुक्मीलाई बन्धनबाट मुक्त गरिदिनुभयो। रुक्मी यसै तर उद्धत थियो, तर बहिनीलाई प्रसन्न गर्नका निमित्त उसले बलरामलाई प्रणाम गऱ्यो। रुक्मिणी आनन्दसाथ विचार गर्न थालिन्—'मेरा जेठाजु कति दयावान् हुनुहुँदो रहेछ। उहाँले मेरो पापी दाइलाई क्षमा गरिदिनुभयो।'

आज तर विवाहपछि भाइ-भाइ एकसाथ रहन सक्दैनन्। यदि मन विशाल गरायौ भने तब झगड़ा हुने छैन। हाम्रो देशको आदर्श संयुक्त कुटुम्बको छ। राम-लक्ष्मणादि तथा पाण्डव पनि एउटै घरमा बस्थे।

कृष्णले उद्धव हस्ते गोकुल पत्र पठाउनुभयो जब नन्दबाबा आउनुहोला अनि विवाह गर्ने। नन्दबाबालाई आनन्द भयो तर उहाँले विचार गर्नुभयो—'ऊ यहाँ आउँदै आउँदैन र फेरि मलाई बोलाइरहेछ। म द्वारिका जान्नँ। उसको विवाहको दिन यहाँ ब्रह्मभोज गरिदिनेछु।'

श्रीकृष्णले यो कुरा सुनेपछि स्वयं गोकुल आउनुभयो। 'आमा, म आइपुगें। मसँग द्वारिका हिँड्नुहोस्। होइन भने तपाईंको कृष्ण अविवाहितै बस्नेछ।' नन्द-यशोदा, गोपिनीहरू तथा अन्य सबै व्रजवासी द्वारिका गए।

श्रीकृष्ण र रुक्मिणीको दर्शन गरेर, भगवान्को स्मरण गर्दै गोपिनीहरूले वहाँ देहोत्सर्ग गरिदिए। गोपिनीहरूको श्री अङ्गको माटोबाट गोपी चन्दन बन्यो। त्यहाँ गोपी सरोवर पनि छ। गोपी चन्दनको महिमा विचित्र छ। वहाँ महाप्रभुजीको बैठक पनि छ। त्यहाँ भगवान्ले भागवत-पाठ गर्नुभएको थियो।

त्यहाँ राजा भीष्मक पनि आए। दुर्वासाको श्रापको कारण कृष्ण रुक्मिणीका साथ द्वारिकामा बस्न सक्नुहुन्नथ्यो र माधवपुरमा विवाहविधि सम्पन्न भयो। ब्रह्माले विवाह विधिको साइत दिए मार्गशीर्ष पञ्चमी। रुक्मिणीलाई मण्डपमा ल्याए। ब्राह्मणसमुदाय स्वस्तिवाचन गरिरहेका थिए।

कस्तूरी तिलकं ललाटपटले वक्षःस्थले कौस्तुभं।
नासाग्रे वरमौक्तिकं करतले वेणुः करे कङ्कणम्॥
सर्वाङ्गे हरिचन्दनं सुललितं कण्ठे च मुक्तावली।
गोपस्त्रीपरिवेष्ठितो विजयते गोपाल चूडामणिः॥

मेरो प्रभुको निधारमा कस्तूरीको तिलक छ, वक्षःस्थलमा कौस्तुभमणि छ। नाकको अग्र भागमा सुन्दर मोतीको बुलाकी छ, हत्केलामा बाँसुरी छ, हातहरूमा कङ्कण छन्, समग्र शरीरमा हरिचन्दनको लेप छ, घाँटीमा मनोहर मोतीको माला छ र गोपिनीहरूद्वारा घेरिएका हुनुहुन्छ।

लक्ष्मीनारायणको दर्शनबाट यादवहरूलाई परमानन्द भयो। रुक्मिणी महालक्ष्मी हुन् र कृष्ण नारायण।

जीव यदि बालक भएर लक्ष्मीलाई नमस्कार गर्छ भने उनले भगवान्को काखमा राखिदिन्छिन्। लक्ष्मीलाई आमाको स्थान दियौ भने सुखी हुनेछौ तर स्वामी बन्ने प्रयास गऱ्यौ भने पतनको खाड़लमा जाकिनुपर्ने छ। लक्ष्मीलाई मातास्वरूप मान्नुमै कल्याण छ। रुक्मिणीकहाँ प्रद्युम्न प्रकट भए। उनले शम्बरासुरको वध गरे र रतिकासाथ द्वारिका आए। शम्बरासुर कल्याणलाई ढाक्नेवाला लौकिक काम हो। प्रद्युम्न अलौकिक काम हो। लौकिक कामलाई अलौकिक कामद्वारा मात्र नष्ट गर्न सकिन्छ।

जगत्को कुनै जीवसँग होइन तर परमात्मासँगै भेट्ने आशा र इच्छा गर, नारायणधाममा जाने इच्छा गर। प्रभुसँग मिलन भएपछि जीवलाई अलौकिक आनन्द हुन्छ। भगवान्सँग भेट गर्ने आतुरी भयो भने लौकिक कामको नाश हुनेछ।

त्यो रति के हो ? भगवान्को कथाका प्रति रुचि भनेको रति हो। यस रतिका साथ पनि विवाह गरेपछि पनि जीव प्रभुमिलनका निमित्त आतुर हुन्छ।

भगवान्ले फेरि सत्यभामा, जाम्बवती, यमुनाजीका अंशबाट उत्पन्न कालिन्दी आदिका साथ पनि विवाह गर्नुभयो। भगवान्का आठ पटरानीहरू थिए।

अष्टधा प्रकृति आठ पटरानीहरू हुन्। ईश्वर यी सबै प्रकृतिहरूका स्वामी हुनुहुन्छ। यी प्रकृतिहरूले परमात्माको सेवा गर्छन्। गीतामा प्रकृतिहरूको वर्णन यस प्रकार गरेको छ—

भूमिरापोऽनलो वायुः खं मनोबुद्धिरेव च।
अहंकारे इतीयं मे भिन्ना प्रकृतिरष्टधा॥

जीव प्रकृतिका अधीनमा छ, ईश्वर प्रकृतिका अधीनमा छैनन्। जीव अष्टधा प्रकृतिहरूका वशमा आइहाल्छ, जबकि ईश्वर उनलाई आफ्ना वशमा गर्नुहुन्छ। प्रकृति अर्थात् स्वभाव। तिमी स्वभावको अधीन हुनुको बदला स्वभावलाई आफ्ना अधीनमा गरिलेऊ।

मानिस स्वभावको अगाड़ि हार्दछ। आफ्नो स्वभावलाई, प्रकृतिलाई वशीभूत गर्ने जीव मात्र सुखी हुन्छ, मुक्त भइहाल्छ।

त्यसो तर प्रकृति र प्राण सँगसँगै जान्छ। तैपनि यदि जप, ध्यान, सेवा, स्मरण, सत्सङ्ग, सत्कर्म गरियो भने, सत्सङ्गको अध्ययन गऱ्यो भने स्वभाव सुध्रन सक्छ। सत्सङ्गको अर्थ हो कृष्णभक्तहरूको, साधुसन्तहरूको र सद्ग्रन्थहरूको सङ्ग।

अक्रूरजी वन्दन-भक्तिका आचार्य हुन्। तर पनि कुसङ्गले उनको बुद्धि विकृत गरिदियो। त्यसकारण उनले सत्राजित्को हत्या गर्नका निमित्त शतधन्वालाई उक्साए।

सत्सङ्ग र भक्ति दुवैलाई एक-दोस्राको आवश्यकता छ। सत्सङ्ग गर्नेले यदि परमात्माको भजन गर्दैन भने उनको भजन निरर्थक हुनेछ। ढुङ्गो नर्मदामा सदा स्नान गर्दै रहन्छ तर पनि ऊ ढुङ्गै

बनिरहन्छ। यसै प्रकार कति मानिस कथा श्रवण गर्छन् तर भक्तिमय नहुनाको कारण उसको जीवन सुध्रन पाउँदैन।

पहिले आफ्नो मनलाई सुधार अनि फेरि जगत्लाई सुधार्न भनी हिँड़।

आफ्नो चरित्रले यदि आफ्नो आत्मालाई सन्तोष मिल्छ भने मान तिम्रो स्वभाव सुध्रियो।

कथा-श्रवण गरेपछि श्रीकृष्णाका प्रति प्रेम नजानु, पापतर्फ घृणा नहुनु, धर्मका तर्फ फर्कन नसक्नुको अर्थ हो तिमीले कथा सुनेकै रहेनछ।

कथा भन्दछ, पापकर्म त्याग गर र प्रभुसँगको प्रेम बढ़ाऊ। कथा सुनेर भगवान्सँग सम्बन्ध बनाइराख। तुलसीविवाहको यही रहस्य हो।

एक अध्यायमा भनिएको छ प्रभुले सोह्र हजार युवतिहरूका साथ विवाह गर्नुभयो। भौमासुरले सोह्र हजार कन्याहरूलाई बन्दी तुल्याइराखेको थियो। यी सोह्र हजार कन्याहरू भनेका वेदका ऋचाहरू हुन्। वेदका तीन काण्ड र लाख मन्त्र छन्।

१. कर्म काण्ड—यसमा अस्सी हजार मन्त्र छन् जो ब्रह्मचारीका निमित्त हुन्।

२. उपासना काण्ड—यसमा सोह्र हजार मन्त्र छन् जो गृहस्थका निमित्त हुन्।

३. ज्ञान काण्ड—यसमा चार हजार मन्त्र छन् जो वानप्रस्थका निमित्त हुन्।

वेदान्तको ज्ञान विरक्तका निमित्त हो, विलासीका निमित्त होइन। विलासीले उपनिषद्को तत्त्वज्ञान बुझ्न सक्तैन।

भागवत तर सबैका निमित्त हुन्।

वेदहरूले ईश्वरका स्वरूपको वर्णन धेरै गरेको छ तर उसलाई बुझ्न सकेनन्। त्यसकारण वेदहरूका ऋचा कन्या बनेर श्रीकृष्णसँग विवाह गर्न भनी आए। वेदहरूका मन्त्र केवल शब्द-रूप होइनन्। प्रत्येक मन्त्र ऋषि हुन्, देव हुन्। वेदमन्त्रका देवले, तपश्चर्या गरेर हारेर पनि ब्रह्म सम्बन्ध गर्न पाएनन्। त्यसकारण उनीहरूले कन्याको रूप लिएर आए, वेदका ऋचाहरूले कन्या बनेर प्रभुसेवा गर्न आए। गृहस्थाश्रम धर्मको वर्णन वेदका सोह्र हजार मन्त्रमा गरिएको छ। यिनलाई श्रीकृष्णका सोह्र हजार रानीहरू भनिएका छन्।

सोह्र हजार कन्याहरूलाई मुक्त गरिइयो तर तिनीहरू सबै भौमासुरको कारागृहमा बन्द थिए। त्यसकारण जगत्का कुनै पुरुष उनीहरूसँग विवाह गर्न तयार भएनन्। ती सबै कन्याहरू श्रीकृष्णका शरणमा आए। भगवान्ले विचार गर्नुभयो—'रामावतारमा मर्यादाको धेरै पालन गरेको थिएँ, अब यस कृष्णावतारमा त्यसो गर्नुपर्ने होइन।' त्यसकारण उहाँले सबै कन्याहरूसँग विवाह गर्नुभयो।

वेदमन्त्रहरूलाई भौमासुरले कारागृहमा राखेको थियो। भौमको अर्थ हो शरीर। शारीरिक सुखमा जो रमेको छ त्यो भौमासुर हो। विलासी जीव भनेकै भौमासुर हो।